“सहकारी अभियानको आगामी कार्यदिशा,
आर्थिक रूपान्तरणका लागि उद्यमशीलता”

# दोलखा बृहत सहकारी सम्मेलन प्रतिवेदन






## दोलखा बृहत सहकारी सम्मेलन आयोजक समिति

बैशाख २०७६


चरिकोट, दोलखा, फोन नं.: ०४९-४२१२००, ४२१६८४
इमेल : dcudolakha@gmail.com, dolakhadu@gmail.com


“दीगो विकास लक्ष्य प्राप्तिका लागि सहकारी”

“सहकारी अभियानको आगामी कार्यदिशा,
आर्थिक रूपान्तरणका लागि उद्यमशीलता”

# दोलखा बृहत सहकारी सम्मेलन प्रतिवेदन







## दोलखा बृहत सहकारी सम्मेलन आयोजक समिति

बैशाख २०७६




# दोलखा बृहत सहकारी सम्मेलन प्रतिवेदन

**सम्पादक:**
बिर्ख क्रान्ति

**कार्यकारी सम्पादक:**
अर्जुन अपवाद

**सल्लाहकार:**
हेमन्त चौलागाई
*सम्मेलन संयोजक*

जिवसराज खडका
*सम्मेलन सह-संयोजक*

कृष्ण प्रसाद दाहाल
*संयोजक*
*आर्थिक व्यवस्थापन उपसमिति*

अनिल श्रेष्ठ
*संयोजक*
*सञ्चार तथा प्रकाशन उप समिति*

**प्रकाशक:**
जिल्ला सहकारी संघ, दोलखा
भीमेश्वर न.पा.-३, चरिकोट, दोलखा
फोन : ०४९-४२१२००
इमेल : dcudolakha@gmail.com

दोलखा जिल्ला बचत तथा ऋण
सहकारी संघ लि.



**डिजाइन तथा मुद्रण:**
एक्सिस प्रिन्टर्स प्रा. लि.
न्यूप्लाजा, काठमाडौं
फोन : ०१-४४३६८६१, ९८५११२३६५४

## सम्पादकीय

नेपालमा सहकारी संस्थाहरूले देशको आर्थिक सामाजिक प्रगतिमा गरेको उत्साहजनक योगदानको जगमा उभिएर आगामी दशकमा नेपाल सरकारले अवलम्बन गरेको **'समृद्ध नेपाल, सुखी नेपाली'** को परिकल्पनालाई यथार्थमा हासिल गर्नका लागि अबको सहकारी अभियान उद्यमशीलता विकासमा केन्द्रित गर्नुपर्ने महसुस गरी दोलखा जिल्लाको सन्दर्भमा सबै सहकारी तथा स्थानीय सरकारबिच बलियो सहकार्य गर्दै अघि बढ्ने कार्यदिशा तय गर्ने सोचका साथ जिल्ला सहकारी संघ लि. दोलखा र दोलखा जिल्ला बचत तथा ऋण सहकारी संघको विशेष पहलमा दोलखा बृहत सहकारी सम्मेलन २०७६ आयोजना गरिएको हो । आगामी अभियानलाई यही कार्यदिशातर्फ केन्द्रित गर्न सम्मेलनले सहकारी अभियानको आगामी कार्यदिशा, आर्थिक रूपान्तरणका लागि उद्यमशीलता को नारा तय गरेको छ ।

आर्थिक रूपान्तरणका लागि उद्यमशीलताको अवधारणामा आयोजना गरिएको यो सम्मेलन विषयवस्तु, उद्देश्य, सहभागिता र व्यवस्थापनको हिसाबले जिल्लामा हालसम्मकै पहिलो मान्न सकिन्छ । तीन सय बढी प्रतिनिधिहरूको सहभागितामा दुई दिनसम्म सञ्चालित सम्मेलनले सहकारी क्षेत्रमा उद्यमशीलतामार्फत आर्थिक रूपान्तरण गर्ने र सुशासनसम्बन्धी आजका ज्वलन्त सवालहरूलाई सम्बोधन गर्न दश बुँदे घोषणापत्र जारी गरेको छ । उक्त घोषणापत्रलाई सहकारी क्षेत्रमा स्थानीय स्तरको एक कोसेढुंगा मानेर निकै वुद्धि, विवेक र प्रतिवद्धताका साथ आर्थिक रूपान्तरणको अभियानमा अघि बढ्नुपर्ने दायित्व र अवसर यो सम्मेलनले सिर्जना गरेको छ ।

इतिहासको स्मरण र भविष्यमा सिकाइका लागि सजिलो होस् भन्ने उद्देश्यले यस प्रतिवेदनमा सम्मेलनको सैद्धान्तिक पक्ष, प्रक्रियावद्ध क्रियाकलापहरू, हरेक मसिना क्रियाकलापसँग सम्बन्धित तथ्यांक, सम्मेलनको अनुभव र सिकाइहरूलाई सकेसम्म सिलसिलावद्ध रूपमा अभिलेख गर्ने प्रयत्न गरिएको छ र आयोजक संस्थाले सम्पन्न गर्न बाँकी प्राथमिकतायुक्त कामहरूको योजना पनि प्रस्तुत गरिएको छ ।

यस प्रतिवेदनले सहकारी अभियानकर्मीहरूका लागि केही जानकारी, केही जिज्ञासा र विकासयात्रामा अघि बढ्न केही केही उत्प्रेरणा दिनसक्ने अपेक्षाका साथै सम्मेलन तथा प्रतिवेदनमा भएका कमी कमजोरीहरूमा क्षमा याचना गर्दछौं ।

अन्तमा, सम्मेलनलाई सफल बनाउन सहयोग गर्नुहुने हरेक व्यक्ति तथा संस्थाहरूलाई सम्मेलन आयोजक समिति हार्दिक आभारका साथ धन्यवाद प्रकाट गर्न चाहन्छ र सहकारीमार्फत समृद्धि प्राप्तिको दीर्घकालीन यात्रामा सबैको निरन्तर सहयोगको अपेक्षा राख्दछ ।

धन्यवाद । जय सहकारी ।

# प्रकाशकीय

जिल्ला सहकारी संघ दोलखाको नेतृत्व र दोलखा जिल्ला बचत तथा ऋण सहकारी संघ लि. को सक्रियतामा जिल्लाका आम सहकारीहरूलाई सहभागी गराई दोलखा बृहत सहकारी सम्मेलन २०७६ सफलतापूर्वक सम्पन्न भएको हामीले महसुस गरेका छौं र यो सफलतामा हामीलाई धेरै खुशी लागेको छ । सम्मेलनले सहकारी अभियानको क्षेत्रमा नयाँ सम्भावना र दायित्वहरू थपेको छ । यो सम्भावनाहरूको खोजी र दायित्वहरू निर्वाहका लागि निरनतर अघि बढ्न जिल्ला सहकारी संघले सार्वजनिक प्रतिवद्धता पनि जाहेर गरिसकेको छ । यो सम्मेलन प्रतिवेदन त्यसैको एउटा जिम्मेवारी हो ।

प्रस्तुत प्रतिवेदनलाई हामी सम्मेलनका सहभागीहरूका साथै सहकारी, स्थानीय सरकार र विकास सहयोगी निकायहरूको हातमा पुर्याउने र सम्मेलनका समग्र श्रव्यदृष्य अभिलेखसमेत चाँढै नै जिल्ला सहकारीसंघको वेभसाइटमा प्रकाशन गर्ने जानकारी गराउँदछौं ।

सम्भव भएसम्म प्रतिवेदनलाई बद्धि जानकारी मूलक बनाउने उद्देश्यले सम्मेलनको सुरुवात देखि प्रतिवेदन विमोचनका प्रक्रिया, यस अवधिका क्रियाकलाप र प्राप्त अनुभवलाई समेत प्रस्तुत गर्ने कोसिस गरिएको छ । यस अभिलेखनले आगामी दिनमा यस्तै प्रकृतिको कार्यक्रम व्यवस्थापनमा पनि सिकाई हुने अपेक्षा राखिएको छ ।

यस प्रतिवेदनले सहकारी अभियानकर्मीहरूका लागि केही जानकारी, केही जिज्ञासा र विकासयात्रामा अघि बढ्न केही केही उत्प्रेरणा प्रदान गरी जिल्लाका सहकारीहरूबीच साझा अवधारणाहरू निर्माण, सहमति र सहकार्यका लागि न्यूनतम भूमिका खेल्न मद्दत गर्नेछ भन्ने अपेक्षा लिएका छौं ।

अन्तमा, सम्मेलनलाई सफल बनाउन सहयोग गर्नुहुने सम्पूर्ण सहभागी, सहयोगी, सरकारी तथा गैरसरकारी निकाय, आयोजक संस्थाका पदाधिकारीहरू,कर्मचारीहरू सबैमा सम्मेलन आयोजक समिति तथा जिल्ला सहकारी संघ हार्दिक धन्यवाद प्रकाट गर्न चाहन्छ । सहकारीमार्फत समृद्धिको दीर्घकालीन यात्रामा सबैको निरन्तर साथ सहयोगको आशा र अनुरोध गर्दछ ।

धन्यवाद । जय सहकारी ।

# विषयसूची

**खण्ड ३ : अनुसूचीहरू**



**सम्मेलनका केही तस्विरहरू**

# अध्याय १: सम्मेलन अवधारणा

### १.१ मुख्य सोच

नेपालमा सहकारी संस्थाहरूले देशको आर्थिक सामाजिक प्रगतिमा गरेको उत्साहजनक योगदानको जगमा उभिएर आगामी दशकमा नेपाल सरकारले अवलम्बन गरेको 'समृद्ध नेपाल, सुखी नेपाली' को परिकल्पनालाई यथार्थमा हासिल गर्नका लागि अबको सहकारी अभियान उद्यमशीलता विकासमा केन्द्रित गर्नुपर्ने महसुस गरी दोलखा जिल्लाको सन्दर्भमा सबै सहकारी तथा स्थानीय सरकारबिच बलियो सहकार्य गर्दै अघि बढ्ने कार्यदिशा तय गर्ने सोचका साथ दोलखा बृहत सहकारी सम्मेलनको आयोजना गरिएको हो ।

सम्मेलनले जिल्लामा सहकारी उद्यमशीलतासम्बन्धी साझा बुझाइ र सहमति निर्माण गर्ने, उद्यमशीलता विकासमा अघि बढ्ने आधारभूत रणनीतिहरू पहिचान गर्ने र न्यूनतम तत्कालिन कार्ययोजनाहरू अघि बढाउनका लागि प्रतिवद्धता गर्ने उद्देश्य राखेको थियो । सम्मेलनको सारलाई निम्न नारामा केन्द्रित गरिएको थियो :

*सहकारी अभियानको आगामी कार्यदिशा,*
*आर्थिक रूपान्तरणका लागि उद्यमशीलता ।*

### १.२ सम्मेलनको स्वरूप

सहकारी क्षेत्रको आगामी कार्यदिशा उद्यमशीलता विकासमा कसरी जाने भन्ने विषयमा बृहत सहभागिताबाट साझा सहमति तय गर्नका लागि जिल्लाका सबै किसिमका सहकारीहरूको अधिक्रम सहभागीतामा सहकारी क्षेत्रका स्थानीयदेखि संघीय तहसम्मका प्रमुख सरोकारवालाहरू समावेश गराई विस्तारित अन्तरक्रिया गराइएको थियो । अन्तरक्रियाका लागि उद्यमशीलताका सवालसँग अन्तरसम्बन्धित भएका देखिएका ६ वटा विषयमा अलग अलग कार्यपत्र प्रस्तुति र छलफल गराइएको थियो । उद्घाटन सत्र, कार्यपत्र सत्र र समापन सत्र  गरी ३ मुख्य सत्रमा २ दिनसम्म सञ्चालित सम्मेलनको निचोडलाई घोषणापत्रको रूपमा जारी गरिएको थियो ।

### १.३ विस्तृत अवधारणा

सम्मेलनलाई सैद्धान्तिक, सांगठनिक र व्यवस्थापकीय रूपमा उद्देश्यमूलक र परिणाममुखी बनाउनका लागि सर्वप्रथम जिल्ला सहकारी संघको नेतृत्व र सहकारी तथा सामाजिक विकासका क्षेत्रमा संलग्न अभियन्ताहरूको सहयोगमा सम्मेलनको विस्तृत अवधारणापत्र तयार गरिएको थियो । सो अवधारणापत्र जिल्ला सहकारी संघ दोलखा र दोलखा बचत तथा ऋण सहकारी संघको संयुक्त बैठकमा प्रस्तुत गरी सम्मेलन गर्ने अवधारणा पारित गरेपछि सम्मेलन आयोजक समिति गठन गरी योजनावद्ध रूपमा सममेलन क्रियाकलापहरू अघि बढाइएको थियो ।

सम्मेलन अवधारणापत्र **अनुसूची** १ मा समावेश छ ।

# अध्याय २ः सम्मेलन क्रियाकलापहरू

## २.१ पूर्वतयारी क्रियाकलापहरू

### २.१.१ सम्मेलन आयोजक समिति गठन र कार्यविभाजन

जिल्ला सहकारी संघ लि. दोलखाको पहलमा अघि बढेको अवधारणामा शुरूमा जिल्ला सहकारी संघ लि. दोलखा र दोलखा जिल्ला बचत तथा ऋण सहकारी संस्था लि. को संयुक्त आयोजनामा सम्मेलन सम्पन्न गर्ने सोच रहेकोमा विस्तृत अवधारणा छलफल र सहमतिपछि आयोजक समिति गठन गर्ने अवधिसम्म आइपुग्दा आयोजक, सहआयोजक, सहयोगी र प्रवर्द्धक गरी १ दर्जन संस्थाहरू सहभागी भए । अवधारणाको आरम्भदेखि आयोजक समिति गठनसम्म आइपुग्न महिना भरी समय लागेको थियो । अन्तमा संयुक्त भेलाको निर्णय अनुसार आयोजक संस्थाहरूको संरचना निम्नअनुसार तयार भयोः

**क. आयोजक**

सहकारी क्षेत्रका जिल्लाका ठूला र सक्रिय छाता संगठन तथा सम्मेलनको अवधारणा निर्माताको हिसाबले निम्न संस्थाहरू आयोजकको भूमिका लिन नेतृत्व लिएः

- सहकारी जिल्ला सहकारी संघ लिमिटेड, दोलखा
- दोलखा जिल्ला बचत तथा ऋण सहकारी संघ लिमिटेड

**ख. सह-आयोजक**

सम्मेलनको सफलताका लागि मूलतः वित्तीय कारोबार रू. ५० करोड भन्दा माथि रहेकालाई कम्तीमा रू. १ लाख माथि आर्थिक सहयोगका लागि अनुरोध गर्ने निर्णय अनुसार योगदान गर्न तयार भएका सहकारीहरूमध्ये निम्न संस्थाहरूले सह-आयोजकको भूमिका लिएः

- जनसचेतन साकोस लि., बैतेश्वर गा.पा. ५, मैनापोखरी
- मिलीजुली साकोस लि., भीमेश्वर न.पा. ६, चरिकोट
- हाम्रो जनकल्याण साकोस लि., भीमेश्वर न.पा. ३, चरिकोट

**ग. सहयोगी**

कम्तीमा रू. ५० हजार माथि आर्थिक सहयोगका लागि अनुरोध गर्ने निर्णय अनुसार योगदान गर्न तयार भएका सहकारीहरूमध्ये निम्न संस्थाहरूले सहयोगीको भूमिका लिएः

- एकीकृत फ्रेण्डसिप साकोस लि., जिरी न.पा. ५, जिरी बजार
- भीमेश्वर बहुद्देश्यीय सहकारी संस्था लि., तामाकोशी गा.पा. १, भीरकोट
- जनमुखी साकोस लि., बैतेश्वर गा.पा. ५, मैनापोखरी
- अर्थभूमि साकोस लि., भीमेश्वर न.पा. ६, चरिकोट

**घ. प्रवर्द्धक**

सम्मेलनलाई सफल पार्न सहयोग गर्न तत्पर केन्द्रीय संस्थाहरूमध्ये योगदान गर्न तयार भएका निम्न संस्थाहरूलाई प्रवर्द्धकको भूमिका जिम्मा दिइयो ः

- राष्ट्रिय सहकारी बैंक लि., कुपण्डोल, ललितपुर
- नेपाल बचत तथा ऋण केन्द्रीय सहकारी संघ लि, बानेश्वर, काठमाडौ

**घ. आयोजक समिति**

सम्मेलन आयोजनाका लागि तत्पर भएका संस्थाहरूका प्रतिनिधिहरूको सहभागितामा कुल ४७ सदस्यीय सम्मेलन आयोजक समिति गठन भएको थियो । समितिका पदाधिकारीहरूलाई ७ वटा विभागीय समितिहरू बनाई परिचालन गरिएको थियो । गठन भएयता सम्मेलन तयारीका लागि औपचारिक रूपमा पुग्न महिना बढी समय लागेको थियो ।

मिति २८ साउन २०७६ मा आयोजित अन्तिम समीक्षा र आगामी योजना तय गरी घोषणापत्र कार्यान्वयन संयोजन समितिलाई जिम्मेवारी हस्तान्तरण गरी आयोजक समिति विघटन गरिएको थियो ।

आयोजक समितिको विवरण **अनुसूची २** र तिनको कार्यविभाजन **अनुसूची ३** मा समावेश गरिएको छ ।

### २.१.२ कार्यपत्र तयारी समुह गठन र कार्यविभाजन

सहकारी उद्यमशीलता विकाससम्बन्धी सम्मेलनको उद्देश्य प्राप्तिका लागि त्यससँग अन्तरसम्बन्धित विषयहरूमाथि छलफल गर्नका लागि ६ वटा विषयहरू छनौट गरिएका थिए । ती विषयहरूमा सहकारी विकासका लागि स्थानीय सरकारको भूमिका, सहकारी उद्यम विकाससम्बन्धी जिल्लाको अवस्था, सहकारीका उद्यममैत्री कानूनी व्यवस्था, दीगो विकास लक्ष्यमा सहकारीको भूमिका, आर्थिक रूपान्तरणमा सहकारी नेतृत्वको भूमिका, रूपान्तरणको नयाँ सन्दर्भमा सहकारीको जनशक्ति व्यववस्थापन छनौट गरिएको थियो । ती विषयमाथि कार्यपत्र तयारी र प्रस्तुतिका लागि सम्बन्धित क्षेत्रका अनुभवी र जिम्मेवार व्यक्तिहरू चयन गरिएको थियो जसमा ७ जनाको टिम तयार भएको थियो । तिनको भूमिका र कार्यपत्रहरूको थप विवरण कार्यपत्र सत्रको शीर्षकमा समावेश गरिएको छ ।

### २.१.३ सहभागी छनौट र पत्राचार

सम्मेलनका लागि सूची तयार गरिएका विभिन्न क्षेत्रबाट करिव २०० वटा संस्थाका प्रतिनिधि गरी जम्मा ३०० जना बढीलाई लिखित आमन्त्रण गरिएको थियो । आमन्त्रितमध्येमा सहकारी संस्थाका सहभागीहरू सहकारी संघहरू, राजनीतिक, सामाजिक, संघ संस्था, सञ्चारमाध्यम आदिबाट रहेका थिए । सहकारी संस्थाका प्रतिनिधिहरूको छनौट भुगोल, क्रियाशीलता र तत्परताको आधारमा गरिएको थियो । ती आधारहरू अपनाउँदा एउटा संस्थाबाट २ देखि ८ जनासम्म छनौट गरिएको थियो । हरेक संस्थामा समयमै पत्र पुऱ्याउनका लागि सम्बन्धित भौगोलिक क्षेत्रबाट सहभागी भएका आयोजक समितिका पदाधिकारीहरूको मुख्य भूमिका रहेको थियो । आमन्त्रणको प्रतिनिधित्व सहभागी रेकडले थप स्पष्ट पारेको छ ।

### २.१.४ प्रचार प्रसार

सम्मेलनको प्रचार प्रसारका लागि पत्रपत्रिका (प्रिन्ट तथा अनलाइन र पत्रकार सम्मेलन), रेडियो, बुलेटिन, सामाजिक सञ्जाल, ब्यान्नर, स्टेशनरी सामाग्री, संस्थागत अन्तरक्रिया, बजार परिक्रमा, सहकारी संस्था वार्षिक प्रतिवेदन, सम्मेलन प्रतिवेदन प्रकाशन, अडियो तथा भिडियो डकुमेन्ट्री, वेबसाइट अर्काइभलगायत दर्जन माध्यम र विधिहरू अपनाइएको थियो । तिनको संक्षिप्त विवरण निम्नअनुसार छः

१. **पत्रपत्रिकाः** पत्रकार सम्मेलनको माध्यमबाट स्थानीय तथा राष्ट्रिय प्रिन्ट र अनलाइन मिडियाहरूमार्फत कार्यक्रमको प्रचार गरिएको थियो । पत्रकार सम्मेलनमा जिल्लाका दर्जन बढी मिडियाका सञ्चारकर्मीहरूको सहभागिता भएको थियो । पत्रकार सम्मेलनको प्रेस विज्ञप्ति अनुसूची ४ मा समावेश छ ।

   सम्मेलनको तयारी र सम्पन्नपछि यी विषयहरू पनि दर्जन बढी समाचारहरूमा प्रकाशन भएका थिए । अधिकांश प्रिन्ट पत्रपत्रिकाहरू संस्थामा सुरक्षित छ । समाचार लिंकसहितको इ-कपी विवरण अनुसूची ९ मा समावेश छ ।

२. **रेडियो कार्यक्रमः** मुख्यतया सम्मेलनको सूचना र रेडियो संवादहरू जिल्लाका ५ वटा रेडियोहरूबाट सम्मेलन तयारी र सम्पन्न कार्यक्रमको विवरण प्रसारण भएको थियो । रेडियो कार्यक्रमको श्रृंखलागत अडियो रेकड सुरक्षित छ । यसलाई भविष्यसम्म प्रचार सामाग्रीको रूपमा उपयोग हुनेछ ।

३. **बुलेटिन प्रकाशनः** सम्मेलनको व्यापक प्रचार र केही आर्थिक सहयोग संकलनका लागि सम्मेलन विशेष बुलेटिन प्रकाशन गरी उद्घाटन सत्रमा विमोचन गरिएको थियो । ६० पेजको उक्त बुलेटिनमा सम्मेलनको अवधारणा, आयोजक समिति, २२ वटा सहकारी संस्थाहरूको परिचय, केही सफलताका कथाहरू र विज्ञापन सामाग्रीहरू समावेश गरिएको थियो । अफिसप्रति बुलेटिन संस्थामा सुरक्षित छ ।

४. **सामाजिक सञ्जालः** सम्मेलनसँग सरोकार राख्ने आम सरोकारवालाहरूको जानकारीका लागि सम्मेलनका सूचनाहरू प्रवाह गर्न फेसबुक एकाउन्ट अकाउन्ट खोली सञ्चालन गरिएको थियो । यसमा सम्मेलनका सूचना तथा प्रकाशन सामाग्रीहरूको लिंक राखिएको छ ।

५. **ब्यान्नर प्रचारः** आयोजक समितिका पदाधिकारीहरूको सक्रियतामा जिल्लाका सहकारी संस्थाहरूले आफूलाई पायक पर्ने विभिन्न स्थानमा ब्यान्नर राखी प्रचार गरेका थिए । मुख्यताः चरिकोट, दोलखा बजार, मैना पोखरी, जिरी, तामाकोसी, भिरकोट, खरिढुङ्गा लागयतका ठाउँमा व्यान्नरहरू टाँगिएको थियो । कार्यक्रम सम्पन्न भएलगत्तै ती ब्यान्नरहरू सम्बन्धित संस्थाहरूले बिसर्जन गरेका थिए ।

६. **स्टेशनरी सामाग्री प्रिन्टः** सम्मेलनको नाम, नारा, लोगो तथा आयोजकहरूको विवरण समावेश गरी सम्मेलनका लागि नोटकपी, पेन तथा सामान्य स्टेशनरी व्याग प्रिन्ट गरिएको थियो । तिनको नमुना प्रति संघको कार्यालयमा सुरक्षित छ ।

७. **संस्थागत अन्तरक्रियाः** बुलेटिनका लागि संस्थागत परिचय उपलब्ध गराउन तथा सम्मेलनमा उद्यम विकाससम्बन्धी आ-आफ्नो संस्थाको आगामी योजनाहरूसहित सहभागी गराउनका लागि आयोजक समितिका पदाधिकारीहरूले आफ्नो क्षेत्र र संस्थामा सम्मेलनको अवधारणामाथि विस्तृत छलफल चलाएका थिए ।

८. **बजार परिक्रमाः** स्थानीय स्तरमा कार्यक्रमको आम प्रचारका लागि सम्मेलन उद्घाटनको बिहान विभिन्न झाँकी सहित सम्पूर्ण सहभागीहरूको उपस्थितिमा चरिकोट बजार परिक्रमा गरिएको थियो । कार्यक्रमका विशेष अतिथिसमेतको सहभागितामा सम्पन्न परिक्रमा कार्यक्रममा अनुमानित ५०० जनाको सहभाागिता रहेको थियो ।

९. **सहकारी संस्थाको वार्षिक प्रतिवेदनः** सम्मेलनमा सहभागिता भएको विवरण र सम्मेलनबाट जारी घोषणापत्रमा आधारित उद्यम विकाससम्बन्धी नीति तथा योजनाहरू सहभागी संस्थाहरूमध्ये ठूला संस्थाहरूले आ.व. २०७६/०७७ का लागि आफ्नो वार्षिक योजनामा समावेश गरेको जानकारी गराएका छन् । ती प्रतिवेदनहरू सहकारी संघमा संकलन हुने क्रम निरन्तर छ । केही मुख्य योजनाहरू यसै प्रतिवेदनको सम्मेलनपछिका क्रियाकलापमा समावेश गरिएको छ ।

१०. **सम्मेलन प्रतिवेदन प्रकाशन तथा वितरणः** सम्मेलनको प्रतिवेदन प्रकाशन गरी जिल्ला सहकारी संघ लि. दोलखाको १४औं वार्षिक साधारणसभामा विचोचन गरी सम्मेलनका सहभागी प्रतिनिधि र अन्य सरोकारवालाहरूलाई प्रिन्ट तथा इ-कपी वितरण गर्ने तयारी रहेको छ ।

११. **अडियो तथा भिडियो डकुमेन्ट्रीः** सम्मेलनको अडियो तथा भिडियो डकुमेन्ट्री संघको कार्यालयमा सुरक्षित छ । यसलाई अन्तिम सम्पादन पूरा गरी आन्तरिक तथा बाहिरी प्रयोजनका लागि भविष्यसम्म प्रचार सामाग्रीको रूपमा उपयोग हुनेछ ।

१२ **वेबसाइट अभिलेखनः** सम्मेलनको प्रतिवेदन, अडियो तथा भिडियो डकुमेन्ट्री, यस प्रतिवेदनमा समावेश गर्न नसकिएका ब्यान्नर तथा विविध गतिविधिसम्बन्धी फोटोहरूको अन्तिम सम्पादन पूरा गरी जिल्ला सहकारी संघको वेबसाइट अभिलेखन प्रकाशन गर्ने तयारी भएको छ ।

### २.१.५ संयोजन तथा तयारी बैठकहरु

सम्मेलन सफलताका लागि आन्तरिक तयारीका साथै विभिन्न पक्षहरूको सहभागिता र सहयोग आवश्यक परेकोले तयारी र व्यवस्थापनसम्बन्धी विभिन्न बैठकहरू आयोजना भए । आयोजक समितिका आन्तरिक पूर्ण बैठकहरू ५ वटा, जिल्लाका सहकारी संस्थाहरू, अन्य सरकारी तथा गैरसरकारी संस्थाहरू, काठमाडौंमा नेफ्स्कून, सहकारी महासंघ, राष्ट्रिय सहकारी बैंक, सहकारी विभाग तथा मन्त्रालय, सहकारी विकास बोर्ड र कार्यपत्र प्रस्तोताहरू गरी जम्मा डेढ दर्जन भन्दा बढी बैठकहरू सम्पन्न भए ।

## २.२ सम्मेलन सत्रका क्रियाकलापहरू

### २.२.१ सम्मेलन कार्यतालिका

सम्मेलनको समग्र कार्यतालिका २०७६ बैशाख २७ र २८ रहेको थियो । मुख्य क्रियाकलापको हिसाबले यो कार्यतालिका ३ भागमा बाँडिएको थियो । पहिलो खण्डमा उद्घाटन सत्र, दोस्रो खण्डमा कार्यपत्र सत्र र तेस्रो खण्ड समापन सत्र रहेको थियो । पहिलो खण्ड २७ गते बिहान, दोस्रो खण्ड २७ गते दिउँसोदेखि २८ गते बिहानसम्म र तेस्रो खण्ड दोस्रो दिनको दिउँसो रहेको थियो । सम्मेलन दोलखा सदरमुकाम चरिकोटको चरिघ्याङस्थित ए वन पार्टी प्यालेसमा सम्पन्न भएको थियो ।

सम्मेलनको विस्तृत प्रतिवेदन अभिलेखनका लागि रत्न बहादुर श्रेष्ठको संयोजकत्वमा इश्वर न्यौपाने, रविन्द्र गौतम, दिल सागर केसी र मेघराज घिमिरे गरी ६ सदस्य समितिलाई जिम्मेवारी दिइएको थियो ।

सम्मेलन सत्रको कार्यतालिका **अनुसूची ५** मा समावेश गरिएको छ ।

### २.२.२ सहभागिता

आमन्त्रण अनुसार कुल ३५० बढीको सहभागिता अपेक्षा गरिएकोमा सो भन्दा बढी नै सहभागिता रहेको थियो । कुल सहभागी मध्ये जिल्लाभरका १ सय २९ सहकारी संस्थाबाट २ सय १० संस्थागत प्रतिनिधि र अन्य अतिथि, आयोजक तथा आमन्त्रितहरूको संख्या १५० बढी रहेको थियो । यो सहभागितामा सबैभन्दा धेरै संख्या भीमेश्वर नगरपालिका र सबैभन्दा कम बिगु गाउँपालिकाबाट रहेको थियो । संस्थागत प्रतिनिधित्वको सारांश तलको तालिकामा प्रस्तुत गरिएको छ ।

**तालिका १ः पालिकागत रूपमा संस्थागत प्रतिनिधितवको अवस्था**

| क्र.सं. | पालिका | सहकारी संख्या | प्रतिशत | सहभागी संख्या | प्रतिशत |
|---|---|---|---|---|---|
| १ | मेलुङ गा.पा. | ५ | ३.९ | ७ | ३.३ |
| २ | भीमेश्वर न.पा. | ३७ | २८.७ | ६९ | ३२.९ |
| ३ | बैतेश्वर गा.पा. | २५ | १९.४ | ४२ | २०. |
| ४ | जिरी न.पा. | ९ | ७. | १८ | ८.६ |
| ५ | बिगु गा.पा. | ३ | २.३ | ३ | १.४ |
| ६ | कालिञ्चोक गा.पा. | १३ | १०.१ | १७ | ८.१ |
| ७ | तामाकोसी गा.पा. | २५ | १९.४ | ३५ | १६.७ |
| ८ | गौरीशंकर गा.पा. | ७ | ५.४ | १२ | ५.७ |
| ९ | शैलुङ्ग गा.पा. | ५ | ३.९ | ७ | ३.३ |
| जम्मा | | १२९ | १०० | २१० | १०० |

सम्मेलनका सहभागीहरूको नामावली **अनुसूची** ८ मा समावेश गरिएको छ ।

### २.२.३ बजार परिक्रमा

सम्मेलनका नारा, उद्देश्य तथा सफलतासम्बन्धी प्लेकार्डहरू, ब्यान्नर, नौमति बाजा तथा विभिन्न जातीय समुदायका सांस्कृतिक झाँकीहरूसहित सहभागीहरू चरिकोटको सात्दोबाटेबाट शुरू भई टुढिखेल हुँदै सम्मेलन स्थलमा पुगेर परिक्रमा समापन भएको थियो ।

### २.२.४ सम्मेलन उद्घाटन सत्र

सम्मेलनका संयोजक श्री हेमन्त चौलागाईंको अध्यक्षता र गरिबी निवारण तथा सहकारी मन्त्री माननीय पदमा अर्यालको प्रमुख आतिथ्यतामा आरम्भ भएको उद्घाटन सत्रमा विभिन्न क्षेत्रका ७६ जना प्रतिनिधिहरूलाई आसन ग्रहण गराइएको थियो । प्रमुख अतिथिले पानसमा वत्ती बालेर सम्मेलनको उद्घाटन गर्नुभएको थियो । यस सत्रमा मुख्यतयाः राष्ट्रियगान, स्वागत मन्तव्य तथा गान, बुलेटिन विमोचन, सम्मेलन परिचय, जिल्लामा सहकारी अभियानको अवस्था, शुभकामना मन्तव्य, सम्झनाको चिनो

वितरण कार्यहरू सम्पन्न भएका थिए । आसन ग्रहणमध्ये प्रतिनिधिमूलक रूपमा ११ जनाले शुभकामना मन्तव्य दिनुभएको थियो ।

उद्घाटन सत्रको विस्तृत विवरण **अनुसूची ५.क** मा समावेश गरिएको छ ।

### २.२.५ वक्ताहरुको मुख्य सन्देश

शुभकामना मन्तव्यमा प्रमुख जिल्ला अधिकारी, राजनीतिक दलका जिल्ला प्रमुखहरू, स्थानीय तहको तर्फबाट भीमेश्वर नगर प्रमुख, सहकारी रजिष्ट्रार, नेफ्स्कून अध्यक्ष, राष्ट्रिय सहकारी महासंघका वरिष्ठ उपाध्यक्ष, प्रदेश नं. ३ का प्रदेशसभा सदस्य, पुर्वराज्यमन्त्री, प्रतिनिधि सभा सदस्य तथा प्रमुख अतिथिले सम्मेलन सफलताको शुभकामनासहित आफ्ना विचारहरू राख्नु भएको थियो । कार्यक्रमका सबै वक्ताहरूले सहकारीले समाज रूपान्तरणका लागि नेतृत्वदायी भूमिका खेल्नुपर्ने र यसका लागि अब सहकारीहरू उत्पादनमा लाग्नुपर्ने बक्ताहरूको मुख्य सन्देश रहेको थियो । केही प्रमुख मन्तव्यहरूको सार निम्नानुसार छन्ः

**क. माननीय पदमा अर्याल, प्रमुख अतिथि, मन्त्री भूमिसुधार, सहकारी तथा गरिबी निवारण मन्त्रालय**

- दोलखाको विकास र समृद्धिको लागि दोलखाका सहकारी संस्थाहरूले महत्वपूर्ण भूमिका खेल्छन् भन्ने कुरा सम्मेलनको आयोजनाले सिद्ध गरेको छ ।
- हामीभन्दा पछि विकास भएका देशहरू हामीभन्दा चाँढै नै सम्पन्न बन्नसक्नु र हामी अझै माग्ने मनस्थितिमा हुनुको अवस्थाबारे गम्भीर छलफल गरेर लाग्नुपर्ने बेला भइसकेको छ । सरकारले पनि यही ढंगले योजना बनाएर अघि बढ्ने जमर्को गरेको छ । समृद्धि प्राप्त गर्नको निम्ति सहकारी एउटा मेरूदण्ड बन्नसक्छ भन्ने हाम्रो ठम्याई र विश्वास छ ।
- सहकारी क्षेत्रमा काम गर्नका लागि धेरै अष्पष्टता थिए । तिनलाई क्लियर गर्दै हामीले सहकारी मैत्री सहकारी नियमावली ल्याएका छौं । यसलाई पूर्णता दिनका लागि अझै धेरै धेरै प्राक्टिस गर्नुपर्छ । त्यसैले जहाँ पूर्ण भएको छैन हामी त्यो पूर्ण गर्नेछौं ।
- अबका सहकारी बचत तथा ऋण परिचालन गर्ने मात्रै हैन । यो धेरै भयो । अब आफ्नो साधन र श्रोतलाई उत्पादनमा जोड्नुपर्छ । हाम्रो सम्भावनाको पहिचान गर्दै सहकारी मोडलमा सँगसँगै अघि बढ्नुपर्छ । यो नै अबको दिशा यो हो । सहकारीलाई समृद्धिको मेरूदण्ड बनाउन उत्पादनमा कसरी जोड्ने, यसका विधि र प्रक्रियाहरू के हुने ? कस्ता कार्यक्रमहरू हुने भन्ने विषयमा तपाईँहरूसमेत छलफल चलाउनुस् र यसको निष्कर्ष मुलुकभरिका लागि सिकाई बन्नसकोस् ।
- जिल्लामा तपाईँहरू ५ सय सहकारी हुनुहुन्छ । सहकारी संस्थाहर धेरै भए । यत्ति धेरै सहकारी संस्थाहरूलाई अनुगमन, निरीक्षण गर्न सकिन्न । दिनप्रतिदिन सहकारीमा बेथिति आउन लागेको छ । सुशासनमाथि प्रश्न उठेको छ । आर्थिक अनुशासन कायम हुन सकेको छैन । यस्तो अवस्थामा सहकारीहरू जसका विषय र कार्यक्षेत्र मिल्छन् उनीहरू एकीकरणको प्रक्रियामा अघि बढ्नुस् । हामीले मर्ज गऱ्यौं भने राज्यबाट ल्याउने अनुदान र अन्य संघसंस्थाबाट पनि अनुदान ल्याउन सक्छौं । अनि केही हाम्रा श्रोतहरू परिचालन गरेर केही नमुनायोग्य कामहरू गर्न सकिन्छ । यसैबाट सहकारीहरू सक्षम बन्दै जानसक्छन् ।

**ख. मीनराज कँडेल, उपाध्यक्ष, राष्ट्रिय सहकारी महासंघ नेपाल**

- सहकारी मार्फत उद्यमशीलता प्रवर्द्धन गर्ने भन्ने जुन विषयमा यो कार्यक्रम भइरहेको छ यसले दोलखाको सहकारी अभियान र सिङ्गो जनताको जीवनस्तर बदल्नेछ भन्ने मैले विश्वस लिएको छु ।
- विश्वका १२ प्रतिशत अर्थात १ अर्व बढी जनसंख्या सहकारीमा आवद्ध भएको तथ्यांक छ । कतिपय राष्ट्रहरूमा मुलुकको समृद्धि र गरिबी निवारणमा सहकारीहरूले महत्वपूर्ण भूमिका खेलेका छन् । यसका साथसाथै संयुक्त राष्ट्रसंघको दीगो विकास लक्ष्य पुरा गर्नका लागि सहकारीको भूमिका महत्वपूर्ण हुने ठानेर दीगो विकास लक्ष्यका लागि सहकारी भन्ने अवधारणा आएको छ । दीगो विकास लक्ष्य प्राप्तिका लागि महत्वपूर्ण भूमिका निभाउनका लागि म सहकारीहरूलाई अनुरोध गर्दछु । संसारका ठूला सहकारीहरूले कतिपय मुलुकमा ४५ प्रतिशतसम्म जिडिपिमा सहकारीको योगदान रहेको छ । सहकारी जनताको जीवनस्तर बदल्ने अभियान हो । यो सम्मेलनबाट प्रत्येक वडा वडामा कसरी उद्यम विकास गर्ने भनेर छलफल हुनेछ ।
- दोलखा जिल्ला सहकारी संघ देशका गन्न सकिने राम्रा सहकारी संघहरूमध्ये पर्दछ । सहकारीले आर्थिक गरिबी मात्र

नभई बहुआयामिक गरिबी न्युनिकरण गर्न काम गर्नुपर्दछ । अहिले त सहकारीहरू पर्यावरण संरक्षणमा जुट्ने भन्ने पनि कुरा आईसकेको छ । हामी तिनै तहको सरकारसँग मिलेर काम गर्न चाहन्छौं ।

- २ दिनको गोष्ठीमा दोलखाका सम्भावित उद्यमहरूका बारेमा छलफल हुनेछ । सहकारीहरूको भूमिकाका बारे पनि छलफल हुनेछ । यसले दोलखा जिल्ला मात्र नभई ७७ जिल्लामा नै मार्गदर्शन गर्न सकोस शुभकामना ।

**ग. ईश्वरचन्द्र पोखरेल, नेकपा दोलखा अध्यक्ष तथा गाउँपालिका महासंघ प्रदेश ३ संयोजक**

- दोलखाका स्थानीय तहहरूले सहकारी ऐन बनाईसकेका छन् । कोही बनाउँदै छन् । हामी सहकारीका अगुवाहरूसँग बसेर ऐन बनाइरहेका छौं । हामी सँगै मिलेर जान चाहन्छौं ।
- अब सहकारीका सबै कार्यक्रमहरू रोजगारमै केन्द्रित हुनुपर्छ । दोलखामा के उत्पादन गर्दा हुन्छ खोजौं । बजार नभएको चिज उत्पादन गर्ने कुरा हुँदैन ।
- हामीले सोचेको समृद्धिमा पुग्न अझै समय लाग्छ । अहिले समृद्धिको जग बसाउने योजना बनाइएको छ । यसमा सहकारीहरूको अभियान त्यसमा केन्द्रित होओस । अबको १५ वर्षमा हामी छुट्टै खालको जिल्ला बनाउन सक्छौ । अरू पहाडी जिल्लाभन्दा दोलखालाई हामीले धेरै माथि पुऱ्याएका छौं । अझै पहाडी जिल्लाहरूमा खरको छानो भेटिन्छ । दोलखामा त्यस्तो छैन । त्यो हामीले बनाएका हौं ।
- अब जनतालाई उत्साहित बनाएर दोलखा निर्माणको महान अभियानमा लागौं । सम्मेलन सफलताको शुभकामना ।

### २.२.६ कार्यपत्र प्रस्तुति

उद्घाटन सत्रमा सम्मेलन संयोजकले प्रस्तुत गरेको जिल्लाको सहकारी अभियानसम्बन्धी अवस्था र उद्यम प्रर्द्धनसँग अन्तरसम्बन्धित रहेका यस सत्रमा प्रस्तुत ६ वटा गरी जम्मा ७ वटा कार्यपत्र तथा स्थितिपत्र प्रस्तुत भएका थिए । विषयगत समुहको आधार, संस्थागत आधिकारित्रा र क्षेत्रगत अनुभवको आधारमा यस सत्रको कार्यपत्र प्रस्तुतिमा ५ जनाले सेसन अध्यक्षता गर्नुभएको थियो र सो कार्यपत्रमाथि टिप्पणी गर्नुभएको थियो। प्रस्तुतिपछिको छलफलमा कुल .... सहभागीहरूले जिज्ञासा, प्रश्न तथा सुझावहरू राखेका थिए । कार्यपत्रहरूको सार सन्देश निम्नानुसार रहेको थियोः

**तालिका २ः कार्यपत्रहरूको मुख्य सन्देश**

| क्र.सं. | शीर्षक | मुख्य सन्देश |
|---|---|---|
| १. | सहकारी व्यवस्थापन र उद्यमशीलता विकासमा स्थानीय सरकारको भूमिका | समृद्धि हासिलका लागि स्थानीय सरकार र सहकारीहरूबिच बलियो साझेदारी गरेर अघि बढ्नु आवश्यक छ । |
| २. | दीगो विकास लक्ष्य प्राप्तिका लागि सहकारी क्षेत्रको कार्ययोजना | दीगो विकास लक्ष्य प्राप्तिमा सहकारीहरूले स्थानीय स्तरमा महत्वपूर्ण योगदान गर्नसक्छन् । दीगो विकास लक्ष्यको ढाँचा सम्बोधन हुने गरी सहकारी क्षेत्रको कार्ययोजना तयार गर्नुपर्छ । |
| ३. | सहकारी विकासमा जनशक्ति व्यवस्थापन | आजको सन्दर्भमा सामाजिक विकासको बहुआयामिक पक्षहरू सम्बोधन गरेर काम गर्नका लागि सहकारी व्यवस्थापनमा दक्ष र दृढ संकल्पसहितको कर्मचारी अनिवार्य पक्ष हो । |
| ४. | संघीय संरचनामा सहकारी संगठन : कानूनी व्यवस्था र विकास नीतिहरू | सहकारी क्षेत्रका विद्यमान नीति नियमहरू अझै सहकारीमैत्री बनाउन आवश्यक छ । |
| ५ | दोलखा सहकारीमा उद्यमशीलताः वर्तमान अवस्था र भविष्यको बाटो | दोलखामा सहकारी उद्यमशीलताका लागि क्षेत्रगत सम्भावनाहरू धेरै भए पनि तयसतर्फ सहकारीकै तत्परता र दक्षता वृद्धि गर्नुपर्ने आवश्यकता छ । |
| ६. | आर्थिक रूपान्तरण र उद्यमशीलताका लागि सहकारी नेतृत्व | सहकारीहरूले उद्यमशीलता मार्फत आर्थिक रूपान्तरणमा प्रभावकारी रूपमा अघि बढ्नका लागि दक्ष, दूरदर्शी र प्रतिवद्ध सहकारी नेतृत्व आवश्यक छ । |
| ७. | दोलखामा सहकारी संस्थाहरूको वर्तमान अवस्था | जिल्लामा सहकारीहरूको सांगठनिक अवस्था राम्रो भए तापनि यसको तुलनामा आर्थिक रूपान्तरणको प्रतिफल हासिल गर्नका लागि लक्ष्यमुखी भएर लाग्नुपर्ने आवश्यकता छ । |

कार्यपत्र सत्रको विस्तृत कार्यतालिका **अनुसूची ५.ख** मा समावेश गरिएको छ ।

### २.२.७ समापन सत्र

सम्मेलनका संयोजक श्री हेमन्त चौलागाईंको अध्यक्षता र राष्ट्रिय सहकारी महासंघका अध्यक्ष श्री केशव बडालको प्रमुख आतिथ्यतामा आरम्भ भएको समापन सत्रमा विभिन्न क्षेत्रका १६ जना प्रतिनिधिहरूलाई आसन ग्रहण गराइएको थियो । यस सत्रमा मुख्यतयाः सम्मेलन घोषणापत्र जारी, कार्यपत्र प्रस्तोताहरूलाई सम्मानपत्र वितरण र सम्मेलन सफलताको बधाई तथा आगामी कार्यदिशाको सफलताका लागि शुभकामना मन्तव्य सम्पन्न भएका थिए । आसन ग्रहणमध्ये प्रतिनिधिमूलक रूपमा ७ जनाले मन्तव्य राख्नुभएको थियो ।

समापन सत्रको कार्यतालिका **अनुसूची ५.ग** मा समावेश गरिएको छ ।

**क. घोषणापत्र जारी**

सम्मेलनको घोषणापत्र तयारी र प्रस्तुतिका लागि ५ सदस्यीय घोषणापत्र मस्यौदा समिति तयार गरिएको थियो । कार्यपत्रहरूको संश्लेषण, अतिथिहरूको मन्तव्य, सहभागी प्रतिनिधिहरूको अभिमतसमेतलाई संयोजन गरी समितिले १० बुँदे सहकारी उद्यमशीलतामार्फत आर्थिक समृद्धिका लागि दोलखा सहकारी घोषणापत्र २०७६ को मस्यौदा प्रस्तुत गरी छलफलपछि सर्वसम्मतबाट पारित गरेको थियो ।

सम्मेलनको घोषणापत्र **अनुसूची ६** मा समावेश गरिएको छ ।

**ख. मन्तव्य र मुख्य सन्देश**

समापन मन्तव्यमा पुर्व जिविस सभापति तथा प्रदेश नं. ३ कृषिविज्ञ, नेफ्स्कूनका वरिष्ठ उपाध्यक्ष, राष्ट्रिय सहकारी बैंक लि. का अध्यक्ष, आइसीए ग्लोबलका उपाध्यक्ष र प्रमुख अतिथिले सम्मेलन सफलताको शुभकामना सहित आफ्ना विचारहरू राख्नुभएको थियो । कार्यक्रमका सबै वक्ताहरूले सम्मेलन सफलतापूर्वक सम्पन्न भएको र घोषणापत्रले संकल्प गरेको उद्यमशीलता विकासको लक्ष्य हासिलका लागि सबै प्रतिवद्ध भएर लाग्नु मुख्य दायितव भएको बताएका थिए । मन्तव्यका केही प्रमुख अंशहरू निम्नानुसार थिएः

**क. केशब बडाल, प्रमुख अतिथि, अध्यक्ष, राष्ट्रिय सहकारी महासंघ नेपाल**

- अत्यन्त राम्रो कार्यक्रम गर्नुभएकोमा आयोजकलाई बधाई । केही विषयमा मैले यहाँ प्रष्ट पार्नुपर्ने अवस्था छ । वर्तमान संविधानमा निजी, सहकारी र सरकारी क्षेत्रको समन्वय भनेर प्रष्ट रूपमा लेखिएको छ । कम्पनी, गैसस र सहकारीका बिचमा आधारभूत रूपमै फरक छ । कम्पनीमा पूँजीले नीयन्त्रण गर्छ । सहकारीमा पूँजीमाथि सदस्यले नीयन्त्रण गर्दछन् ।
- पहिले बचत अनि लगानी । दोलखाका सहकारीमा आठ अर्ब रकम छ । यसले विद्युत बनाऔं भन्ने पनि सुनीयो । यो १ लाख सदस्यहरूको पैसा हो । उहाँहरूको अनुमतिबिना केही गर्न सक्नुहुन्न । सञ्चालक त त्यसको संरक्षकमात्र हुन ।
- २०४८ को ऐनले सहकारी जागरण ल्यायो । अब उद्यमशीलतामा जानुपर्छ । किलोमा कुरा गरेर अव बजार पाउनै सकिन्न । पकेटमा मिलेर काम गर्नुपर्छ । यो जिल्ला धनी जिल्ला हो । ५ सय वर्षसम्म झिक्न मिल्ने म्याग्नेसाइट छ । बिजुली छ । धेरै सम्भावना छ जिल्लामा ।
- स्थानीय सरकार र सहकारीकर्मीका बीचमा सहमति र सहकार्य आवश्यक छ । दोलखा भनेको सहकारीका लागि गौरव हो । यो ठाउँमा स्थानीय सरकारले ०.०१ प्रतिशत खर्च छुट्याएको देख्दा म चक्रि परें । बाँके जिल्लाको एउटा गाउँपालिकाले १ करोड रूपैंया छुट्याएको छ । म यसमा निराश त हुन्न तर यसको सुधारका लागि तपाईंहरू नथाकी, नहारी र नरिसाइकन स्थानीय तहसँग काम गर्नुहोस् । सहकारीमैत्री कामका लागि दोलखा ७६ जिल्लाभन्दा उत्कृष्ट होस् ।

**ख. ओमदेवी मल्ल, अतिथि, बोर्ड सदस्य अन्तराष्ट्रिय सहकारी महासंघ**

- विदेशमा सहकारी सम्मेलनहरूमा कुरा हुँदा हामी उत्पादनका कुरा आउनेवित्तिकै चुप लाग्नुपर्ने अवस्था छ । विदेशका सहकारी संस्थाहरूलाई हाम्रा सहकारी संस्थाका उत्पादन किनिदेउ भन्ने अवस्था छैन । हामी सहकारीले उद्यम गर्न चाहेमा मन्त्रालयसँग समन्वय गरेर अगाडि बढ्न योजना बनाएका छौं । तपाईंहरूसँग पनि यस्तो योजना भयो भने हामी सहयोग गर्न तयार छौं । सहकारी संस्थाको उत्पादनको गुणस्तरीयताका लागि गुणस्तर विभागसँग समन्वय गरेका छौं ।
- त्रिभुवन विश्वविद्यालयसँग सहकारी पाठ्यक्रम निर्माण गर्नका लागि छलफल भइरहेको छ ।

- इटलीमा पर्यटन क्षेत्र नै सरकारले सहकारी क्षेत्रलाई दिएको छ । युवाहरू यसमा सामेल हुनुभएको छ । यस्तो नेपालमा पनि गर्न सकिनछ । अहिले हामी जिडिपिमा ४ प्रतिशत छौं । ५ वर्षभित्रमा धेरै माथि पुग्न सक्छौं । दोलखा जिल्ला सहकारीमा उत्कृष्ट बन्न सकोस् ।

**ग. समापन**

- सम्मेलन सफल पार्नका लागि विविध क्षेत्रबाट प्राप्त साथ सहयोगप्रति सबैलाई धन्यवादका साथै सम्मेलनले जारी गरेको घोषणापत्रको लक्ष्य प्राप्तिका लागि पूर्ण संकल्पका साथ लाग्ने प्रतिवद्धता गर्दै सभाध्यक्षबाट सम्मेलन समापन गरिएको थियो ।

## २.३ सम्मेलनपछिका क्रियाकलापहरू

### २.३.१ समीक्षा बैठक

सम्मेलन र यसपछिका प्रमुख कार्यहरू सम्पन्न गर्न समय लागेकोले सम्मेलन सम्पन्न भएको ३ महिनासम्म आयोजक समितिलाई क्रियाशील राखिएको थियो । खासगरी अभिलेखनहरू तयार गर्ने र आर्थिक दायित्व सम्पन्न गरिसकेपछि मिति २८ साउन २०७६ मा अन्तिम समीक्षा तथा समापन बैठक आयोजना गरिएको थियो । यस बैठकले निम्न कार्यहरू गरेको थियो:

१. **उपलब्धि समीक्षाः** प्राविधिक उद्देश्यका हासिलका साथै आर्थिक योजनासमेत सन्तुलित रूपमा व्यवस्थापन भई सम्मेलन पूर्ण रूपमा सफल भएको मूल्यांकन गऱ्यो ।

२. **आर्थिक प्रतिवेदन अनुमोदनः** सम्मेलन व्यवस्थापनक लागि कुल अनुमानित रकम रू. २० लाख संकलन गर्ने लक्ष्य राखिएकोमा सो को सत्प्रतिशत बढी (रू.. २१.६९ लाख) लक्ष्य हासिल भएको थियो । सम्मेलनका तत्कालिन भुक्तानी चुक्ता गरी प्रकाशन तथा पारिश्रमिकमा खर्च हुन अझै बाँकीलाई बचतबाट पुग्ने अवस्था छ । सो काम ढिलोमा असोज मसान्तभित्र फरफारक गरिसक्ने योजना गरी आर्थिक प्रतिवेदन अनुमोदन गऱ्यो । विस्तृत आर्थिक विवरण अनुसूची ७ मा समावेश छ ।

३. **घोषणाको प्रारम्भिक कार्यान्वयन अनुगमनः** सम्मेलनमा सहभागी भएका प्रतिनिधि संस्थामध्ये ठूला संसथहरूले आ.व. २०७६/०७७ को वार्षिक योजनामा उद्यमशीलता विकास तथा संस्थागत सुशासनका ठोस योजनाहरू समावेश गरेको जानकारी प्राप्त भयो । सो को पूर्ण जानकारी २०७६ कात्तिक मसान्तभित्र संकलन भइसक्ने क्रममा छ ।

४. **घोषणा कार्यान्वयन संयोजन समिति गठनः** घोषणापत्र कार्यान्वयनको संयोजन गर्न तथा सम्मेलनको बाँकी रहेका दायित्वहरू सम्पन्न गर्नका लागि आयोजक समितिले जिल्लासहकारी संघ दोलखाका अध्यक्ष श्री हेमन्त चौलागाईको संयोजकत्वमा सहकारी संघहरू, क्षेत्रीय प्रतिनिधित्व, क्रियाशीलता र संयोजन क्षमतालाई दृष्टिगत गरी २०७७ साउनसम्मका लागि लागि निम्न ७ सदस्यीय दोलखा सहकारी घोषणापत्र कार्यान्वयन संयोजन समिति गठन गऱ्यो:

संयोजक : हेमन्त चौलागाईं, अध्यक्ष, जिल्ला सहकारी संघ लि. दोलखा
सदस्य : जिवसराज खडका, अध्यक्ष, दोलखा जिल्ला बचत तथा ऋण सहकारी संघ लि.
सदस्य : देवी शर्मा, महासचिव, जिल्ला सहकारी संघ लि. दोलखा
सदस्य : श्यामकाजी कटुवाल, अध्यक्ष, बहुद्देश्यीय सहकारी संघ लि. दोलखा
सदस्य : नारायण बहादुर श्रेष्ठ, अध्यक्ष, मिलीजुली साकोस लि. चरिकोट
सदस्य : भूमिराज खडका, अध्यक्ष, एकीकृत फ्रेण्डसीप साकोस लि. जिरी
सदस्य : सोममैया श्रेष्ठ, अध्यक्ष, त्रिपुरा महिला साकोस, दोलखा बजार

५. **प्रतिवेदन प्रकाशन तथा वितरणः** सम्मेलनको प्रतिवेदन प्रकाशन जिल्ला सहकारी संघको आगामी साधारणसभामा विमोचन गर्ने र संयोजन समितिले सो को १ महिनाभित्र सबै सहभागी संस्था, व्यक्ति तथा सरोकारवालाहरूलाई वितरण गराइसक्ने गरिसक्ने निर्णय गऱ्यो ।

६. **सम्मेलन समिति विघटनः** सम्मेलनका बाँकी जिम्मेवारीहरू संयोजन समिति, जिल्ला सहकारी संघ लि. र दोलखा बचत तथा ऋण सहकारी संघ लि. मा हस्तान्तरण गर्दै बैठकले सम्मेलन आयोजक समिति विघटन गऱ्यो ।

### २.३.२ घोषणाको प्रारम्भिक कार्यान्वयन अनुगमन

मुख्यतया सम्मेलनमा सहभागी सहकारीहरूले सम्मेलनको घोषणापत्र कार्यान्वयनको पक्षमा के कति कामहरू अघि बढाए भनी संयोजक समितिले यही कात्तिक पहिलो हप्ता गरेको फोन सम्पर्क र वार्षिक प्रतिवेदन अध्ययन अनुसार कारोबारको हिसाबले ठूला र गतिविधिको हिसाबले सक्रिय रहेका ८ वटा संस्थाहरूले नीतिगत तथा कार्यक्रमिक योजनाहरू समावेश गरेको जानकारी प्राप्त भयो । जानकारी आउने क्रम जारी नै छ । हालसम्म प्राप्त जानकारी तलको तालिकामा प्रस्तुत छ ।

**तालिका ३ः उद्यमशीलता प्रवर्द्धन योजना बनाएका संस्थाहरूको विवरण**

| क्र.सं. | संस्थाको नाम | ठेगाना | समावेश गरेको योजना |
|---|---|---|---|
| १ | जनसचेतन साकोस लि. | बैतेश्वर ५ | गरीबसँग जनसचेतन (गोलभेडा र आरूबखडाको व्यवसायिक खेती) |
| २ | एकीकृत फ्रेण्डसीप साकोस लि. | जिरी बजार | • ७ वटा सेवाकेन्द्रबाट १, १ उद्यमी छनौट गरी सहुलियत ऋण प्रदान गर्ने (१ सेवाकेन्द्र, १ उद्यम) ।<br>• योगदानमा आधारित पुँजी फिर्ता कोष स्थापना गरेको, ६० प्रतिशतसम्म उद्यमीलाई प्रोत्साहन दिने । |
| ३ | भीमेश्वर बहुउद्देश्यीय सहकारी संस्था लि. | तामाकोसी गा.पा, भीरकोट | • दाना उद्योग स्थापना ।<br>• व्यवसायिक पशुपंक्षी पालन ।<br>• स्थानीय तहसंगको समन्वमा गेडागुडी खेती ।<br>• संस्थाले जग्गा लिजमा लिएर नमुना खेती सञ्चालन । |
| ४ | आनन्द बहुद्देश्यीय सहकारी संस्था लि. | कालिञ्चोक गा.पा. सुनखानी | कृषि तथा पशुपालनका लागि सहुलियत दरमा ऋण प्रवाह । |
| ५ | गाउँघर साना किसान कृषि सहकारी संस्था लि. | मेलुङ ६ | • स्थानीय तहसंगको साझेदारीमा ४० किसानलाई गाईपालन सहयोग तथा चिलिङ भ्याट स्थापना ।<br>• टनेल तरकारीमा सहयोग ।<br>• सीप विकास तालिम (विद्युत, फर्निचर) ।<br>• व्यवसायिक फलफूल उत्पादनका लागि बिरूवा सहयोग । |
| ६ | जनउपकार साकोस लि. | गौरीशंकर गा.पा. जुँगु | स्थानीय तहसँग समन्वय गरी कृषि उत्पादन प्रवर्धन कार्यक्रम सहयोग । |
| ७ | जनजागरण साकोस लि. | बैतेश्वर ३ | व्यवसायिक कृषकलाई ठूलो ऋणमा १ प्रतिशत छुट । |
| ८ | अर्थभूमि साकोस लि. | चरिकोट, दोलखा | • भीमेश्वर नगरपालिका, घरेलु, पशु सेवा कार्यालय जस्ता सम्बन्धित निकायहरूसँग समन्वयकारी भूमिका निर्वाह गरी सदस्यहरूलाई सहजीकरण गर्ने,<br>• उत्पादित वस्तुको बिक्री वितरणको लागि सहजीकरण गर्ने,<br>• कृषक, विभिन्न सरकारी तथा गैर सरकारी निकाय र सहकारी सस्थाहरूसँग समन्वय गरी सित भण्डार स्थपना गर्न पहल गर्ने । |

### २.३.३ प्रतिवेदन प्रकाशन र सार्वजनिक

सम्मेलन प्रतिवेदन ६०० प्रति प्रकाशन गरी जिल्ला सहकारी संघ लि.को १४औं वार्षिक साधारणसभामा विमोचन गराई सम्बन्धित सहभागी तथा सरोकारवालाहरूलाई १ महिनाभित्र वितरण गरिसक्ने योजना रहेको छ ।

### ३. सम्मेलनका उपलब्धीहरू

सम्मेलनबाट तत्कालिन रूपमा निम्न उपलब्धीहरू हासिल भएका छन्ः

१. सहकारी क्षेत्रले अब उद्यमशीलता मार्फत आर्थिक रूपान्तरणको कार्यदिशामा अघि बढ्नुपर्छ भन्ने सवालमा सर्वसम्मतिमा १० बुँदे घोषणापत्र जारी भयो ।

२. स्थानीयदेखि केन्द्रीय तहसम्म यो अवधारणाको राम्रोसँग प्रचार भएको छ जसबाट आगामी दिनमा यस दिशामा अघि बढ्नका लागि नियमन निकायहरूको समेत विश्वास लिन मद्दत पुगेको छ ।

३. केही संस्थाहरूले घोषणापत्रको मर्मअनुसार उद्यमशीलता तथा संस्थागत सुशासनसम्बन्धी ठोस् योजना बनाई अघि बढ्न थालिसकेका छन् ।

४. सहकारी क्षेत्रले आगामी दिनमा केही रणनीतिक महत्वका निर्णयहरू लिन, कार्ययोजना बनाउन र कार्यक्रमहरू आयोजना गर्नका लागि अनुभव, आत्मविश्वास र आपसी विश्वास वृद्धि भएको छ ।

### ४. निष्कर्ष

संघीय व्यवस्थाको नयाँ राजनीतिक सन्दर्भमा सहकारी क्षेत्रका आर्थिक रूपान्तरणका ज्वलन्त सवालहरूलाई उठाएर आयोजना गरिएको दोलखा बृहत सहकारी सम्मेलन वास्तवमा सवाल र सहभागिता दुवै हिसाबले बृहत र दोलखा सहकारी अभियानको इतिहासमा पहिलो नै हो । यो उद्देश्यमुलक रूपमा सम्पन्न भएको छ । सम्मेलनका तत्कालिन उपलब्धिहरूलाई दीर्घकालीन नतीजासम्म हासिल गर्नका लागि निकै योजनावद्ध, तर्कवद्ध, प्रतिवद्ध र निरन्तर संघर्षको आवश्यकता जरूरी रहनेछ ।

# सहकारी व्यवस्थापन र उद्यमशीलता विकासमा स्थानीय सरकारको भूमिका

**डबल पाण्डे,**
प्रमुख, जिसस दोलखा

**प्रेमप्रसाद अधिकारी**
भीमेश्वर–०३ दोलखा

## विषय प्रवेश

१) नेपालको संविधान, २०७२ ले संघीय स्वरूपको राज्य संरचना अंगीकार गरी तीन तहको सरकारको परिकल्पना गरेको छ । ती मध्ये जनताले आँखाले हेर्दा देख्ने, हातले छाम्दा भेटि्टइने र मुखले बोलाउँदा सुन्ने सरकारको रूपमा स्थानीय सरकारलाई लिइन्छ र संविधानले पनि यो तथ्यलाई आत्मसात् गरेको छ । जनताको सामाजिक आर्थिक परिवर्तनका लागि संविधानले नै अनुसूचीमा व्यवस्था गरी निश्चित अधिकार प्रदान गरेको छ । स्थानीय तहले प्रयोग गर्न पाउने अधिकारका सूची अनुसूची ८ मा उल्लेख छ र ती अधिकारहरूको दोस्रो नम्बरमा सहकारी उल्लेख छ । यसको अर्थ मुलुकको आर्थिक विकासमा योगदान पुऱ्याउन सक्ने तीनवटा खम्बामध्ये एउटा खम्बा सहकारी हो र सहकारीको सञ्चालन, व्यवस्थापन स्थानीय सरकारको प्राथमिक काम हो भन्ने स्वीकारोक्ती संविधानमा देखिन्छ ।

२) यस दस्तावेजमा सोही सैद्धान्तिक आधार अन्तर्गत सहकारी व्यवस्थापन तथा उद्यमशीलताको विकासमा स्थानीय तहहरूले के कस्तो प्रयत्न गरेका छन् भनेर खोतल्ने प्रयास गरिएको छ । यसको लागि दोलखाका स्थानीय तहहरूको सहकारी ऐन बने नबनेको अवस्था र चालु आर्थिक वर्षको नीति, कार्यक्रम तथा बजेटको सामान्य विश्लेषण गरिएको छ । सोही विश्लेषणका आधारमा समृद्धिको राष्ट्रिय लक्ष्यका लागि स्थानीय तह र सहकारीबिच कस्ता क्षेत्रमा सहकार्य गर्न सकिन्छ भन्ने बारेमा नीतिगत सुझावहरू राखिएका छन्।

## स्थानीय सरकार र सहकारीको सम्बन्ध : नीतिगत आधार

३) नेपालको संविधान, २०७२ को राज्यको आर्थिक सिद्धातमा "सार्वजनिक, निजी र सहकारी क्षेत्रको सहभागिता तथा विकासमार्फत उपलब्ध साधन र स्रोतको अधिक्रम परिचालनद्वारा तीव्र आर्थिक वृद्धि हासिल गर्दै दीगो आर्थिक विकास गर्ने तथा प्राप्त उपलब्धीहरूको न्यायोचित वितरण गरी आर्थिक असमानताको अन्त्य गर्दै शोषणरहित समाजको निर्माण गर्न राष्ट्रिय अर्थतन्त्रलाई आत्मनिर्भर, स्वतन्त्र तथा उन्नतिशील बनाउँदै समाजवाद उन्मुख स्वतन्त्र र समृद्ध अर्थतन्त्रको विकास गर्ने राज्यको आर्थिक उद्देश्य हुनेछ' उल्लेख छ । अर्थात, अर्थतन्त्रलाई आत्मनिर्भर बनाउन, मुलुकलाई आर्थिक समृद्धिको दिशा दिन तथा श्रोत साधनको परिचालन गरी विद्यमान गरिबी न्यूनीकरणमा सहकारी क्षेत्रको अस्तित्व संविधानले स्वीकार गरेको छ ।

४) दीगो विकासका लक्ष्य २०१६–२०३० का लागि तय भएका र नेपालले स्वीकार गरेका १७ वटा लक्ष्यहरू मध्ये लक्ष्य १ को गरिबी न्यूनीकरण, लक्ष्य २ को भोकमरीको अन्त्य र खाद्य सुरक्षा, लक्ष्य ५ को लैगिंक समता र महिला सशक्तिकरण, लक्ष्य ७ को उर्जामा सुलभ पहुँच, लक्ष्य ८ को दीगो आर्थिक वृद्धि, रोजगारी तथा उत्पादनशीलतामा वृद्धि, लक्ष्य ९ को औद्योगीकरण, लक्ष्य १० को असमानताको न्यूनीकरण, लक्ष्य १२ को दीगो उपभोग र उत्पादनका ढाँचा, लक्ष्य १४ को प्राकृतिक श्रोतको दीगो र भरपर्दो उपयोग, लक्ष्य १५ को दीगो पर्यावरणीय संरक्षण तथा लक्ष्य १६ को शान्तिपूर्ण र समावेशी समाज निर्माणको लक्ष्य सिधा सहकारीसँग सम्बन्धित छन् । सहकारी संस्थाहरूको उचित सञ्चालन व्यवस्थापनले उपरोक्त दीगो विकासका लक्ष्यहरू हासिल गर्नका लागि सहायक सिद्ध हुन सक्छन् ।

५) भर्खरै मात्र स्वीकृत र आगामी २०७६ श्रावण १ देखि कार्यान्वयन हुने मुलुकको पन्ध्रौं योजना विगतको राजनीतिक संक्रमणपछि निर्मित स्थायी सरकारले तयार गरेको दशौं योजना पछिको पहिलो पाँच वर्षीय योजना हो । २५ वर्षको दीर्घकालीन सोचसहितको यस पञ्चवर्षीय योजनाले समृद्ध नेपाल, सुखी नेपालीको लक्ष्य राखेको छ । समृद्ध नेपाल

तर्फ ४ वटा सूचकहरू उच्च र समतामूलक राष्ट्रिय आय, मानवपूँजी निर्माण तथा सम्भावानको पूर्ण उपयोग, सर्वसुलभ तथा आधुनिक पूर्वाधार र सघन अन्तर आवद्धता तथा उच्च र दीगो उत्पादन तथा उत्पादकत्व निर्धारण गरिएका छन् भने सुखी नेपालीको लक्ष्यका लागि परिष्कृत तथा मर्यादित जीवन, सभ्य र न्यायपूर्ण समाज, स्वस्थ र सन्तुलित पर्यावरणीय पद्धति, सुशासन, सबल लोक्तन्त्र तथा राष्ट्रिय एकता र सम्मान गरी छ वटा सूचकहरू तय गरिएका छन् । योजनाको उपरोक्त लक्ष्य हासिल गर्न तीनवटै तहका सरकारका भूमिकाहरू पहिचान गरिएका छन् । लक्ष्य हासिलका लागि योजनाको दस्तावेजमा उल्लेख गरिएका स्थानीय सरकारका भूमिकाहरू निम्न अनुसार छन्ः

क) संघ र प्रदेशको विकासको सोच, लक्ष्य र उद्देश्य प्राप्त गर्न सहयोग र सहकार्य,

ख) लगानीको वातावरण निर्माण गरी स्थानीय अर्थतन्त्रको विस्तार,

ग) एकीकृत सोचका साथ स्थानीय पूर्वाधार, सामाजिक र ग्रामिण विकास,

घ) रोजगारी अभिवृद्धि र मानव संशाधन विकास र

ङ) जनताको नजिकको सरकारका रूपमा प्रवाभकारी सेवा प्रवाहको आधार केन्द्र

साथै पन्ध्रौ योजनाको आधारपत्रमा उच्च आर्थिक वृद्धिका लागि सहकारीको भूमिका भनी १) न्यून आय वर्गको जनताको बचत परिचालन २) स्थानीय श्रोत, साधन श्रम पूँजी र सीपको परिचालन ३) उद्यमशीलता अभिवृद्धिबाट स्वरोजगार र रोजगारीको सिर्जना र ४) आधार वस्तु तथा सेवा प्रवाहमा सहयोगीको भूमिका सहकारीमार्फत हुने उल्लेख छ ।

६) नेपाल सरकारले प्रत्येक वर्ष संसदमा पेश गर्ने नीति तथा कार्यक्रम र वार्षिक बजेट समेतमा आर्थिक समृद्धिका लागि सहकारीको भूमिकालाई महत्वका साथ प्रस्तुत गरिएको देखिन्छ । भर्खरै आर्थिक वर्ष २०७६/७७ का लागि संसदमा प्रस्तुत नीति कार्यक्रम समेतमा यस बारेमा उल्लेख छ । 'सहकारी क्षेत्रलाई अर्थतन्त्रको महत्वपूर्ण स्तम्भको रूपमा विकास गरिनेछ । सहकारीलाई उद्यमशीलता विकास र कृषिको आधुनिकीकरणमा परिचालन गरिनेछ । सहकारी संस्थाको नेतृत्वमा कृषि उत्पादन, प्रशोधन तथा बजारीकरण कार्यक्रम सञ्चालन गरिनेछ । भूमिको चक्लाबन्दीलाई प्रोत्साहित गरी करार खेती, सहकारी खेती र सामुहिक खेती गर्न उत्प्रेरित गरिनेछ ।

## विद्यमान स्थानीय अवस्था

७) उपरोक्त कानूनी, सैद्धान्तिक र योजनागत आधारहरू अन्तर्गत रही दोलखाका स्थानीय तहहरूमा रहेका विभिन्न प्रकारका सहकारी संस्थाहरूको प्रकार अनुसार जम्मा संख्या, सहकारी संस्थाहरूको पूँजीको अवस्था, स्थानीय तहले आफ्ना क्षेत्र/भूगोलभित्रका सञ्चालनमा आइरहेका र नयाँ दर्ता हुने दुवै खाले सहकारीहरूलाई नियमन गर्न ऐन कानूनको तर्जुमा गरे नगरेको अवस्थाको सामान्य विश्लेषण गर्न खोजिएको छ ।

८) जिल्लाभरि रहेका सहकारीको संख्यात्मक अवस्था हेर्दा सबैभन्दा बढी संख्यामा २२१ वटा कृषि सहकारी छन् भने दोश्रोमा १९८ वटा बचत तथा ऋण सहकारी छन् । यसैगरी बहुउद्देश्यीय र उपभोक्ता सहकारी पनि उल्लेख्य संख्यामा देखिन्छन् । सहकारी संख्याको पालिकागत अवस्था हेर्दा सबैभन्दा बढी भीमेश्वर नगरपालिकामा १०८ वटा छन् भने दोश्रोमा बैतेश्वर गाउँपालिकामा ६६ वटा छन् । संख्याको दृष्टिले सबैभन्दा कम सहकारी बिगु गाउँपालिकामा ३८ वटा छन् । स्थानीय तह तथा किसिम अनुसारका जिल्लाभारीका सहकारी संख्या तालिका नं. १ मा दिइएको छ ।

तालिका नं. १

**स्थानीय तह अन्तर्गत रहेका किसिम अनुसारका सहकारी संख्या**

| स्थानीय तहको नाम | बचत तथा ऋण | उपभोक्ता | बहुउद्देश्यीय | कृषि | अन्य | जम्मा |
|---|---|---|---|---|---|---|
| भीमेश्वर नगरपालिका | ४० | ३ | १९ | ३८ | ८ | १०८ |
| बिगु गाउँपालिका | १३ | ४ | २ | १६ | ३ | ३८ |
| बैतेश्वर गाउँपालिका | २४ | ४ | ५ | ३२ | १ | ६६ |
| तामाकोशी गाउँपालिका | २७ | ८ | २ | २२ | २ | ६१ |
| जिरी नगरपालिका | २० | ३ | ० | २१ | ० | ४४ |

| स्थानीय तहको नाम | बचत तथा ऋण | उपभोक्ता | बहुउद्देश्यीय | कृषि | अन्य | जम्मा |
|---|---|---|---|---|---|---|
| शैलुङ्ग गाउँपालिका | १४ | ३ | २ | २७ | १ | ४७ |
| गौरीशंकर गाउँपालिका | १३ | ६ | २ | २० | ४ | ४५ |
| कालिञ्चोक गाउँपालिका | २६ | ३ | ३ | २४ | २ | ५८ |
| मेलुङ गाउँपालिका | २१ | ३ | ३ | २१ | २ | ५० |
| **जम्मा** | **१९८** | **३७** | **३८** | **२२१** | **२३** | **५१७** |
| **प्रतिशत** | **३८.३०** | **७.१६** | **७.३५** | **४२.७५** | **४.४५** | **१००.००** |

*श्रोतः सहकारी जागरण पुस्तिका, २०७४*

९) सहकारीको पूँजीगत संरचना मजबुत देखिन्छ । सबै सहकारीहरूको कूल शेयर पूँजी ५६ करोड भन्दा बढी छ भने कूल बचत ४ अरब ६४ करोड ९३ लाख २१ हजार ७ सय १२ रहेको छ । यस्तै सहकारीहरूले कूल ५ अरबभन्दा बढी ऋण कारोबार गरेका छन् भने कूल कारोबार ६ अरबको हाराहारीमा छ । सहकारीहरूको पूँजीगत संरचना तालिका नं. २ मा दिइएको छ ।

**तालिका नं. २**

**सहकारीहरूको पूँजीगत संरचना**

| क्र.सं. | वित्तीय सूचक | रकम रू. | कैफियत |
|---|---|---|---|
| १ | कूल शेयर पूँजी | ५६,४५,२४०३० | आ.व. २०७३/७४ सम्मको |
| २ | कूल बचत | ४,६४,९३,२१,७१२ | |
| ३ | कूल कर्जा/ऋण | ५,०१,९४,३७,६९७ | |
| ४ | कूल कारोबार | ५९०,६९,६१,३९१ | |

*श्रोतः सहकारी जागरण पुस्तिका, २०७४*

१०) स्थानीय तहलाई सहकारी नियमन गर्ने अधिकार संविधानत प्राप्त भएपछि सोको लागि आवश्यक कानूनी र नीतिगत सुधारतर्फ केही गर्न खोजिएको भए पनि र संस्थागत विकासतर्फ भने ध्यान पुगेको अवस्था देखिँदैन । कानूनी र नीतिगत व्यवस्थातर्फ धेरैजसो स्थानीय तहहरूले सहकारी ऐन तर्जुमा गरेको अवस्था छ । स्थानीय तहले तयार गरेको ऐन स्थानीय संसद (नगर/गाउँसभा) बाट अनुमोदन भएको र स्थानीय राजपत्रमा प्रकाशन गरेको देखिन्छ । दोलखाको सन्दर्भमा यहाँका ९ वटा स्थानीय तहहरूमध्ये ६ वटा तहले सहकारी सम्बन्धी ऐन तर्जुमा गरी वेबसाइटमा राखिएको छ । सोही ऐनकै अधारमा पालिकाको क्षेत्रमा दर्ता हुन चाहने सहकारी संस्थाहरू स्थानीय तहका कार्यालयमै दर्ता गर्न शुरू भएको छ । वेब पेजमा सहकारी ऐन उपलब्ध भएका स्थानीय तहहरूको विवरण तालिका नं. ३ मा दिइएको छ ।

**तालिका नं. ३**

**स्थानीय तहले जारी गरेका सहकारी ऐनहरू**

| क्र.सं. | स्थानीय निकाय | स्थानीय राजपत्रमा प्रकाशित सहकारी ऐनको नाम | गाउँ सभा अनुमोदन मिति | राजपत्रमा प्रकाशित मिति | ऐनका दफा संख्या |
|---|---|---|---|---|---|
| १ | मेलुङ गाउँपालिका | सहकारी ऐन, २०७५ | २०७५।०२।०५ | खण्ड २ संख्या २ २०७५।०२।११ | १०१ |
| २ | बैतेश्वर गाउँपालिका | बैतेश्वर गाउँपालिकाको सहकारी ऐन, २०७५ | २०७५।११।०५ | खण्ड १ संख्या ४ २०७५।११।१० | १०१ |
| ३ | शैलुङ्ग गाउँपालिका | शैलुङ्ग गाउँपालिकाको सहकारी ऐन, २०७४ | ऐनमा नखुलेको | खण्डः १, संख्या ०२ २०७४।१०।२८ | १०३ |
| ४ | भीमेश्वर नगरपालिका | सहकारी ऐन, २०७४ | ऐनमा नखुलेको | खण्ड १ संख्या ५ २०७५/०१/८ | १०७ |

| क्र.सं. | स्थानीय निकाय | स्थानीय राजपत्रमा प्रकाशित सहकारी ऐनको नाम | गाउँ सभा अनुमोदन मिति | राजपत्रमा प्रकाशित मिति | ऐनका दफा संख्या |
|---|---|---|---|---|---|
| ५ | तामाकोशी गाउँपालिका | सहकारी ऐन, २०७५ | ऐनमा नखुलेको | खण्ड १ संख्या ७ २०७५/०१/२६ | १०७ |
| ६ | जिरी नगरपालिका | जिरी नगरपालिकाको सहकारी ऐन, २०७५ | ऐनमा नखुलेको | खण्ड २ संख्या ९ २०७५।०३।२८ | १०१ |
| ७ | कालिञ्चोक गाउँपालिका | अनुपलब्ध | | | |
| ८ | बिगु गाउँपालिका | अनुपलब्ध | | | |
| ९ | गौरीशङ्कर गाउँपालिका | मस्यौदा तयारी | | | |

*श्रोतः सम्बन्धित स्थानीय तहहरूको वेब पेज*

११) स्थानीय तहहरूले आफ्नो वार्षिक नीति, कार्यक्रम तथा बजेट तयार गर्दा केही पालिकाहरूको नीति, कार्यक्रम र बजेटबिच तादात्म्यता देखिएको, केही पालिकाहरूको नीति भएको तर कार्यक्रम तथा बजेट नभएको, केही पालिकाहरूको नीति नभई कार्यक्रम मात्र भएको तथा केही पालिकाहरूको नीति तथा कार्यक्रम भएको तर बजेट प्रस्ताव नगरिएको अवस्था देखिन्छ । सहकारी मार्फत उद्यमशीलता विकास, स्वरोजगारी तथा रोजगारीको सिर्जना, आय आर्जनमा वृद्धि गरी समृद्धिको लक्ष्यतर्फ उन्मुख गरिनुपर्नेमा नीति कार्यक्रम तथा बजेट त्यतातर्फ केन्द्रित भएको देखिँदैन । स्थानीय तहहरूले बेबसाइटमा राखिएका सूचनालाई आधार मानी गरिएको विश्लेषणको अवस्था तालिका नं. ४ मा दिइएको छ ।

**तालिका नं. ४**

**स्थानीय तहको सहकारीसँग सम्बन्धित नीति, कार्यक्रम तथा बजेटको अवस्था**

| स्थानीय तहको नाम | सहकारीसँग सम्बन्धित नीति | कार्यक्रम | बजेट |
|---|---|---|---|
| भीमेश्वर नगर पालिका | • सहकारीसँगको साझेदारीमा कृषि उपज केन्द्र स्थापना तथा विपन्न वर्गका लागि उद्योग व्यवसाय तालिम तथा बिउ पूँजीका लागि अनुदान उपलब्ध गराइनेछ । | • सहकारीसँगको साझेदारीमा कृषि उपज बजारीकरण तथा प्रवर्द्धन (संकलन तथा वितरण केन्द्र) | रू. ५,००००० |
| कालिञ्चोक गाउँपालिका | • एक वडा एक सहकारी अनिवार्य गर्ने आवश्यक नभएका वा वडामा धेरै भएमा वा संचालनमा नरहेका सहकारीहरूलाई मर्जर गर्ने व्यवस्था गरिनेछ ।<br>• सहकारी उत्पादनमूलक क्षेत्रमा कर्जा लगानी गर्ने प्रोत्साहन गर्ने साथै सहकारीहरूको वार्षिक प्रतिवेदन पेश गर्नको लागि व्यवस्था मिलाइनेछ ।<br>• गाउँपालिका भित्रका सहकारीहरूको अनुगमन तथा मुल्याङ्गनको लागि पालिका स्तरीय सहकारी अनुगमन समिति निर्माण गरिनेछ । | • कृषि सहकारीमार्फत कृषि उत्पादन प्रदर्शनी कार्यक्रम | रू. १,५०,००० |
| बिगु गाउँपालिका | • समूहमा आधारित साना सिंचाई निर्माण तथा मर्मत सम्भार, सहकारीमा आधारित साना सिंचाई पूर्वाधार निर्माण, प्लास्टिक पोखरी तथ सिञ्चित क्षेत्र विस्तार गरिनेछ।<br>• कृषियन्त्र औजार उपकरणमा अनुदान दिने र कृषि सहकारीसँगको सहकार्यमा सामुदायिक बिउ बिजन प्रशोधन तथा वितरण कार्यलाई सहजीकरण गर्न सामुदायिक सेवाकेन्द्र स्थापना गरिनेछ ।<br>• कृषक समूह तथा सहकारीहरूलाई बिउ भण्डारण घर, उपकरण खरिद सहयोग, थ्रेसिङ फ्लोर निर्माण र बिउ बिजन आत्मनिर्भर कोष स्थापनामा सहयोग गरिनेछ ।<br>• कृषक, कृषि उद्यमी समूह र कृषि सहकारीलाई प्रतिफलमा आधारित प्रोत्साहन अनुदान गरिनेछ । | कार्यक्रम नदेखिएको | |

| स्थानीय तहको नाम | सहकारीसँग सम्बन्धित नीति | कार्यक्रम | बजेट |
|---|---|---|---|
| गौरीशंकर गाउँपालिका | | उपलब्ध नभएको | |
| जिरी नगरपालिका | • निजी तथा सहकारी क्षेत्रको संलग्नता बढाउँदै करार सम्झौतामा आधारित तथा सहकारी खेतीलाई प्राथमिकता दिई मूल्य श्रृंखला पद्धति अनुसार उत्पादनदेखि बजारीकरणसम्मका कार्यक्रमहरू एकीकृत रूपमा सञ्चालन गरिनेछ ।<br>• गुणस्तरीय उत्पादन सामाग्रीहरू र कृषि यान्त्रीकरणका लागि कृषकमैत्री औजार, उन्नत प्रविधि एवं सुलभ कृषि कर्जाको लागि कृषक सहकारीको क्षमता विकास तथा अन्य निकायसँग समन्वय गरिनेछ ।<br>• प्राङ्गारिक खेतीका सम्भावित वस्तुको र क्षेत्रहरूको पहिचान एवं उत्पादन वृद्धि गरी उत्पादित प्राङ्गारिक वस्तुको ब्राण्ड प्रवर्द्धन गर्दै राष्ट्रिय तथा अन्तर्राष्ट्रिय स्तरमा बजारीकरण गर्न सहकारी संस्थाहरूलाई प्रोसाहित गरिनेछ । | • सहकारी खेती अुदवा, बेसार, अकबरे खुर्सानी आदि । जिरी नपा-९<br>• सहकारी सुदृढीकरण<br>• सहकारी अन्तरक्रिया | ९७०००० |
| बैतेश्वर गाउँ पालिका | नीति तथा कार्यक्रममा सहकारी सम्बन्धी नीति नभएको | सहकारी खेती साना सिंचाई तथा मल बीउ ढुवानी कार्यक्रम | |
| तामाकोशी गाउँपालिका | • गाउँपालिका सरहदभित्र रहेका कृषि सहकारी, बचत तथा ऋण सहकारी तथा बहुउद्देश्यीय सहकारी तथा अन्य सामाजिक संघसंस्थाहरूलाई थप व्यवस्थित गर्ने कार्यलाई निरन्तरता दिइनेछ ।<br>• सहकारी तथा अन्य सामाजिक संघ संस्थालाई समाजका व्यक्तिहरूको आर्थिक सामाजिक विकाससँग आवद्ध गराई उपयुक्त प्रस्तावपत्रका आधारमा अनुदान प्रदान गर्ने कार्यलाई निरन्तरता दिइनेछ ।<br>• गाउँपालिका भित्रका कृषि सहकारीहरूलाई उत्पादनमुलक क्षेत्रमा लगानी गर्न प्रोत्साहित गरी सहकारीहरूको परिचालनबाट परम्परागत कृषि प्रणालीलाई आधुनिक र व्यवसायिक बनाउने नीति अवलम्बन गरिनेछ । | • सहकारी र संस्थाहरूसँग सहकार्य<br>• अवलोकन भ्रमण<br>• सहकारी कर्मचारी लेखा तालिम | १५००००० |

*श्रोतः सम्बन्धित स्थानीय तहहरूको वेब पेज*

१२) स्थानीय तहहरूले यस आर्थिक वर्ष २०७५/७६ का लागि वार्षिक बजेट तयार गर्दा सहकारी क्षेत्रको विकासका लागि छुट्याएको बजेट उद्यमशीलताको विकास, स्वरोजगारी र रोजगारीको सिर्जना, आयआर्जनमा वृद्धि जस्ता आर्थिक क्षेत्रमा परिवर्तन ल्याउन सक्ने गरी विनीयोजन गरेको अवस्था देखिँदैन । स्थानीय तहको क्षेत्रभित्र क्रियाशील सहकारीहरूसँग उत्पादन तथा रोजगारी सिर्जना गर्ने क्षेत्रमा सम्बन्धित सहकारीसँग लागत साझेदारीमा कार्यक्रम सञ्चालन गर्ने तर्फ पनि ध्यान पुगेको अवस्था छैन । जिल्लाका ९ वटा स्थानीय तहहरूले सहकारी क्षेत्रको विकासका लागि छुट्याइएको बजेट ती तहहरूको चालु वर्षका लागि विनीयोजित बजेटको शून्य दशमलव एक प्रतिशत हाराहारी देखिन्छ । स्थानीय तहहरूको कूल बजेट र सहकारीका लागि छुट्याइएको बजेटको अवस्था तालिका नं. ५ मा दिइएको छ ।

**तालिका नं. ५**

**स्थानीय तहको कूल बजेट र सहकारीका लागि विनीयोजित बजेटको अवस्था**

| क्र.सं. | स्थानीय तह | आर्थिक वर्ष २०७५।०७६ को कुल बजेट | सहकारीका लागि विनीयोजित बजेट | प्रतिशत |
|---|---|---|---|---|
| १ | भीमेश्वर नगरपालिका | ७५७०५९००० | ५००००० | ०.०६६ |
| २ | कालिञ्चोक गाउँपालिका | ४९८९३२००० | १५०००० | ०.०३० |

| क्र.सं. | स्थानीय तह | आर्थिक वर्ष २०७५।०७६ को कुल बजेट | सहकारीका लागि विनीयोजित बजेट | प्रतिशत |
|---|---|---|---|---|
| ३ | बिगु गाउँपालिका | ३७२७७०८००० | NA | ०.००० |
| ४ | गौरीशंकर गाउँपालिका | ३२९७६०००० | NA | ०.००० |
| ५ | जिरी नगरपालिका | ३९५३८६००० | ९७०००० | ०.२४५ |
| ६ | बैतेश्वर गाउँपालिका | ३६७८८०००० | NA | ०.००० |
| ७ | तामाकोशी गाउँपालिका | ४२५५८२००० | १५००००० | ०.३५२ |
| ८ | मेलुङ गाउँपालिका | ४२५५८२००० | २१००००० | ०.४९३ |
| ९ | शैलुङ्ग गाउँपालिका | ३४४१७५००० | १०००००० | ०.२९१ |
| **जम्मा** | | **३९१७०६४०००** | **६२२००००** | **०.१५९** |

*श्रोतः सम्बन्धित स्थानीय तहहरूको वेब पेज*

१३) स्थानीय तहलाई सहकारीहरूको नियमन तथा व्यवस्थापन गर्ने अधिकार संविधानतः स्थानीय तहहरूले प्राप्त गरेपछि तथा आफ्ना भौगोलिक क्षेत्रका सहकारीहरू हस्तान्तरण भइसकेपछि सोही अनुसार गाउँपालिका कार्यालयभित्र सहकारी शाखाको स्थापना, आवश्यक जनशक्ति व्यवस्थापन तथा उनीहरूको क्षमता विकास जस्ता कार्यक्रमहरूमा स्थानीय तहको सोच भएको स्थानीय तहहरूको वार्षिक नीतिमा देखिँदैन र कार्यक्रम तथा बजेटले पनि त्यस्तो संकेत गर्दैनन् । आफ्ना गाउँपालिकामा विद्यमान जनशक्तिलाई पनि सहकारी अनुगमन गर्न क्षमता विकास गरेको अवस्था विद्यमान छैन ।

१४) सहकारीहरूको सञ्चालन व्यवस्थापनको जिम्मेवारी स्थानीय तहलाई संविधानले नै प्रदत्त गरेपछि धेरैजसो स्थानीय तहहरूले सहकारी नियमनका लागि ऐन समेत पारित गरेको अवस्था छ । सहकारी संस्था दर्ता, अनुगमन, नियमन, एकीकरण जस्ता कामहरू गर्नका लागि स्थानीय तहमा शाखाको तथा जनशक्तिको व्यवस्थापन भएको देखिँदैन । दोलखाको सन्दर्भमा एउटा पनि गाउँ/नगरपालिकामा सहकारी शाखा स्थापना नभएको र सहकारीको काम गर्नका लागि जिम्मेवार अधिकृतको व्यवस्था वा भइरहेको कुनै कर्मचारीलाई सहकारी शाखा समेतको काम गर्ने गरी भनी लिखित जिम्मेवारी दिइएको अवस्था छैन । गाउँ/नगर पालिकाको सहकारी शाखा तथा जनशक्ति व्यवथापनको अवस्था तालिका नं. ६ मा दिइएको छ ।

**तालिका नं. ६**

**स्थानीय तहमा सहकारी शाखा तथा जनशक्ति व्यवस्थापनको अवस्था**

| क्र.सं. | स्थानीय तह | सहकारी शाखा भए नभएको | सहकारी अधिकृत/ निरीक्षक भए नभएको | निश्चित कर्मचारीलाई जिम्मेवारी तोकिएको/ नतोकिएको | कैफियत |
|---|---|---|---|---|---|
| १ | भीमेश्वर नगरपालिका | नभएको | नभएको | नतोकिएको | तदर्थ तरिकाले मात्र काम हुँदै आएको |
| २ | कालिञ्चोक गाउँपालिका | नभएको | नभएको | नतोकिएको | |
| ३ | बिगु गाउँपालिका | नभएको | नभएको | नतोकिएको | |
| ४ | गौरीशंकर गाउँपालिका | नभएको | नभएको | नतोकिएको | |
| ५ | जिरी नगरपालिका | नभएको | नभएको | नतोकिएको | |
| ६ | बैतेश्वर गाउँपालिका | नभएको | नभएको | नतोकिएको | |
| ७ | तामाकोशी गाउँपालिका | नभएको | नभएको | नतोकिएको | |
| ८ | मेलुङ गाउँपालिका | नभएको | नभएको | नतोकिएको | |
| ९ | शैलुङ्ग गाउँपालिका | नभएको | नभएको | नतोकिएको | |

*श्रोतः सम्बन्धित गाउँपालिकासँगको अन्तरक्रिया*

## सबलता, कमजोरी, अवसर तथा चुनौतीहरू

१५) मुलुक समृद्धिको लक्ष्यतर्फ अग्रसर छ । दीगो विकासको लक्ष्यदेखि मुलुकको पन्ध्रौ पञ्चवर्षीय योजना, संघीय सरकारका वार्षिक नीति तथा कार्यक्रम सबै त्यतै लक्षित छन् । मुलुकमा स्थायी सरकार छ, राजनीतिक संक्रमणको अवधि सकिएको छ, स्थानीय तहमै शासन सञ्चालनको डाडु पन्यु आइपुगेको छ, युवाशक्ति विदेश भासिनुभन्दा मुलुकमै केही गरौं, सहकारीहरू लगानी गर्न तयार हुने र स्थानीय सरकारले सो अनुसारको वातावरण तयार गर्ने काममा भूमिका खेल्यो भने स्वदेशभित्र स्वरोजगारी सिर्जना गर्न सकिने जस्ता सबल पक्षहरू हाम्रासामु छन् ।

१६) संघीय सरकारका युवा ऋण, विना धितो ऋण, उद्यमशीलता ऋण, शैक्षिक प्रमाणपत्र धितो ऋण, सुलभ कृषि ऋण जस्ता विगतका ऋणका प्याकेजहरू हावादारी सावित हुनु, आफ्नै माटोमा उपलब्ध भएका कामहरू गर्न नखोज्नु तथा विदेशमा जस्तोसुकै फोहोरी र जोखिम काम गर्न तयार हुने युवाको मानसिकता हुनु, बाँझो जमीन उर्बरा बनाउनेतर्फ तीनै तहका सरकारका कार्यक्रम मौन बस्नु, कृषि सहकारीहरू पनि उत्पादन, प्याकेजिङ, ग्रेडिङ र बजारीकरणमा भन्दा संकलन गरिएको बचत ऋण लगानी गरी प्राप्त हुने नाफामै रमाउनु हाम्रा उद्यमशीलता विकास हुन नसक्नुका केही कमजोरीहरू हुन् ।

१७) हामीसँग सुन फलाउन सकिने पर्याप्त जमीन हुनु, जिल्लाभित्रैका सहकारीहरूमा ५ अरबभन्दा बढी लगानीयोग्य निक्षेप हुनु, केही त परिवर्तन गरौं भन्ने भावनाको उर्जाशील नेतृत्व स्थानीय तहमा हुनु, जिल्लाका सबैजसो वडाहरू सडक नेटवर्क विस्तार हुनु आदि हामीभित्र उद्यमशीलता विकास गर्न सकिने महत्वपूर्ण अवसरहरू हुन् ।

१८) सहकारीहरूमा लगानीको प्याटर्न परिवर्तन नहुनु (उद्यम गर्नेलाई भन्दा बैदेशिक रोजगारीका लागि दिइने ऋणलाई सुरक्षित मान्ने प्रवृत्ति), पछिल्लो समय स्थानीय सरकारको नेतृत्व प्रति जनताको गुनासा बढ्दै जानु, स्थानीय सरकारको श्रोत अनुत्पादक क्षेत्रमा खर्च हुनु, सहकारी संस्था र स्थानीय तहवीचको सम्बन्ध अपेक्षित मजबूत हुन नसक्नु, स्थानीय तहमै सहकारी अनुगमन तथा नियमन गर्ने दक्ष जनशक्तिहरू नहुनु आदि यस क्षेत्रका प्रमुख चुनौतीहरू हुन् ।

## स्थानीय तह र सहकारीको सहयात्रा

१९) आर्थिक समृद्धिको राष्ट्रिय लक्ष्यमा पुग्न राज्य सञ्चालनका सबै अंगहरू अन्ततः निस्वार्थ तरिकाले लाग्नैपर्छ । स्थानीय तह राज्य सञ्चालनमा जनताको सबैभन्दा नजिक रहेको सरकार हो भने सहकारी संस्थाहरू राज्यको तीन खम्बे आर्थिक नीतिको एउटा दरिलो खम्बा नै भयो । आर्थिक रूपान्तरण, उद्यमशीलता विकास, रोजगारी तथा आयआर्जन वृद्धिका लागि सहकारीहरू नै जनताको सबैभन्दा नजिक र पहुँचमा भएका वित्तीय संस्था हुन् । यी दुवै निकायलाई एउटै उद्देश्यमा एउटै बाटोमा हिँडाउन सकिएको अवस्थामा लक्ष्य दुर्भेध्य छैन । यसका लागि स्थानीय तहले सोही अनुसार रणनीति बनाउन जरूरी छ ।

२०) स्थानीय तहहरूले अगामी आर्थिक वर्षदेखि नै कार्यान्वयन गर्ने गरी सहकारी संस्थाहरूसँग उद्यमशीलताको क्षेत्रमा सहकार्य गर्न सकिने क्षेत्र पहिचान गर्ने सो अनुसार कार्यक्रम तर्जुमा गर्ने, कार्यक्रम कार्यान्वयनका लागि आवश्यक बजेटको व्यवस्था तथा सफल कार्यान्वयनका लागि स्थानीय तहले सरकार–सहकारी साझेदारीका नीति तथा कार्यक्रम बनाउन जरूरी छ ।

२१) उद्यमशीलता विकास, स्वरोजगार तथा रोजगारी अवसरको सिर्जना, आयआर्जनमा उल्लेखनीय वृद्धि तथा अन्ततः समृद्ध नेपाल सुखी नेपालको दीर्घकालीन लक्ष्यमा पुग्न सबै स्थानीय सरकारले तत्कालिन र दीर्घकालीन कार्ययोजना निर्माण गर्ने र आगामी वर्षबाट कार्यान्वयनमा जानका लागि आवश्यक पूर्वतयारी गर्न जरूरी छ ।

- गाउँपालिकामा सहकारी शाखा स्थापना गर्ने, शाखाको लागि आवश्यक जनशक्ति व्यवस्थापन गर्ने ।

## आगामी सोच र तत्कालिन कार्ययोजना

२२) दीर्घकालीन सोच

- प्रत्येक गाउँ नगरपालिकाले आफ्नो दीर्घकालीन सोच वा दुरदृष्टि तयार गर्ने ।
- विकासका क्षेत्रगत उद्देश्यहरू निर्धारण गर्ने ।
- आर्थिक उद्देश्यका लागि सहकारी क्षेत्रको भूमिका एकीन गर्ने ।
- आवधिक कार्यक्रम तर्जुमा गर्ने ।

२३) तत्कालिन कार्य योजना

- सबैजसो स्थानीय तहहरूको लक्ष्य राष्ट्रिय लक्ष्य समृद्ध नेपालसँग मिल्ने गरी समृद्धिकै लक्ष्य राखेको उपलब्ध दस्तावेजहरूबाट देखिन्छ । आर्थिक समृद्धिका लागि सबै क्षेत्रमा आर्थिक रूपान्तरण गर्न जरूरी छ । आर्थिक रूपान्तरणका लागि स्थानीय तहहरूले सहकारीमार्फत निर्वाह गर्नसक्ने भूमिकाहरूको खोजी गर्ने ।
- दीगो विकासका लक्ष्यहरू, पन्ध्रौ योजनाका आधारपत्रमा उल्लेखित लक्ष्य तथा दीर्घकालीन सोच, संघीय सरकारको चालु वर्षको नीति कार्यक्रम, प्रदेश सरकारको नीति कार्यक्रम तथा आफ्नो गाउँपालिकाको विशिष्टता समेतको आधारमा स्थानीय तह र सहकारीबिच साझेदारी गर्न सकिने क्षेत्रको पहिचान गर्ने ।
- साझेदारी र सहकार्यका क्षेत्र पहिचान भएपछि साझेदारीका योजना तथा रणनीतिहरूको तर्जुमा गर्ने ।
- स्थानीय तहहरूको परिकल्पना गरेका दीर्घकालीन लक्ष्य प्राप्तिका लागि तत्कालका कार्ययोजना र दीर्घकालीन कार्ययोजना के हुन सक्छन् ? ती कार्ययोजनाका बारेमा नीतिगत के पूर्वतयारी गर्नु पर्ने हो सो अध्ययन गरी आगामी आर्थिक वर्षबाटै के कस्ता योजनाहरू राख्न सकिने हो तत्काल छलफल चलाउने ।
- आर्थिक रूपान्तरणमार्फत समृद्धिको लक्ष्यमा पुग्नका लागि स्थानीय सरकारका संकल्प र प्रतिवद्धताहरू यकीन गर्ने ।
- स्थानीय तहहरूले नीति, कार्यक्रम तथा बजेटमा तादात्म्यता कायम गर्ने ।
- देखाउनकै लागि भए पनि नीति वक्तव्यमा सहकारी सम्बन्धी नीतिगत केही कुरा राख्ने तर त्यसलाई सम्बोधन गर्ने गरी कार्यक्रम प्रस्ताव र बजेट विनीयोजन नगर्ने पद्धतिमा सुधार गर्ने ।

## स्थानीय सरकारका संकल्प र प्रतिवद्धताहरू

२४) उद्यमशीलताको विकासमार्फत आर्थिक समृद्धिका लागि दोलखाका स्थानीय सरकारहरू देहायका प्रतिवद्धता जाहेर गर्दछन्:

- स्थानीय सरकार र सहकारीको सहकार्यता : उद्यमशीलता विकासमा प्रतिवद्धता ।
- सीपमा लगानी: जीवनभरिका लागि आम्दानी ।
- जमीन बाँझो हुँदैन: गरिबीले छुँदैन ।
- बजेट विनीयोजनमा कम्तीमा ५ प्रतिशत सीप विकास, उद्यमशीलता र रोजगारी सिर्जनाका लागि छुट्याइने ।

## निष्कर्ष

२५) देशका ग्रामिण तथा शहरी दुवै क्षेत्रमा सहकारी संस्था अब जीवन पद्धति र परिवारको वित्तीय साथी भईसकेको छ । सहकारी नभएको सम्भवत देशमा कुनै पनि वडा छैन । यो अवस्थाको सदुपयोग गरी स्थानीय तह र सहकारीको सहकार्यबाट रोजगारीको सिर्जना, स्वरोजगारीको विकास, आर्थिक उपार्जन तथा उद्यमशीलताको विकास गर्न सकिने अवस्था छ र हाम्रो सन्दर्भमा यो आर्थिक रूपान्तरणको प्रारम्भिक विन्दू पनि हो । यो पक्षलाई विचार गरी स्थानीय तहले आफ्नो अल्पकालीन र दीर्घकालीन योजनामा सहकारीसँग सहकार्य गर्ने गरी रणनीति तर्जुमा गर्न जरूरी छ ।

### सन्दर्भ सामाग्रीहरु


- नेपालको संविधान, २०७२ ।
- दीगो विकासक लक्ष्य २०१६–२०३०, राष्ट्रिय योजना आयोग ।
- पन्ध्रौं योजनाको आधारपत्र, २०७६/७७–२०८०/८१, राष्ट्रिय योजना आयोग ।
- संसदमा प्रस्तुत नेपाल सरकारको आ.व. २०७६/७७ को नीति तथा कार्यक्रम: २० बैशाख, २०७६ ।
- गाउँ तथा नगरपालिकाका नीति, कार्यक्रम तथा बजेटहरू, २०७५/०७६ ।
- संघीय सहकारी ऐन तथा स्थानीय तहका सहकारी ऐनहरू ।

# दीगो विकास लक्ष्य प्राप्तिका लागि सहकारी क्षेत्रको कार्ययोजना

– सरिता तिमसिना भट्टराई
सञ्चालक, राष्ट्रिय सहकारी बैंक लि.

**पृष्ठभूमि**

सहकारीको जन्म हुनुमा बेलायती नागरिक रवर्ट ओवेनको महत्वपूर्ण भूमिका छ । तत्कालिन समयमा बेलायतको गरिबी, बेरोजगारी, भोकमरी र विभेदीकरण जस्ता समस्याबाट मुक्ति पाउन तथा आर्थिक, सामाजिक, नैतिक परिवर्तन गर्न उनले सहकारीलाई माध्यम बनाए । उनकै प्रेरणाबाट बेलायतका रोचडेलीहरूले सन् १८४४ मा रोचडेली इक्विटेवल पायनीयर नामक सहकारी संस्थाको स्थापना गरे । औद्योगिक क्रान्तिका कारण नै बेलायतमा सहकारी संस्थाको स्थापना भएको हो ।

नेपालको सन्दर्भमा वि.सं. २०१३ चैत्र २० गते चितवनको बखान ऋण सहकारी समितिको स्थापनाबाट सहकारीको शुरूवात भएको हो । २०१३ सालदेखि सहकारी संस्था फाट्ट फुट्ट देखिए पनि सहकारी ऐन २०४८ जारी भएपछि भने धेरै संस्थाहरूको स्थापना भयो । संविधानले समेत सहकारीलाई ३ खम्वे अर्थनीतिको एउटा महत्वपूर्ण अंग स्वीकारेको छ । हाल देशमा विभिन्न प्रकृतिका ३४ हजार ५ सय १२ सहकारी संस्थाहरू, (सहकारी विभागको २०७५ फागुन सम्मको रेकर्डमा ३४ हजार ७ सय ३७ वटा) ६९ वटा जिल्ला सहकारी संघ,२५६ वटा जिल्लास्तरीय सहकारी संघ, २० वटा केन्द्रीय संघहरू र एउटा मात्र सहकारी बैंक र शीर्षस्थ निकायमा एउटा राष्ट्रिय सहकारी महासंघ कार्यरत छन् ।

विश्वभरिकै अभ्यासलाई अध्ययन गर्दा अर्थव्यवस्था भित्र ३ प्रकारका व्यावसायहरू भएको पाइन्छ सरकारी, सहकारी र निजीक्षेत्र । सोही अनुरूप नेपालको संविधानमा समेत ३ खम्बे अर्थनीतिमा सहकारी समेटिएको छ । देशमा वेरोजगारी, गरिबी बढ्नुको पछाडि साधन र स्रोतहरूको वितरण सीमित जनतामा हुनुले हो । सहकारी व्यवसाय यस्तो व्यवसाय हो, जसले उत्पादित साधन स्रोत अर्थात आम्दानीलाई बहुसङ्ख्यक जनतामा वितरण गर्दछ । उत्पादित वस्तु तथा सेवाको आम्दानी बहुसङ्ख्यक जनतामा वितरण हुँदा उनीहरूको बजार मागको प्रवृतिमा वृद्धि आउँछ , जसले गर्दा उत्पादनमा वृद्धि हुन्छ, सरकारको राजस्व बढ्छ, रोजगारी बढ्छ र अर्थतन्त्रमा समृद्धि आउँछ । यो एउटा यस्तो चक्र हो जसले अर्थतन्त्रको विकासमा सहयोग गर्दछ । सैद्धान्तिक रूपमा पनि यो एउटा सामाजिक न्याय स्थापित गर्ने व्यावसाय हो । नेपालको कुल गार्हस्थ उत्पादनमा सहकारी क्षेत्रको करिव ४ प्रतिशत जति योगदान छ । उत्पादन तथा सेवा व्यावसायमा सहकारीहरू अगाडि बढिरहेका छन् । नेपाल जस्तो सानो जनसङ्या र भुगोल भएको देशमा आज ३४ हजारभन्दा बढी सहकारीहरू दर्ता भइ कार्यरत छन भने ६० लाखभन्दा बढी व्यक्तिहरू सहकारीको सदस्य छन । करिव ६०,००० भन्दा बढी जनताले प्रत्यक्ष रोजगारी पाइरहेका छन्, स्वरोजगारी त लाखौंको सङ्ख्यामा छन् । साहु महाजन, जमीनदारबाट ३६ प्रतिशतभन्दा बढीमा कर्जा लिन बाध्य जनताहरू आज आफनै संस्थाबाट सर्वसुलभ दरमा, बिना झन्झट कर्जा प्राप्त गरी आफ्ना सानातिना गर्जो टार्नुका साथै ठूलाठूला व्यावसाय गरेर सफल भई समृद्ध भएका छन् । सहकारीमा जातजाति, क्षेत्र, वर्ण, आर्थिक हैसियतका आधारमा सदस्यता वा कारोबारमा भेदभाव गर्न पाइँदैन, भने राज्यले नियमन तथा नीयन्त्रन गर्न जरूरी छ । सदस्यहरूका आवश्यकताका आधारमा तालिम तथा शिक्षा प्रदान गरी उनीहरूलाई स्वावलम्वन गराएका छन् । युवाहरू विदेशिएर रित्तिएका गाउँहरूमा चाडबाढहरूमा भएको शुन्यतालाई चिर्दै सामुहिक तीर्थ ब्रत, चाडबाढ मिलन, बनभोज अर्थात जनतामा खुसी ल्याउनुका साथै सामाजिक तथा सांस्कृतिक परिवर्तनमा सहकारी संस्थाहरूको अतुलनीय योगदान रहेको छ । महिलाहरूलाई दोस्रो दर्जाको नागरिक मान्ने हाम्रो समाजमा पछिल्लो दशकमा धेरै सहकारी संस्थाहरूमा महिलाहरूको सहभागिता र महिला सहकारीहरूको स्थापनाले महिला सशक्तिकरणमा ठूलै परिवर्तन ल्याएको छ । देशमा समृद्धिको लागि आर्थिक परिवर्तनले मात्र पुग्दैन यसको लागि सामाजिक र सांस्कृतिक परिवर्तन गर्न समेत जरूरी छ, त्यसको लागि सहकारी व्यावसाय अपरिहार्य छ ।

संयुक्त राष्ट्र संघले दीगो विकासका लागि सहकारी समेत एउटा महत्वपूर्ण अंगको रूपमा हुनसक्छ भन्ने सोच समेत बनाएको छ । त्यसैले संयुक्त राष्ट्र संघले अन्तर्राष्ट्रिय सहकारी महासंघलाई साथ लिएर अघि बढेको छ । सोही अनुरूप महासंघले आफ्ना सदस्य सहकारी संस्थामार्फत सदस्य र समुदायको विकास गर्न तोकिएका लक्ष्य अनुसार काम गर्न विश्वभरिका संस्थालाई आह्वान गरेको छ । दीगो विकास गर्नका लागि दीगो समाज बनाउनुपर्ने हुन्छ । यी दुवै नितान्त फरक तर

अन्तरसम्बन्धित विषय हुन । दीगो समाज भन्नाले समाजलाई सुरक्षित, सुव्यवस्थित र प्रत्येक व्यक्ति प्रत्येक प्रति जिम्मेवार र जवाफदेही हुनुपर्छ भन्ने मान्यता छ । सहकारी संस्थाहरूले यसैलाई आधार मानेर आफ्नो समुदायमा भएका सदस्यहरूको आधारभूत आवश्यकता पूरा गराई सबैमा स्वथ्य, सुरक्षित र सुखी बनाउनुपर्छ । त्यस्तै प्राकृतिक श्रोत साधन सुरक्षित, सम्वर्द्धित र प्रवर्द्धित गराउने र अर्थतन्त्र गतिशील भइ रोजगारी र लगानीका अवसरहरू प्राप्त गर्दै जीवनस्तरमा सुधार आएको हुनुपर्छ । त्यस्तै सामाजिक जीवनका लागि आवश्यक बानी व्यहोरा, आचरण, चेतना, ज्ञान सीप र स्वभाव अनुकुल भै प्रत्येक व्यक्ति अर्कोप्रति जिम्मेवार र इमान्दार हुनुपर्छ । समाज विकासको आधारशीला भनेको मानव समृद्धि, वातावरणीय समृद्धि र आर्थिक समृद्धि नै हुन् ।

## के हो त दीगो विकास लक्ष्य ?

सन् १९८० देखि बढेको आर्थिक एकीकरणबाट विश्व अर्थतन्त्रमा केही मुलुकहरूले आर्थिक वृद्धि गरे तापनि सोही अनुरूप रोजगारी सिर्जना गर्न सकेनन् । बरू पूूँजीले आयको शोषण भएर असमानताको खाडल बढ्यो, गरिबी केही घटे पनि गरिबहरूको जीवनस्तर सुध्रन सकेन । त्यसैले सन् १९९० को दशकभरि यो विषयलाई ध्यान दिइयो र विकास भनेको मानव विकासका सामाजिक, लैङ्गिक, वातावरणीय पक्षलाई आर्थिक वृद्धिले मात्र नसमेट्ने र दीगो विकास पनि हुन नसकिने देखेर यसलाई नीतिगत रूपमा सम्वोधन गर्न मानव विकास प्रतिवेदनहरू तयार गर्न लागियो । यसको मुख्य उद्देश्य भनेको प्रत्येक परिवार तथा मानवबिच कुनै प्रकारको भेदभाव नहोस् भन्ने रहयो ।

त्यसकै आधारमा सन् २००० मा तत्कालिन १८९ सदस्य राष्ट्रका प्रतिनिधिहरू विश्वका लागि लक्ष्यहरू तय गर्न भेला भएका थिए । जसलाई सहश्राब्दी विकास लक्ष्य नाम दिएको थियो । त्यसमा ८ वटा लक्ष्य सन् २०१५ सम्ममा हासिल गरिसक्नुपर्ने थियो । नेपालले पनि यसलाई अनुमोदन गऱ्यो र सो अनुसारको राष्ट्रिय लक्ष्य बनाई प्राप्तिका लागि निरन्तर प्रयास गऱ्यो । सबै सदस्य राष्ट्रहरूमा लक्ष्य प्राप्तिका लागि निरन्तर प्रयास भए तापनि खासगरी विकासोन्मुख देशहरूमा प्रत्यक्ष पुग्न नसकेको कारणबाट ती लक्ष्यहरू पूर्ण रूपमा प्राप्त हुन सकेनन् । जति सफल भए त्यसमा सहकारीमार्फत गरेका क्रियाकलापहरू अधिक देखियो । विश्व अर्थ व्यवस्थाले सहश्राव्दी विकासका लक्ष्यहरू सफल पार्न सहकारी अर्थ व्यवस्थाको स्मरण गऱ्यो । सहकारी अर्थ व्यवस्थाको निरन्तरता र अन्तर्निहित चरित्रको कारण व्यवसायको यो पद्धति दीगो विकासका लागि अपरिहार्य रहेको निष्कर्ष रहयो । फलस्वरूप सन् २००९ को संयुक्त राष्ट्रसंघको महासभाले विश्वभर सन् २०१२ लाई अन्तर्राष्ट्रिय सहकारी वर्ष मनाउने घोषणा गऱ्यो ।

अन्तर्राष्ट्रिय सहकारी महासंघले सहकारी वर्ष समापन साथै सन् २०१३ मा सन् २०११ देखि सन् २०२० सम्म आगामी एक दशकको लागि सहकारी सम्बन्धी योजना (Blueprint for A Cooperative Decade) सफल बनाउन नेपाललगायत सम्पूर्ण देशहरूलाई आह्वान गऱ्यो । यो योजनालाई संघले vision 2020 नामाकरण गऱ्यो । सहकारी महासंघले जारी गरेको यो योजनाले मुख्यतः ५ विषयहरूः सहभागिता (Participation), दीगोपना (Suqmainability), पहिचान (Identity), वैधानिक संरचना (Legal framework) र पूँजी (Capital) समेटेको छ ।

सन् २०१५ मा भएको सहश्राब्दी विकास लक्ष्यको समीक्षाबाट विश्वकै विकासोन्मुख देशलाई लक्ष्यित गरी लक्ष्य तय गर्नुपर्छ भन्ने निष्कर्ष निकाल्दै सो को निरन्तरताका लागि सन् .२०१५ सेप्टेम्वरमा १९३ सदस्य राष्ट्रहरूको सहभागितामा सम्पन्न संयुक्त राष्ट्र संघको शिखर सम्मेलनले पारित गरेर १ जनवरी २०१६ देखि २०३० सम्मका लागि विकास लक्ष्य हासिल गर्न 'दीगो विकास लक्ष्य २०३०' घोषणा गऱ्यो । यो घोषणामा १७ वटा लक्ष्य पूरा गर्न १६९ वटा परिणात्मक लक्ष्यहरू र २३२ वटा विश्वव्यापी सूचक निर्धारण गर्यो । जसमा कार्यसूचीका रूपमा आर्थिक, सामाजिक र वातावरणीय तीनओटा खम्बाहरूमा भर पर्छ । यी लक्ष्यहरूले विशेष गरी (मानव) People, (समृद्धि) Prosperity, (विश्वव्रम्हाण्ड) Planet, (शान्ति) Peace र (साझेदारी) Partnership ५ वटा क्षेत्रलाई केन्द्रित गरेको छ ।

दीगो विकास लक्ष्य तयारीको लागि नेपालसहित ८३ वटा राष्ट्रिय सर्भेक्षणहरू भए भने ७० लाख व्यक्तिहरू यसमा संलग्न भए जुन संयुक्त राष्ट्रसंघको इतिहासमा मानिसलाई प्रयोग गरिएको सबैभन्दा ठूलो अभियान हो ।

## नेपालमा दीगो विकास लक्ष्य

दीगो विकासका लक्ष्यलाई विश्वभर आफ्ना उद्देश्य र योजनामा राखी विश्वलाई दीगो बनाउन के गर्ने भनेर सम्बन्धित सबै क्षेत्र तयार रहन संयुक्त राष्ट्र संघले सन २०१५ सेप्टेम्वर २५मा यसको आह्वान गरेको हो । सोही समयमा सन् २०१५

को अप्रिलमा गएको ठूलो भूकम्पपश्चात् नेपालका राजनैतिक दलहरू नयाँ संविधान घोषणा गरेर मुलुकमा लम्बिँदै गएको द्वन्द्वपछिको सङ्क्रमणकाललाई अन्त्य गर्न सहमत भए । यसै अनुरूप नेपालले पनि यसलाई अनुमोदन गरी यसको मर्मलाई नयाँ संविधानमा समावेश गर्‍यो । विद्यमान संविधानले फराकिलो आधारको दीगो समृद्धि हासिल गर्ने चाहनाहरूसहित संघीय गणतन्त्रात्मक समावेशी शासन व्यवस्थालाई संस्थागत गरेको छ । यस अनुसार नै दीगो विकास लक्ष्यले सन् २०३० सम्ममा नेपाललाई न्यायपूर्ण तथा समृद्ध मुलुक बनाउने परिकल्पना गरेको छ ।

नेपालले यो घोषणालाई सन् २०१६ मै अनुमोदन गरी यो घोषणाउन्मुख लक्ष्य प्राप्तिका लागि आर्थिक सामाजिक क्षेत्रलाई लक्ष्यित गरी सम्बन्धित निकायसँग पहल गरेर हालसम्म मुख्य रूपमा अब सबै क्षेत्रले यही दीगो विकासका लक्ष्य अनुरूप योजना बनाउनुपर्छ भन्ने सोच बनेको छ । यो ३ वर्षमा एउटा आर्थिक तथा सामाजिक जीवनस्तर वृद्धि गर्ने योजना तयार गर्ने गराउने उपलब्धीहरू हासिल भएका छन् ।

संयुक्त राष्ट्र संघले परिभाषित गरेको अति कम विकसित देशहरूको सूचीबाट विकासशील राष्ट्रहरूमा सन् २०३० अगावै नेपाल स्तरोन्नति भइसक्नेछ भन्ने अपेक्षा राखिएको छ । नेपालले सन् २००० र २०१५ को बिचमा हासिल गर्ने भनी राखिएका सहस्राब्दी विकास लक्ष्यहरूमध्ये सबैजसो लक्ष्यहरू पूरा गरिसकेको छ । तथापि, यस्तो उपलब्धी सामाजिक समूहहरू, लैङ्गिक र भौगोलिक क्षेत्रहरूको दृष्टिकोणले समान रूपमा हासिल हुन सकेको छैन । यिनै उपलब्धीहरूको जगमा नेपालले सन् २०३० सम्ममा दीगो विकासका लक्ष्यहरू सबै नभए पनि अधिकांश हासिल गर्नेछ । क्षेत्रीय अर्थतन्त्रलाई वातावरण परिवर्तन विरूद्ध लड्दै उर्जाका स्वच्छ स्रोतहरूतर्फ लैजान नेपालले महत्वपूर्ण भूमिका निभाउनेछ । यसका लागि नेपालको सर्वसम्मत कार्यसूची हुनु आवश्यक छ ।

दीगो विकास लक्ष्य दीर्घकालीन विकास गन्तव्य भएकाले केन्द्र, प्रदेश र स्थानीय सरकारले विभिन्न संघ संस्था, सहकारी, निजी तथा सम्बन्धित निकायसँग समन्वय गर्दै यसलाई पुर्णता दिन जरूरी छ जसले आउँदो दुई दशकसम्म कम्तीमा ७ प्रतिशतको तीव्र आर्थिक वृद्धिदर हासिल गर्ने दिशातर्फ नेपाललाई अगाडि बढाउँछ । यसको साथसाथै सुदृढ मानव क्षमताहरू विकास गर्ने प्रयत्नहरू र मुलुकको वातावरण र प्राकृतिक स्रोतहरूलाई संरक्षण गर्दै प्राकृतिक तथा आर्थिक संकट बहन गर्नसक्ने बनाउन राष्ट्रिय उत्थानशीलता (Resilience) लाई बढाउनु जरूरी छ । यस प्रकार विकासका साधनहरूको गतिलाई अगाडि बढाउने मात्र नभई विकासको साध्यलाई उत्तिकै रूपमा भरथेग तथा पोषण गर्ने दुरदृष्टि पनि हुनुपर्छ । यसो गर्नु भनेको जनताका छनौटहरू बढाउँदै लैजानु हो । नेपालका लागि दीगो विकास लक्ष्यहरू अनुरुप नेपाली उत्कृष्ट घटनाक्रमहरू र कोसेढुङ्गाहरूको जगमा स्वदेशमै बनेको मार्गचित्र आवश्यक हुन्छ ।

नेपालमा राष्ट्रिय योजना आयोगले सरोकारवाला तथा विषय विज्ञहरूसँगको छलफलपछि एउटा प्रतिवेदन तयार पारेको छ जसमा समयवद्ध सूचकहरू निर्धारण गरी चौधौं योजना र यस वर्ष पन्ध्रौं योजना (२०७६/७७ देखि २०८०/८१) को आधारपत्र तर्जुमा गरेको छ । जसमा संविधानमा व्यवस्था भएका मौलिक हक, राज्यका सिद्धान्त र नीति, दीगो विकास लक्ष्य समेतलाई ध्यान दिएर योजना कार्यान्वयन गर्ने सोच बनाएको छ । वर्तमान सरकारको "समृद्ध नेपाल, सुखी नेपाली" को परिकल्पना पूरा गर्न आगामी वि.सं २१०० सम्मको २५ वर्षे दीर्घकालीन सोच यसको प्रारम्भिक स्वरूप हो । उक्त सोच हासिल गर्न वार्षिक योजना बनाएर कार्य गर्न लागिएको हो । योजनाले लिएको उद्देश्य पनि विश्व सँगसँगै हाम्रो देशमा पनि आर्थिक वृद्धि होस् भन्ने हो जसका लागि दीगो विकासका विभिन्न रणनीति र उपलब्धीसमेत निर्धारण गरिएको छ । सन् २०३० सम्म कार्यान्वयनमा आउने सबै तहका वार्षिक कार्यक्रमले दीगो विकासका लक्ष्यलाई समेट्दै सहकारी, सरकारी, गैरसरकारी क्षेत्रबाट आउने योजना तथा क्रियाकलाप सबैले यो लक्ष्यको मर्मलाई आत्मसात गर्नुपर्ने हुन्छ ।

राज्यले आर्थिक वर्षको विकास कार्यक्रममा आयोजनाको विश्लेषण गर्ने संयन्त्रका रूपमा दीगो विकास लक्ष्य सूचक अभ्यासमा ल्याउन थालेको छ । राष्ट्रिय योजना आयोगको १५ औं योजनाका लागि तयार पारिएको आधारपत्र अनुसार दीगो विकास लक्ष्य कार्यान्वयन गर्न वार्षिक रू. २० खर्ब २५ अर्ब लाग्ने अनुमान गरेको छ। जसमा वार्षिक औसत रकम मध्ये रू. ११ खर्ब ११ अर्ब सरकारी क्षेत्रवाट, रू. ७खर्ब ३९ अर्ब निजी क्षेत्रवाट, रू. ८७ अर्ब सहकारी तथा गैरसरकारी क्षेत्रबाट र रू. ८८ अर्क घर परिवार क्षेत्रबाट लगानी गर्नु पर्ने अनुमान गरेको छ ।

सहश्राव्दी लक्ष्यहरू हासील गर्न सरकारी लगानीको प्रमुख भूमिका हुन्थ्यो भने दीगो विकास लक्ष्य प्राप्त गर्न सार्वजनिक, निजी, सहकारी एवं सामुदायिक क्षेत्रको उत्तिकै भूमिका हुनेछ ।

दीगो विकास लक्ष्य सहश्राव्दी विकास लक्ष्यकै निरन्तरता हो यसले गरिव देशहरूलाई पनि समेटेर लगेको छ जबकि सहश्राव्दी लक्ष्य मुख्यतया धनी देशहरूमा मात्र केन्द्रित थियो ।

### दीगो विकास लक्ष्य प्राप्तिमा सहकारी क्षेत्रको भूमिका

नेपालको संविधानले संघीय गणतन्त्रात्मक शासन प्रणालीको माध्यमबाट सुशासन, विकास र समृद्धि हासिल गरी स्वाधीन, समुन्नत तथा समाजवादउन्मुख अर्थतन्त्र विकास गर्ने परिकल्पना गरेको छ । त्यस्तै संविधानको धारा ५० (३) मा सार्वजनिक, निजी र सहकारी क्षेत्रको सहभागिता तथा विकास मार्फत समाजवाद उन्मुख स्वतन्त्र र सम्वृद्ध अर्थतन्त्रको निर्माण गर्ने र धारा ५१ (घ १) मा सार्वजनिक, निजी र सहकारी क्षेत्रको सहभागिता र स्वतन्त्र विकासमार्फत राष्ट्रिय अर्थतन्त्र सुदृढ गर्ने भनी उल्लेख भएको छ । संविधानका यी बुँदाहरूले मुलुकको दीगो विकासमा जोड दिएको छ । संविधान बमोजिम राज्यका तिनै तहले सहकारी क्षेत्र हेर्ने अधिकार छ । ७५३ वटै स्थानीय तह र ७ वटा प्रदेशमा संघीय ऐनको प्रावधानको प्रतिकुल नहुने गरी सहकारी ऐन बनाउनु पर्नेछ ।

नेपालले गत ३ वर्षदेखि दीगो विकास लक्ष्य प्राप्तिका लागि सहकारी भन्ने मुल नारा लिएर सहकारी क्षेत्रले दीगो समाज निर्माणमा दिइरहेको योगदान र अब खेल्नुपर्ने भूमिकाका विषयमा विभिन्न कार्यक्रममार्फत बहस, छलफल तथा विवेचना गरिरहेको छ । दीगो विकासका लागि सहकारीमार्फत समावेशी विकास, महिला सशक्तिकरण, युवा स्वरोजगार, व्यवसायिक क्षमताको विकास, व्यवसायिक ढाँचामार्फत गरिबी निवारण, वित्तीय सक्षमता र कृषि क्षेत्रमा सशक्तिकरण जस्ता थप अनगिन्ती कामहरू गर्न सकिने अवसर सिर्जना गरेको छ । यस खण्डमा दीगो विकासका लक्ष्यहरू र सहकारी क्षेत्रले गर्नसक्ने योगदानका विषयहरू प्रस्तुत गरिएको छ ।

### १. गरिबीको अन्त्य




**सन् २०३० सम्ममा गरिबीको अन्त्य गरिसक्ने ।**

### सहकारीको भूमिका

- सबैलाई न्यूनतम सामाजिक सुरक्षाको दायरामा ल्याउने । आर्थिक श्रोत साधनमा पहुँच बढाउने, गरिबीका कारण आर्थिक संकट, सामाजिक समस्या र जलवायु परिवर्तनसँग जुध्न सक्ने क्षमताको विकास गर्ने ।
- लघु वित्त कार्यक्रममार्फत कृषि उद्योग र उत्पादन क्षेत्रमा लगानी गर्ने ।
- गरिव, असहाय तथा कृषकहरूलाई सहकारीमा आवद्ध गराउने ।
- सदस्यहरूलाई सहकारीमार्फत सुपथ मुल्यमा मल बीउ उपलब्ध गराई उत्पादनमा जोड दिने ।
- वित्तीय साक्षरता कार्यक्रममार्फत आम्दानी खर्चको व्यवस्थापन गर्न सिकाउने साथै फजुल खर्च गर्न रोक लगाउने ।
- गरिबी निवारण सम्बन्धित कार्यक्रम तथा साधन श्रोतहरूको र समान अधिकारको लागि सचेतनामुलक कार्यक्रम सञ्चालन गर्ने तथा वकालत गर्ने ।
- सामाजिक र आर्थिक अवसरहरूलाई समान पँहुँच पुग्ने गरी नीतिहरू बनाउन बजेट विनीयोजन भएको सुनिश्चित गर्ने ।

साथै आफ्नो कार्यक्षेत्र भएका सहकारी संस्थाका सदस्यहरूलाई स्थानीयस्तरमा विकास निर्माणका लागि सहभागी हुन र गरिबी निवारणका बारेमा जानकारीमूलक कार्यक्रम र सोही अनुसार काम गर्न विशेष योजना बनाउने । सदस्यहरूको गरिबी हटाउन रोजगारी सिर्जना हुने कार्यक्रमका लागि पहल गर्ने ।

## २. भोकमरिको अन्त्य




**सन् २०३० सम्ममा भोकमरी तथा कुपोषण अन्त्य गर्ने । सबैलाई खाद्य सुरक्षा प्रदान गर्ने, कृषि उत्पादकत्व १५ वर्षमा दोव्वर गर्ने ।**

### सहकारीको भूमिका

हामीले बनाउने विभिन्न योजनामध्ये सदस्यहरूको जीवनस्तर उकास्ने कार्यक्रमसहितको योजना तयार गर्दै पौष्टिक र सन्तुलित आहार र व्यवहारबारे ज्ञान हासिल गराउने, सदस्यहरूलाई दैनिक उपभोग्य खाद्य सामाग्रीहरूको बचावटबाट भोकमरीको अन्त्य गर्न सकिन्छ भन्ने जस्ता कार्यक्रमलाई प्राथमिकतामा राखी सदस्य र संस्थाबिचको सम्बन्धलाई प्रगाढ बनाउने ।

## ३. स्तरीय स्वास्थ्य र सम्मुन्नत समाज




**सन् २०३० सम्ममा सबैको स्वस्थ्य जीवन र चिरायुको लागि मातृ मृत्युदर घटाउने । नवजात शिशु र बाल मृत्युदर घटाउने, रोगको प्रकोप नीयन्त्रण गर्ने, सुखी स्वस्थ परिवारको परिवार कल्याण कार्यहरू गर्ने, सुर्ती तथा मदिराको नीयन्त्रण गर्ने साथै स्वास्थ्य वीमालाई वढावा दिन पहल गर्ने । आफ्ना सदस्यहरूका लागि सहकारी अस्पातल खोली सर्वसुलभ स्वास्थ जाँचका लागि सेवा प्रवाह गर्ने ।**

### सहकारीको भूमिका

सदस्यहरूको स्वास्थ्यसँग जोडिएका विभिन्न कार्यक्रमहरू धुम्रपान, अत्यधिक मदिरा सेवन र नकारात्मक जीवनशैलीका असर हरूबारे शिक्षित गराउने, एचआइभी एड्सलगायत अन्य सरूवा रोगको जोखिम, सरसफाई र यससँग सम्बन्धित योजनालाई प्राथमिकतामा राख्दै आफ्नो व्यवसायलाई सुरक्षित गर्ने । सदस्यहरूको स्वास्थ्य स्थितिबारे जानकार हुन समय समयमा केही डाटा लिएर उपचारका लागि पहल गर्ने योजना बनाउने ।

## ४. गुणस्तरीय शिक्षा




**सन् २०३० सम्ममा यो लक्ष्यले समावेशी, समतामूलक एवं गुणस्तरीय शिक्षाको प्रत्याभूति गर्ने ।**

सबै बालबालिकाले नि:शुल्क, समतायुक्त र गुणस्तरीय रूपमा प्राथमिक र माध्यमिक शिक्षा सुनिश्चित रूपमा प्राप्त गर्ने, सदस्य परिवारमा शिक्षाको अवस्था र पहुँच, निरन्तर सहकारी शिक्षा वित्तीय साक्षरता शिक्षा, सीपमुलक तालिम तथा दीगो विकास

लक्ष्यका लागि सदस्यहरूको भूमिका आदिका बारेमा सिकाउने । सहकारी क्षेत्रले सहयोग पुऱ्याउन सक्ने क्षेत्रका बारेमा जानकारी दिने ।

**सहकारीको भूमिका**

सम्पूर्ण सदस्यहरूको शिक्षामा सुनिश्चित गरेर आवश्यकता अनुसार प्राविधिक तथा व्यवसायिक तालिमबारे योजना बनाउने । सदस्य परिवारमा छोरा र छोरी दुवैलाई अनिवार्य शिक्षा दिने बारे जानकारी गराउने, संस्थामा सहकारी सम्बन्धी विभिन्न पत्र पत्रिका र पुस्तकालयको व्यवस्थापन गर्ने, शिक्षा र तालिमलाई निरन्तर सञ्चालन गर्ने योजना बनाउने र सोही अनुरूप व्यवस्थापनलाई कार्यान्वयन गर्न लगाउने ।

## ५. लैङ्गिक समानता




**सन् २०३० सम्ममा लैङ्गिक समानता हासिल गर्ने, महिला विरूद्धका सबै भेदभावहरूको अन्त्य गर्ने, लैङ्गिक हिंसाको अन्त्य गर्ने, बालविवाह, महिला बेचबिखनको अन्त्य गर्ने, राजनैतिक, व्यवसायिक र सामाजिक जीवनमा महिलाहरूलाई नेतृत्वदायी भूमिकामा पुरयाउने, महिला सहकारी संस्थाको विकास, सहकारी संस्थामा महिलाको उच्च सहभागिता, आयआर्जनमार्फत महिला सशक्तिकरणमा पहुँच पुऱ्याउने, पुरूष र महिलाहरूमा बराबरी कामको महत्वबारे सदस्यहरूलाई जानकारी गराउने ।**

**सहकारीको भूमिका**

सदस्य तथा कर्मचारीहरूका लागि लैङ्गिक समानता सुनिश्चित गर्ने नीति तथा कार्यविधि तयार गर्ने । महिला, किशोरी तथा बालबालिकामाथि हुने सबे प्रकारका भेदभाव हिंसा सम्बन्धी सेमिनार, गोष्ठी साथै महिला पुरुष एकसाथ काम गर्नसक्ने आधारसहित क्षमता अभिवृद्धि तालिम योजना बनाई कार्यान्वयन गर्न लगाउने ।

## ६. स्वच्छ पिउने पानी तथा सरसफाइ




**सबैका लागि सुरक्षित पानी र सफाई सुविधा सुनिश्चित गर्ने, सबैले समान ढंगले र दीगो प्रकारले पानी र सफाइको सुविधा पाउनुपर्ने, सुरक्षित पानीको श्रोतको एकिकृत ढंगले विकास गर्ने, नदी नाला, ताल तलैया, पोखरी आदिको संरक्षण गर्ने कार्यमा आ आफ्नो क्षेत्रबाट पहल गर्ने, सामुदायीक रूपमा खानेपानी सुविधाको संरचनाको व्यवस्था गर्ने, सहकारी संस्थाका सदस्यहरूलाई स्वच्छ खानेपानीको फाइदाबारेमा जानकारी गराइ सो अनुरूप कार्य गर्न लगाउने । सहकारी र जनसहभागितामा खानेपानी आयोजनाहरू सञ्चालन गर्ने ।**

**सहकारीको भूमिका**

शुद्ध खानेपानी र सरसफाइसँग सम्बन्धित निकायहरूसँग सहकार्य गर्दै सदस्यहरूका लागि स्वच्छ पिउने पानीको पहुँच र महत्व, ढल निकास र फोहरमैला व्यवस्थापनबारे अभिमुखीकरण कार्यक्रमको योजना बनाई व्यवस्थापनलाई कार्यान्वयन गर्न लगाउने ।

## ७. स्वच्छ उर्जामा सहज पहुँच




**सबैलाई दीगो, सहज पहुँचयुक्त र आधुनिक उर्जाको सुविधा पुऱ्याउने, सबैलाई नवीकरणीय उर्जाको पहुँच पुऱ्याउने, सहकारी संस्थाहरूमार्फत जलविद्युत, सौर्य उर्जा, वायु उर्जा, जैविक उर्जालगायतका आधुनिक उर्जा उत्पादनमा संस्थागत रूपले अगाडि बढ्ने । वैकल्पिक उर्जाबारे सदस्यहरूलाई जानकारी गराउने ।**

### सहकारीको भूमिका

सदस्यहरूको खर्च घटाउनका लागि वैकल्पिक, किफायती, आधुनिक उर्जाको श्रोतको अन्वेषण र विकासका लागि योजना बनाई सम्बन्धित निकायसँग सहकार्य गर्न पहल गर्ने । उर्जा बचत र खपतमा ग्यँासभन्दा स्थास्थ्यका लागि इन्डक्सन बढी किफायती र स्वस्थकर भएकोले यस बारेमा सहकारी शिक्षाको विषयमा समावेश गर्ने ।

## ८. मर्यादित रोजगार तथा आर्थिक वृद्धि




**यस लक्ष्य अन्तर्गत दीगो, समावेशी आर्थिक वृद्धि हासिल गर्ने उत्पादक रोजगारीका अवसरहरू प्रदान गर्ने र मर्यादित कामको सुनिश्चितता गर्ने, उत्पादक रोजगारीका लागि न्यायोचित ज्याला दिने, समाजलाई प्रतिकुल असर नपर्ने र आत्मसम्मानका साथ स्थानीय तहमा पाइने उत्पादन र संस्कृतिलाई रोजगारीको माध्यम बनाउने, आफूसँग भएको सीपलाई व्यवसायमा रूपान्तरण गर्ने, स्वरोजगारीका लागि श्रम र कामप्रति सकारात्मक सोच सम्बन्धमा तालिम तथा गोष्ठी सञ्चालन गर्ने ।**

### सहकारीको भूमिका

सदस्यहरूलाई व्यवसायी र स्वरोजगार बनाउने उद्देश्यले मर्यादित काम र कामको सुरक्षित वातावरण बनाउने योजना बनाई कार्यान्वयन गर्न पहल गर्ने । सदस्यहरूको व्यक्तिगत बचतलाई लघु उद्यम सुरु गर्न प्रोत्साहित गर्ने योजना बनाई कार्यान्वयन गर्न लगाउने ।

## ९. उद्योग पुर्वाधार र नवीन सिर्जना



यस लक्ष्यअनुसार भरपर्दो र टिकाउ पुर्वाधारको विकास, समावेशी औद्योगीकरण र अन्वेषणको प्रवर्द्धन गर्ने विषयहरू समेटिएका छन् । यो लक्ष्य प्राप्तिका लागि साना तथा मझौला उद्योगहरूको विकास गर्न लघुकर्जा प्रदान गरी सहयोग गर्ने, अन्य वित्तीय संघसंस्थाहरूले समेट्न नसकेको क्षेत्र पहिचान गरी त्यस्ता उद्योगलाई सहकारीमार्फत परिचारलन गरी दीगो विकासमा सहयोग पुर्‍याउने ।

### सहकारीको भूमिका

सदस्यहरूलाई साना व्यवसायको विकासका लागि ऋण र प्राविधिक सहयोग गर्ने, व्यवसायमा आधुनिक प्रविधि जोड्न सिकाउने । सबै सदस्यहरूलाई इन्टरनेट र नयाँ प्रविधिमा पहुँच पुर्‍याउन सोही प्रकारको तालिम योजना बनाई कार्यान्वयन गर्न लगाउने ।

## १० असमानता न्यूनिकरण




यस लक्ष्यले राष्ट्रहरूबीच, मुलुकभित्र र परिवारबिच असमानता घटाउने, यसका लागि आय श्रृंखलामा सबैभन्दा तल्लो आयस्तर हुने जनताको आयवृद्धि मुलुकको औसत प्रतिव्यक्ति आयवृद्धिभन्दा उच्च रहनुपर्ने, सहकारीका सदस्यहरूको सबै उमेर, लिङ्ग, जाति, समुदाय र न्यून आर्थिकस्तरका व्यक्तिहरूमा समान अवसर र आर्थिक वृद्धिको लाभमा सहभागिता जनाउनु पर्ने ।

### सहकारीको भूमिका

असमानता न्यूनिकरण गर्न र सामाजिक परिवर्तन गर्न सदस्यहरूका लागि आर्थिक वृद्धिमा पहुँच पुर्‍याउने खालका सेवा प्रदान गर्ने योजना बनाई कार्यान्वयन गर्न लगाउने ।

## ११. दीगो शहर र समुदायहरू




यस अन्तर्गत शहर र वस्तीहरू समावेशि सुरक्षित र दीगो बनाउने, सबैलाई आवास र आधारभुत सुविधाहरू प्रदान गर्ने, सबैका लागि सुलभ सुरक्षित एवं आयले धान्न सक्ने यातायात सेवाको व्यवस्था गर्ने शहरिकरणलाई व्यवस्थित गर्ने र शहरी वातावरण स्वच्छ राख्ने जस्ता विषय समेटिएका छन् । सहकारीले आफ्ना सदस्यहरूलाई भवन आवाश कर्जा दिँदा सम्बन्धित निकायको मापदण्ड हेरर मात्र लगानी गर्ने ।

### सहकारीको भूमिका

सम्पूर्ण सदस्यहरूले क्षमता अनुसारको गुणस्तरीय र सुरक्षित आवासमा बसोबास गर्न सकुन् भन्ने बारे शहर सुधारका लागि सम्बन्धित निकाय र सदस्यहरूबिच छलफलमा सहभागी गराउने योजना बनाउने ।

## १२. जिम्मेवारीपूर्ण दीगो उत्पादन र उपभोग




**सम्पूर्ण उपभोग र उत्पादन प्रणालीलाई दीगो बनाउने आकांक्षा राखेको छ । खाद्यान्न नोक्सानी घटाउने, रासायनिक वस्तुहरूको उपभोग घटाउने, एकपटक प्रयोग भएका वस्तुहरू सम्भव भएसम्म रिसाइकल गर्ने, कृषि उद्योग व्यवसाय, श्रोत संरक्षण आदिमा नयाँ पद्धतिको प्रयोग गर्ने, बाली उठाउँदा, खाना पकाउँदा र प्रयोग गर्दा हुने खाद्य नोक्सानीका बारेमा ध्यान दिने, वातावरणमैत्री र समाजप्रति जिम्मेवार बन्ने पनि हो ।**

### सहकारीको भूमिका

सदस्यहरूलाई दैनिक फोहर उत्पादन घटाउने, पुनर्प्रयोग गर्ने र पुनःप्रशोधन गर्ने, दैनिक फालिने खाना परिणाम घटाउने, प्रांगारिक, विषादीरहित र हानिकारक रसायन आदिको बारेमा जानकारी दिने खालको योजना बनाएर कार्यान्वयन गर्न लगाउने ।

## १३. जलवायु परिवर्तनमा तत्काल पहल




**यो लक्ष्य जलवायू परिवर्तनलाई न्यूनिकरण गर्ने र अनुकुल क्षमता बढाउने विषयमा छ । यसले विश्वमा बढ्दो तापक्रमले पार्ने प्रकोप, विनासहरू र जैविक विधितालाई कम गर्न विभिन्न कार्यक्रम मार्फत सचेतना फैलाउने काम गर्न सकिन्छ । सहकारीले वातावरणलाई असर पार्ने कार्य नगरे पनि निजि क्षेत्र र राज्यले गरेकाले सहकारी मार्फत जैविक विधिको कृषि, नविकरणीय उर्जा, हरित वन खोला नाला सरसफाई आदि जस्ता वातावरण मैत्री कार्य गर्न सक्नेछ ।**

### सहकारीको भूमिका

सदस्यहरूलाई जलवायु परिवर्तन र प्राकृतिक प्रकोपसँग सम्बन्धित जोखिमबारे जानकारी गराउने योजना बनाएर समय समयमा छलफल गराउने ।

## १४. जलमुनिको जैविक विध्धिताको संरक्षण




यो लक्ष्य समुद्री जीवन, समुद्री श्रोत र त्यसको व्यवस्थापनसँग सम्बन्धित छ । सहकारीमार्फत सचेतना फैलाउँदै पानीमुनि रहेका जीवजन्तुको संरक्षण गर्न जरूरी छ भन्ने बफाउन सकिन्छ । साथै हाम्रा वरिपरि भएको खोलानाला सरसफाईमा सहभागी भएर जीवजन्तुहरूको जीवन रक्षामा सहयोग पुऱ्याउन सकिन्छ ।

## १५. जमिनमाथिको जैविक विब्धिताको संरक्षण




यस लक्ष्यले विशेष गरी जंगल जमीन जैविक विब्धिताको संरक्षण जमीनको क्षयीकरणको नीयन्त्रण, वन विनास नीयन्त्रण, वृक्षरोपणमा विस्तार वन्य जन्तु संरक्षण गर्नेछ । नेपालमा भएको वन उपभोक्ता समितीहरूको विस्तार गरी पर्यावरणलाई व्यवस्थित पार्न सक्नेछन त्यसैगरी आ आफ्ना व्यवसाय संचालन गर्दा वन जमीन र वातावरण विनास हुनबाट रोक्न सकिन्छ ।

### सहकारीको भूमिका

सहकारीका सदस्यलाई जैविक विब्धिता संरक्षणबारे सचेतनामुलक कार्यक्रम सञ्चालन गर्न सकिन्छ । प्रत्येक सदस्यका घरमा वृक्षारोपणका लागि संस्थाबाट बोट विरूवा वितरण गर्ने जस्ता योजना बनाई कार्यान्वयन गर्ने । आफ्नो समुदायको सडक पेटीमा रूख विरूवा रोपी हरियाली बढाउने खालको योजना बनाई सम्बन्धित निकायसँग समन्वय गर्ने ।

## १६. शान्ति, न्याय र शसक्त निकाय




यो लक्ष्यमा शान्ती पूर्ण समाज र न्यायमा सबैको पहुँच, समावेशी संस्थाहरूको विकास मार्फत दीगो विकास गर्ने विषय समेटेको छ । सबै प्रकारका हिंसाको अन्त्य गर्ने, मेलमिलाप बढाउने, अवैध हात हतियार, लागु पदार्थ र मानव ओसार पसार रोक्ने, भ्रष्टाचार घुसखोरीको अन्त्य गर्ने, पारदर्शिता र जवावदेहिता सुनिश्चित गर्ने, सुचनाको हक स्थापीत गर्ने जस्ता विषयमा जोड दिएको छ ।

### सहकारीको भूमिका

यस लक्ष्य अन्तर्गत रहेर सामाजिक न्याय नै सहकारीको व्यवसाय भएकोले शुसासनको पाटोमा थप कार्य गर्न सक्ने सहकारी क्षेत्रको भूमिका हुने भएकोले सोही अनुरूप योजना बनाई कार्यान्वयन गर्ने ।

## १७. लक्ष्य प्राप्तिको लागि साझेदारी  प्रयास




यो लक्ष्य अन्तर्राष्ट्रिय साझेदारीका मान्यताबाट दीगो विकास लक्ष्य कार्यान्वयनका क्षमता बढाउने विषयसँग सम्बन्धित छ । आन्तरिक साधन श्रोतको परिचालन बढाउने, वैदेशिक सहायता, प्रतिवद्धता, लगानी प्रवर्द्धनको वातावरण बनाउने, नया प्रविधिको खोज, व्यापार सहजिकरण, आर्थिक नीतिमा सुधार गर्ने, आदिको अनुगमन समेत यसले गर्दछ । सम्पूर्ण लक्ष्य प्राप्तिका लागि सहकारी संघ संस्थाले माथिल्लो निकायसँग र स्थानीय, प्रदेश सरकारसँग समन्वय गरी कार्य गर्न सकिने

**देखिन्छ । सहकारी मार्फत सामाजिक न्याय, आर्थिक उन्नती, लैङ्गिक समानतामा जोड दिँदै १७ वटै लक्ष्य एक अर्कासँग जोडिने छ ।**

### सहकारीको भूमिका

सन् २०३० सम्ममा सबै मुलुकले सबै लक्ष्य हासिल गर्नु पर्ने भएकोले अन्तराष्ट्रिय सहकारी महासंघका नेपालका सदस्य संस्था मार्फत सम्पूर्ण सहकारी संघ संस्थाका सदस्य, कर्मचारी र पदाधिकारी समेतले लक्ष्य प्राप्तिका लागि कसरी योगदान दिन सकिन्छ भनेर सिर्जनात्मक र अनुसन्धानात्मक रूपमा लाग्नु पर्ने देखिन्छ । त्यसका लागि आवश्यक नीति योजना बनाई केन्द्र, प्रदेश र स्थानीय सरकार साथै सम्बन्धित निकायसँग समन्वय गरी सोही अनुरूप योजना बनाई कार्यान्वयन गर्न प्रतिवद्ध रहने ।

यो दीगो विकास लक्ष्य समेटदै विभिन्न काम गरौं भन्ने अभियानले प्रत्येक सहकारी संस्थाले आफ्ना सदस्य र स्थानीय सरकारले त्यस समुदायमा वसोवास गरेका जनताको जिवनस्तर उकास्न के कस्तो काम गर्न सकिन्छ जहाँ प्रत्येक नागरिकले आफ्नो र आफ्ना सन्तति, आफ्नो टोल गांउ र देशको भविश्यका लागि निश्चिन्त हुन सकुन्, भनि आत्मविश्वास जगाउनु पनि हो ।

## दीगो विकास लक्ष्यका चुनौतीहरू

समृद्ध समाज निर्माणका लागि अवसरका रूपमा आएको दीगो विकास लक्ष्य कार्यान्वयनका चुनौती पनि त्यतिकै छन् । दीगो विकासको यस्तो अभियानलाई कसरी कार्यान्वयन गर्ने र सफल बनाउने भन्ने विषयमा विभिन्न सवाल जवाफ र छलफलहरू पनि चल्ने गरिरहेकै छन् । यो अभियानमा निजी क्षेत्रलाई कसरी समेट्ने? स्थानीय तहको भूमिका र जिम्मेवारी के हुने र कसरी सक्रिय बनाउने ? आर्थिक श्रोत कसरी जुटाउने ? प्रविधिसँग कसरी जोडिने ? कायान्वयन नभएको जिम्मेवारी कसले लिने जस्ता चुनौती पनि देखिएका छन् ।

विकासका लक्ष्यहरू त्यतिकै कार्यान्वयन हुँदैनन् । लक्ष्यमा पुग्नका लागि उपयुक्त रणनीति, कार्यक्रम, श्रोत परिचालन, संस्थागत व्यवस्था क्रियाकलाप सञ्चालन र प्रभावकारी अनुगमन पूर्वशर्त हुन् । यसका लागि सम्बन्धित सबैले दीगो विकास लक्ष्यलाई समयवद्ध रूपमा कार्यान्वयन गर्ने रणनीति बनाउनु पर्दछ ।

यो लक्ष्य पूरा गर्ने विश्वको प्रतिवद्धता हो, हाम्रो देशको पनि प्रतिवद्धता हो । जस्तोसुकै चुनौती आए पनि हाम्रो सन्दर्भमा आधारभूत रूपमा स्थानीय तहमै सब कार्यक्रम हुने भएकोले कार्यान्वयन गर्न स्थानीयकरण गर्नैपर्छ । संघले त नीति निर्माण गरेर काम गर्न जिम्मा लाउने हो । स्थानीय सरकारले यसका लागि कसरी निजी, सहकारी एवं सामुदायिक क्षेत्रलाई परिचालन गर्ने, क्षमता, श्रोत साधन, क्रियाशीलतालाई कसरी प्रोत्साहित गर्ने, यस क्षेत्रका लागि खटिने व्यक्तिहरूको विभिन्न तहमा कसरी क्षमताको विकास गर्ने, साथै स्थानीय, प्रदेश र केन्द्रसँगको समन्वय सहकार्य गरेर कसरी आ आफ्नो भूमिका निभाउने साथै लक्ष्य कार्यान्वयन भए पनि लक्ष्यप्राप्तिको सूचकको मापन अनुगमन कसरी गर्ने, एकीकृत कार्यढाँचा कसरी बनाउने, रिपोट कसरी तयार पार्ने त्यो समेत अन्योल देखिएको छ ।

यो अन्योल हटाउन प्रत्येक क्षेत्रबाट यसको अध्ययन गरेर सम्बन्धित सरोकारवालासँगको सहकार्यमा प्रवुद्ध वर्ग, सहकारीकर्मी, विकास अभियन्ता र सामाजिक अगुवा समेत यो अभियानमा होमिनुपर्छ । राष्ट्रिय नारा "समृद्ध नेपाल, सुखी नेपाली" भन्ने नारालाई सफल बनाउने हो भने दीगो विकास लक्ष्य आंफैमा एक अवसर पनि हो । त्यसैले अवसर र चुनौतीको आँकलन गरिएन र आ आफ्नो क्षेत्रबाट यो कामलाई सफल बनाउन सकिएन भने चाहे जस्तो समाज र विश्व निर्माण गर्ने अवसर हामीले गुमाउनेछौं ।

### कार्यान्वयनको प्रवेश

दीगो विकास लक्ष्यका प्रायः सबै क्षेत्रहरूमा सहकारीले योगदान गर्नसक्ने अवस्था देखिए तापनि मूलतः निम्न १० वटा लक्ष्यहरूमा अझ बढी प्रत्यक्ष योगदान गर्नसक्ने देखिन्छः

| | | | |
|---|---|---|---|
| १. | गरिबीको अन्त्य | २. | भोकमरीको अन्त्य |
| ३. | सुस्वास्थ्य तथा समृद्ध जीवन | ४. | गुणस्तरीय शिक्षा |
| ५. | लैङ्गिक समानता | ८. | मर्यादित काम तथा आर्थिक वृद्धि |
| ९. | उद्योग, नवीन खोज र पूर्वाधार | १०. | असमानता न्यूनिकरण |
| १६. | शान्ति, न्याय र सशक्त संस्थाहरू | १७. | लक्ष्य प्राप्तिका लागि साझेदारी |

देशका ७५३ पालिकाहरूले आफ्नो क्षेत्र दीगो र सुव्यवस्थित बनाउन चाहे जस्तै दोलखा जिल्ला समेतको चाहना त्यही हुनसक्छ । दोलखामा कृषि उत्पादन र पर्यटनमा धेरै काम गर्न सकिन्छ, जसबाट स्वरोजगारको सिर्जना हुन्छ । सहकारीमा आवद्ध सदस्यहरूलाई बचत गर्ने परिपाटी सिकाए जस्तै अव बचत गरेको रकमलाई आफ्नै क्षेत्रमा कृषि उत्पादन तथा लघु उद्योगहरूको स्थापना गर्न सिकाउन जरूरी छ । त्यसका लागि संस्थाहरूले विशेष कार्ययोजना बनाएर दीगो विकास लक्ष्य र प्रत्येक व्यक्तिको भूमिकाका बारेमा जानकारी गराउँदै जानुपर्छ । सदस्यहरू सैद्धान्तिक रूपमा सहमत भएपछि स्थानीय तहसँगको सहकार्यमा विभिन्न परियोजना बनाएर कार्यान्वयन गर्न सकिन्छ । योजना तर्जुमा गर्न दोलखा जिल्लाको सम्भावना र अवसरको पहिचान गरी अल्पकालीन, मध्यकालीन र दीर्घकालीन योजना तर्जुमा गर्ने, विषय विशेषज्ञबाट तालिम लिने, सम्भावित परियोजनामा सहकारी संस्था र व्यक्तिले सहकार्य गरी लगानी गर्ने, उत्पादन, प्रशोधनका लागि स-साना उद्योग, बजारीकरण र उपभोक्ता पहिचानका लागि सहकारी संस्थाले जिम्मा लिनुपर्ने हुन्छ । यो क्षेत्रमा जाने वित्तिकै दीगो विकासका अन्य लक्ष्यहरू स्वतः जोडिएर आउँछन । यसले गरिबी निवारणमा साथ दिन्छ, रोजगारीको सिर्जना गर्दछ, लैङ्गिक समानतामा सहयोग गर्छ, नयाँ नयाँ आविष्कारहरू देखिन सक्छन्, शिक्षा स्वास्थ्याका लागि सदस्यहरू सचेत हुन थाल्छन्, ग्रामिण भेगमा विकासको लहर थपिन सक्छ । स्थानीय क्षेत्रका सम्भावनाहरू प्रचुर मात्रामा देखिनसक्छ । आर्थिक, सामाजिक क्रियाकलापहरूमा वृद्धि हुनसक्छ । सदस्यहरू प्रत्यक्ष सम्पर्कमा हुने भएकोले यो काम गर्न सहकारी संघसंस्थाको महत्वपूर्ण भूमिका हुनसक्छ ।

यस्ता कामले केही वर्षमै दोलखा जिल्ला नमुना जिल्ला बन्न सक्नेछ । त्यसबेला मात्र दीगो विकास लक्ष्य प्राप्तिका लागि सहकारी भन्ने नाराले पूर्णता पाउनेछ । यसका लागि संस्थाले सर्वप्रथम दीर्घकालीन र वार्षिक कार्यक्रम बनाई सो अनुसारको नीयमित अनुगमन, मूल्यांकन र परिष्करणको विधि विकास गर्दै जानुपर्छ ।

**दीगो विकास लक्ष्य प्राप्तिका लागि अघि बढ्न सकिने केही तत्कालिन कार्ययोजनाहरू**

१. दीगो विकास लक्ष्यको लागि तीन सदस्य उपसमितिको व्यवस्था गर्ने ।

२. दीगो विकास लक्ष्यको कार्यढाँचासहितको रणनीतिक योजना बनाउने ।

३. सञ्चालक, समिति उपसमिति सदस्य तथा कर्मचारीलाई दीगो विकास लक्ष्यको तालिम दिने ।

४. वार्षिक साधारण सभामा दीगो विकास लक्ष्य सम्बन्धी प्रतिवेदन दिने ।

५. कार्यलयमा दीगो विकास लक्ष्य सम्बन्धी सूचना तथा बोर्ड तयार गर्ने ।

६. दीगो विकास लक्ष्यको लागि विशेष अधिकारी तोक्ने ।

७. सहकारीहरूलाई २०३० को अभियानमा समावेश गर्ने ।

**निष्कर्ष**

दीगो विकास लक्ष्य राष्ट्रिय एवं अन्तर्राष्ट्रिय मार्गचित्र हो । यसले १५ वर्ष भित्रमा विश्वमा देखिएका भोक रोग, अशिक्षा, असमानता कुशासनबाट विश्वलाई मुक्त गरी परिवार, समुदाय, राष्ट्रिय तथा विश्व तहमा गर्ने सबै प्रकारका विकासमुलक कार्यलाई समेट्छ । त्यसैले परिमाणात्मक लक्ष्य पुरा गर्न सहकारी महत्वपूर्ण संयन्त्र बन्नसक्छ । यसले माथि व्याख्या गरे अनुसार गरिबी न्यूनिकरण होस् वा कृषिको उत्पादकत्व विस्तारमार्फत भोकमरी नीयन्त्रण गर्न, समावेशीताका लागि होस् वा उत्पादन र उपभोग प्रवृत्तिको सुधारमार्फत श्रोत साधनको प्रवर्द्धन गर्न सहकारी स्वयंको भूमिका महत्वपूर्ण हुन्छ । हाल ६० लाख सदस्यले दीगो समाजका लागि दीगो विकासका १७ वटै लक्ष्य र १६९ उपलक्ष्यहरूलाई समावेश गर्दै आवश्यक सोच, शैली, साधन कार्य सबै क्षेत्रमा उपलब्धी दिनसक्छ । दिगो विकास लक्ष्यको कार्यान्वयनलाई प्रभावकारी र व्यवस्थित बनाउन नितिगत कानूनी तथा संस्थागत संरचना तयार गरिएका छन् । त्यसैले दीगो विकासबाट दीगो समाज निर्माण गर्ने प्रक्रियामा सहकारी अपरिहार्य बन्न सक्ने भएकोले देशको विशिष्ठ अवस्था र योजनाहरूलाई स्थानीयकरण तथा सहकारीकरण गर्दै अघि लैजाने पद्धति अवलम्बन गर्नु अहिलेको सान्दर्भिक्रा हो ।

# संघीय संरचनामा सहकारी संगठन : कानूनी व्यवस्था र विकास नीतिहरू

**- सुदर्शन प्रसाद ढकाल**
पूर्व रजिष्ट्रार
सहकारी विभाग

**पृष्ठभूमि**

सरल अर्थमा परिभाषित गर्ने हो भने "सहकारी सामुदायिक व्यवसाय" हो । सारभूत रूपमा निजी व्यवसाय (लगानीकर्ताको स्वामित्व) पूँजी केन्द्रित हुन्छ भने सहकारी व्यवसाय सदस्य केन्द्रित (सदस्यहरूको स्वामित्व) । एक सदस्य एक मतको सुनिश्चितता प्राथमिक सहकारीको विशेषता हो । निजी व्यावसायिक फर्ममा जसको हातमा जति बढी शेयर संख्या वा पूँजीको स्वामित्व छ, उसको मताधिकार वा निर्णयमाथिको अधिकार पनि त्यसै आधारमा फरक हुन्छ । अर्कोतर्फ सहकारीले सदस्यहरूको आवश्यकता र आकांक्षालाई परिपूर्ति गर्ने उद्देश्य लिएको हुन्छ । सहकारीले प्रचलित ७ सिद्धान्तहरू र मूल्यहरूको अनुशरण गर्नु पर्ने हुन्छ । निजी व्यवसायको एकमात्र उद्देश्य नाफा आर्जन गर्नु हुन्छ । सहकारीको उद्देश्य नाफा नभै सदस्यहरूको सेवा हुन्छ ।

हाम्रो समाजमा गुठी, धर्म भकारी, मङ्काखल, पर्म र ढिकुटी जस्ता स्वरूपमा एकका लागि सबै र सबैका लागि एक भन्ने भावनाका साथ सहकार्य र सहयोगका लागि स्थानीयस्तरमा संगठनहरू खडा गरिने प्रचलन थियो । सहकारीको अभ्यास नेपालीको लागि नौलो भने होइन । विश्व सहकारी अभियानको इतिहास पनि लामो छ । आधुनिक सहकारीको रूपमा सन् १८४४ मा बेलायतमा स्थापना भएको रोचडेल पायोनीयर सोसाइटीलाई पहिलो सहकारी मानिएको छ ।

सहकारी क्षेत्रको विकासको लागि २०१० सालमा योजना तथा विकास मन्त्रालय अन्तर्गत सहकारी विभागको स्थापनाबाट भयो । चितवनको शारदानगरमा २०१३ साल चैत्र २० गते स्थापना गरिएको बखान ऋण सहकारी नेपालको पहिलो सहकारी संस्था हो । २०१६ सालमा जननिर्वाचित सरकारको प्रयासमा सहकारी संस्था ऐन, २०१६ आयो । सरकारी प्रयासबाट सहकारीको प्रवर्द्धन र विस्तार गर्ने नीति बमोजिम नेपालका आवधिक विकास योजना सँगै सहकारीको विकासका कार्यक्रमहरू तर्जुमा गरी सोही अनुरूप कार्यान्वयन गर्दै लगियो ।

२०१९ सालमा काठमाडौंमा सहकारी प्रशिक्षण केन्द्रको स्थापना भएको हो । सहकारी बैंक ऐन, २०१९ अन्तर्गत २०२० सालमा सहकारी बैंकको स्थापना गरिएको थियो । तर, २०२४ सालमा यो बैंकलाई कृषि विकास बैंकमा रूपान्तरण गरियो । २०२० सालमा गैह्र वित्तीय सहकारीको रूपमा साझा प्रकाशन, साझा भण्डार, साझा यातायात र साझा स्वास्थ्य सेवाको गठन गरियो । तर, यी सबै संस्थाहरूमा सरकारको प्रत्यक्ष नीयन्त्रण रह्यो । २०४१ सालमा साझा संस्था ऐन तथा २०४३ सालमा नियमावली जारी भयो । साझा संस्था ऐन, २०४१ लागू भएपछि साझा अभियानलाई सरकारीकरण गरियो ।

बहुदलीय व्यवस्थाको पुनर्स्थापना पछि २०४७ सालमा सरकारले राधाकृष्ण मैनालीको अध्यक्षतामा राष्ट्रिय सहकारी महासंघ परामर्श समितिको गठन गर्‍यो । सात सदस्यीय यस समितिले सहकारी क्षेत्रलाई राज्यको नीयन्त्रण भन्दा बाहिर राख्नु पर्ने गरी दिइएका सुझावहरूका आधारमा नयाँ कानूनको निर्माण गरियो जसले नेपालको सहकारी अभियानलाई स्वायत्त ढंगले विकसित हुने अवसर दियो ।

नेपालको अन्तरिम संविधान, २०६३ को धारा ३५ (२) ले नेपालको अर्थतन्त्रको विकासमा सरकार, सहकारी र निजी क्षेत्रको परिचालनलाई आधार बनाउने व्यवस्था गरेको थियो । २०७२ सालमा जारी भएको नेपालको संबिधानको भाग ४ राज्यका निर्देशक सिद्धान्त, नीति तथा दायित्व अन्तर्गत धारा ५१ को खण्ड (घ) (१) मा "सार्वजनिक, निजी र सहकारी क्षेत्रको सहभागिता र स्वतन्त्र विकास मार्फत राष्ट्रिय अर्थतन्त्र सुदृढ गर्ने" भन्ने प्रावधान रहेको छ । सोही खण्डको (३) मा "सहकारी क्षेत्रलाई प्रवर्द्धन गर्दै राष्ट्रिय विकासमा अत्यधिक परिचालन गर्ने" भन्ने व्यवस्था समेत संबिधानमा रहेको छ । नेपालको संबिधानको अनुसूची ५, ६ र ८ मा संघ, प्रदेश र स्थानीय सरकारको सहकारी सम्बन्धी एकल अधिकार क्षेत्र र ७ र ९ मा साझा अधिकार सम्बन्धी व्यवस्था गरेको छ ।

२०५७ सालमा कृषि मन्त्रालयको नाममा सहकारी मन्त्रालय जोडियो । यही वर्ष सहकारी ऐन २०४८ को दफा २६ संसोधन गरी नेपालमा राष्ट्रिय सहकारी बैंक स्थापना गर्ने व्यवस्था भयो फलस्वरूप २०६१ साल देखि सहकारी बैक संचालनमा आएको छ । सरकारले २०६९ साल जेष्ठ ५ गते सहकारी तथा गरिबी निवारण मन्त्रलायको स्थापना समेत गरेकोमा देश संघीय संरचनामा गएपछि यो मन्त्रालय भूमि व्यवस्था मन्त्रालयसङ जोडिएको छ । यतिखेर ७ वटै प्रदेशमा भूमि व्यवस्था र कृषिसँग जोडेर सहकारी मन्त्रालयको व्यवस्था गरिएको छ ।

सहकारी ऐन, २०४८ लाई प्रतिस्थापन गरी २०७४ साल कार्तिक १ गतेका दिन सहकारी ऐन, २०७४ जारी भएको छ । त्यसैगरी हालै मात्र नेपाल सरकारले संघीय सहकारी नियमावली समेत स्वीकृत गरेको छ । नेपालको संबिधान र सहकारी ऐनको आधारमा अब स्थानीय तह र प्रदेशले पनि आफैले सहकारी ऐन नियम निर्माण गर्ने कामले निरन्तरता पाएको छ । सहकारीको विकास र प्रवर्द्धनमा अब संघीय सरकार मात्र हैन प्रदेश सरकार स्थानीय तहको सरकार पनि स्वतन्त्र ढंगले कार्यक्रम बनाई कार्यान्वयन गर्ने अधिकार राख्दछन् ।

२०७४ साल अषाढसम्म आइपुग्दा सहकारी संस्थाहरूको संख्या ३४ हजार ५ सय १२ पुगेको छ । यी सहकारीहरूमा सदस्य संख्या ६३ लाख नाघेको छ । महिला सहभागिताको दृष्टिकोणले सहकारी अभियान समृद्ध देखिन्छ । कूल सदस्य संख्यामा महिलाको सहभागिता ५१ प्रतिशत भन्दा पनि बढी छ । सहकारीको नेतृत्व तहमा २ लाख ४७ हजार ८ सय २७ जना रहेकोमा महिलाको सहभागिता ३९ प्रतिशत पुगेको छ । करिव ४ हजार सहकारी संस्थाहरूमा महिलाहरूको मात्र सहभागिता रहेको छ । सहकारी क्षेत्रको कारोबार समेत झण्डै रू. ६ खर्व पुगेको अनुमान छ ।

२०४९ सालमा सहकारी संस्थाहरूको सबैभन्दा माथिल्लो संगठन राष्ट्रिय सहकारी संघ र केन्द्रीय विषयगत संघको रूपमा नेपाल बचत तथा ऋण केन्द्रीय सहकारी संघ एवं केन्द्रीय दुग्ध उत्पादक सहकारी संघको गठन भएको थियो । अहिले महासंघ, २० वटा केन्द्रीय विषयगत संघहरू, एक सहकारी बैंक र ३२५ वटा जिल्लातहका संघहरूले सहकारी संस्थाहरूलाई सञ्जालमा बाध्ने काम गरेका छन् । प्रदेश सभाले सहकारी ऐन पारित गरेसँगै प्रदेश तहको सहकारी संघहरू निर्माण हुने क्रम पनि शुरू भएको छ ।

**सहकारीको सम्भावना भएका आर्थिक क्षेत्रहरू** :

किसानहरूका लागि सहकारी ज्यादै उपयोगी हुन्छ । किसानहरू एकल रूपमा आवश्यक कृषि सामाग्रीहरूको जोहो गर्न सक्षम हुँदैनन् । त्यस्तै उत्पादनका लागि उपयुक्त प्रविधि र सीपको उपयोग गर्न सक्दैनन् । उत्पादन गरिएको कृषि उपजहरू कच्चा पदार्थको रूपमा बिक्री गर्न विवश हुन्छन्, जसले गर्दा उत्पादनको उचित मूल्य पाउन सक्दैनन् । उपयुक्त प्रविधिको उपयोग गरेर केही समयका लागि भण्डारणसम्मको व्यवस्था गर्न नसक्दा कम मूल्यमै उत्पादित सामाग्रीको बिक्री गर्नु पर्ने वा सडेर जाने अवस्था सिर्जना हुन्छ । समस्या पर्दा सरल कर्जाको जोहो गर्न नसक्दा परम्परागत उत्पादन प्रणालीमा भर पर्नुपर्ने अवस्था हुन्छ । यसका लागि किसानहरू संगठित भई सहकारी स्थापना गरेर आफ्ना साझा समस्या समाधानका लागि सक्षम बन्ने बाटो हुन्छ । जापान र द कोरियाका ९० प्रतिशत भन्दा बढी किसानहरू सहकारीमा आवद्ध छन् । न्यूजिल्याण्डको फोन्टेरा डेरी सहकारीमा १० हजार बढी किसानहरू आवद्ध छन् । भारतको अमुल डेरी सहकारीमा ३६ लाख कृषकहरू आवद्ध रहेका छन् । भारतकै इफ्कोमा ३६ हजार सहकारी संघ संस्थाहरूमा जोडिएका ५ करोड भन्दा बढी कृषकहरूको प्रत्यक्ष संलग्नता रहेको छ । अमेरिकाको ल्याण्ड ओ लेकले ३ लाख किसानहरूलाई संगठित गरेको छ । सहकारीमा आवद्ध भएपछि कृषकहरूले आधुनिक प्रविधि र उपकरण, सिप, प्राविधिक सेवा, सरल कर्जा, विमा जस्ता सबै सहयोग र सुविधाहरूको उपयोग गर्दछन् । उत्पादक किसानहरू र उपभोक्ता बिचको बिचौलियाहरूको अन्त्य गर्न सहकारीको विकल्पनै छैन ।

उपभोक्ताहरू हरेक दिन आफूले दैनिक उपभोग गर्नु पर्ने चिजहरूको खरिद गर्दा ठगिइरहेका हुन्छन । मूल्य, तौल र गुणस्तरको विषय जहिले पनि उपभोक्ताहरूको टाउको दुखाइ हुन्छ । त्यसैले उपभोक्ताहरू संगठित भई सहकारी पसलहरूको स्थापना गर्दछन् । यस्ता सहकारी पसलहरूलाई सहयोग र समन्वय गर्न सहकारी पसलहरूको सदस्यता रहेको उपभोक्ता संघको निर्माण गरेर थोकमा सामानहरू उपलब्ध गराउने काम गर्ने गरिन्छ । यी बाहेक आफै उत्पादन, प्रशोधन तथा प्याकेजिङ सम्मको काम गरेर मूल्य कम गर्दै लैजाने र गुणस्तरमा समेत शुद्धता कायम गर्न सहकारी मार्फत उपभोक्ताहरू सफल हुन्छन् । कालो बजारीको समस्या आउन नदिने र उपभोक्ताहरूलाई संकटको बेलामा समेत उचित वितरण प्रणालीको अवलम्बन गरेर ढुक्क बनाउन सहकारी पद्धतिको व्यवसायहरूको आवश्यकता पर्दछ । दैनिक उपभोगका वस्तुहरू बिक्री गर्ने सहकारी बाहेक

सदस्यहरूलाई सेवा पुऱ्याउन स्वास्थ्य सेवा, शिशु स्याहार केन्द्र, ट्राभलको व्यवस्थापन जस्ता अन्य क्षेत्रहरूमा सहकारी पद्धतिको उपयोग प्रभावकारी रहेको छ । उदाहरणका लागि २ करोड ८० लाख सदस्यहरू भएको विश्वकै सबैभन्दा ठूलो जापानको उपभोक्ता सहकारीलाई लिन सकिन्छ । जापानभर यसको ३३४ वटा सदस्य सहकारी संस्थाहरू रहेको छ । यसले जापानको ३७ प्रतिशत घरपरिवारलाई उपभोक्ता सामान बिक्री गरेर सेवा दिई रहेको छ । ९० प्रतिशत सदस्यहरू महिला छन् । सामानहरू घर घरमै डेलिभरी हुने व्यवस्था छ । यस्तै स्वीट्जरलैण्डमा रहेको ःष्नचयक विश्वकै ४० औ ठूलो खुद्रा बिक्रेता हो । यसका २० लाख शेयर सदस्य रहेकाछन् ।

विभिन्न सामानका निजी खुद्रा पसलका बिक्रेताहरू संगठित भएर सहकारी मार्फत साझा रूपमा सामाग्रीहरू खरिद गर्ने साथै संयुक्त रूपमा बजारको विस्तार गरी वितरण प्रणालीलाई चुस्त बनाई उपभोक्ता र स्वंय आफैलाई पनि लाभ पुऱ्याउन सहकारी प्रभावकारी माध्यम हुन्छ । उदाहरणका लागि औषधी बिक्रेताहरूले सहकारीको स्थापना गरी साझा रूपमा औषधि खरिद गरी सदस्यहरूको पसलमा आपूर्ति गर्ने व्यवस्था मिलाइयो भने व्यक्तिगत भन्दा सामूहिक खरिदमा बढी सहूलियत दरमा औषधिहरू प्राप्त हुने सम्भावना हुन्छ । यसबाट क्रेताहरूलाई समेत लाभ मिल्दछ । अमेरिकाको Ace Hardware खरिद सहकारीको एउटा उदाहरण हो । यसको वार्षिक बिक्री ५ अर्ब अमेरिकी डलर पुगेको छ । ५ हजार ठाँउहरूमा यसका बिक्री केन्द्रहरू रहेको र ६० देशमा यसको सेवा पुगेको छ (सन् २०१५) ।

श्रमिकहरू स्वंयले एक आपसमा संगठित भई सहकारी पद्धतिबाट कुनै उद्योग व्यवसाय स्थापना गरे भने उक्त उद्योग व्यवसायको व्यवस्थापनमा स्वंय श्रमिकहरूको सहभागिता हुन्छ, जसले गर्दा उनिहरूले श्रमिकको पक्षमा निर्णयहरू गर्दछन् । यस्का साथै श्रमिकहरू आफै स्वामी भएको उद्योग व्यवसायबाट राम्रो पारिश्रमिक तथा अन्य सुविधाहरू पाउने सम्भावना हुन्छ । सामाजिक सुरक्षाको लागि भरपर्दो व्यवस्थाहरू गर्न पनि श्रमिक सहकारीलाई सजिलो हुन्छ । उद्योग व्यवसायको मुनाफा समेत आफै बिच बाँडिने भएकोले काममा उत्प्रेरणा सिर्जना भई उत्पादकत्वमा वृद्धि समेत हुन्छ । यसरी श्रमिक सहकारीले स्वयं श्रमिकहरूलाई बढी फाइदा पुग्नुका साथै राज्यलाई समेत उत्पादक पूर्ण रोजगारीको सिर्जना गर्न र श्रम सम्बन्धलाई सन्तुलित राख्न मद्दत मिल्दछ । भारतको १४ वटा राज्यका १५ लाख श्रमिकहरू संगठित भएको सेवा (Self-Employed Women's Associations) सहकारी श्रमिक सहकारीको राम्रो उदाहरण हो । यो बहुउद्देश्यीय सहकारी हो । बैंक, बीमा देखि स्वरोजगारमूलक हरेक खालको व्यवसायमा यो सहकारी संलग्न रहेको छ ।

उत्पादकहरू एकजुट भई सहकारी मार्फत साझा व्यवसाय स्थापना गरे भने उत्पादित वस्तुहरूमा मूल्य अभिवृद्धि भई बढी लाभान्वित बन्न पुग्दछन् । उदाहरणका लागि घरेलु उद्योगबाट उत्पादित सामाग्रीहरूको बजारीकरणमा सहकारी पद्धतिबाट उत्पादकहरू बिच रहेका अस्वस्थ प्रतिस्पर्धाको क्षतिबाट जोगाउनुका साथै उपयुक्त बजार खोज्न र नयाँ प्रविधिको प्रयोग गर्न पनि सहज बन्दछ । यस अन्तर्गत प्रशोधन र मूल्य अभिवृद्धि सहितको घरेलु तथा औधोगिक उत्पादनहरू पर्दछन् । डेरी, जडिबुटी, औषधी, कपडा, पेय पदार्थ, दैनिक उपभोगका सामानहरू, कालिगढी सामाग्रीहरू आदि ।

नीयमित रूपमा बचत गर्ने वा कर्जा लिई उद्योग व्यवसाय गर्नु पर्ने व्यक्तिहरू पनि एक आपसमा संगठित भई बचत तथा ऋणको कारोबार गर्ने सहकारी स्थापना गरे भने बचतमा उचित प्रतिफल तथा ऋणमा उचित ब्याजदरको लाभ लिन सदस्यहरू सक्षम हुन्छन् । वित्तीय सहकारीको उदाहरणहरू प्रशस्त रहेको छ ।

समग्रमा वित्तीय कारोबार (बचत गर्ने र ऋण लिने), उपभोग गरिने दैनिक सामाग्रीहरूको आपूर्ति, कृषि उत्पादन देखि बजारीकरणसम्मको काम र स-साना तथा मझौला उद्योगधन्दा तथा श्रमिकहरूको स्वामित्व रहने उद्योग व्यवसायहरूको स्थापनामा सहकारी पद्धतिको विकल्प देखिएको छैन । त्यस बाहेक स्थानीय श्रम, सीप र पूँजीको एकीकृत रूपमा परिचालनका लागि राज्य र निजी क्षेत्र भन्दा सहकारी पद्धति बढी प्रभावकारी र दीगो हुने यथार्थ पनि विश्व सहकारी अभियानले पुष्टी गरिसकेको कुरो हो । यसै आधारमा शिक्षा, स्वास्थ्य, आवास, उर्जा, पर्यटन जस्ता क्षेत्रमा पनि सहकारी पद्धतिको व्यापक प्रयोग भई रहेको छ ।

## सहकारी क्षेत्रको विकासका लागि भएका प्रयासहरू

**(१) नीतिगत व्यवस्था** :

सहकारी क्षेत्रको विकासका लागि राष्ट्रिय सहकारी नीति, २०६९ कार्यान्वयनमा रहेको छ । नीतिमा भएका प्रमुख व्यवस्थाहरू,

**शिक्षा, तालिम र सूचनाको उपयोग** :

सहकारीको मूल्य र सिद्धान्तहरूको अनुसरण नगरी सहकारी संघ संस्थाहरू सञ्चालन गर्न सकिदैन । नेपालका बहुसंख्यक सहकारी संघ संस्थाहरू सहकारीका मूल्य र सिद्धान्तहरूको अनुसरण नगरी सञ्चालनमा रहेकोले सहकारी क्षेत्र संकटमा पर्दै गएको हो भन्दा अतिशयोक्ति नहोला । यो अवस्था सिर्जना हुनुमा सहकारीको बारेमा प्रयाप्त ज्ञानको कमि नै हो । नीतिगत व्यवस्था अनुसार सबै सहकारीलाई सहकारीको मूल्य र सिद्धान्तहरू अन्तर्गत रहेर मात्र सञ्चालन गर्न सक्ने अवस्थामा ल्याउने उपयाहरूको अवलम्बन आवश्यक छ । सहकारी शिक्षा, तालिम र सूचनालाई व्यापक र प्रभावकारी बनाउन सम्बन्धित सरकारी निकाय तथा सहकारी संघ संस्थाहरूलाई प्रभावकारी ढंगले परिचालन गरिने व्यवस्था नीतिले गरेको छ । सहकारीका सदस्यहरूको चेतना अभिवृद्धि गर्न र व्यवस्थापन क्षमता बढाउन सहकारी अनुशिक्षण र तालिमलाई अनिवार्य गर्ने व्यवस्था रहेको छ । आम नागरिकहरूलाई सहकारी सम्बन्धी जनचेतना अभिवृद्धिका लागि सरकार, स्थानीय निकाय, सहकारी क्षेत्र, नागरिक समाज, विकास साझेदार, शैक्षिक क्षेत्र, सञ्चार जगतका साथै सम्वद्ध सामाजिक संघ संस्थाहरू परिचालन गरिने कुरा नीतिमा उल्लेख छ ।

सहकारीका सदस्यहरूलाई सहकारी शिक्षा र पदाधिकारीहरूलाई सहकारी व्यवस्थापन सम्बन्धी तालिम लिने दिने व्यवस्थालाई अनिवार्य गरिनु पर्ने प्रावधानले सहकारी संस्थाहरूलाई सहकारीको आधारभूत चरित्रमा सञ्चालन गराउन सकिने विश्वास लिन सकिन्छ । सहकारी शिक्षालाई माध्यमिक तथा उच्च-माध्यमिक र उच्च शिक्षाको पाठ्यक्रममा समावेश गराई सहकारीको लागि आवश्यक पर्ने दक्ष जनशक्ति तयार हुन सक्ने अनुकुल वातावरण सिर्जना गरिने भनिएको छ । यसो भएमा सहकारी क्षेत्रको लागि जनशक्तिको अभाव नहुने वातावरण तयार हुनेछ । व्यावसायिक शिक्षामा सहकारी शिक्षा तथा सार्वजनिक क्षेत्रका तालिम प्रशिक्षणहरूमा सहकारी व्यवस्थापनको विषय समावेश गरिने भनिएको छ । यसरी व्यावसायिक शिक्षापछि व्यवसाय गर्न सहकारी पद्धतिको अवलम्बन गर्न त्यस्तो जनशक्तिलाई सजिलै आकर्षित गर्न सकिने र सिकेको सीपको तत्कालै उपयोग हुने वातावरण सिर्जना हुनेछ । सार्वजनिक क्षेत्रका जनशक्तिलाई दिइने तालिममा सहकारी शिक्षालाई समावेश गर्न सकियो भने सहकारीका बारेमा बुझ्ने सरकारी जनशक्ति तयार हुनेछ । त्यसैगरी सहकारीको ज्ञानलाई निजामती कर्मचारीहरूमा विस्तार गर्न सरकारी निकायका विभिन्न तहका परीक्षाहरूको पाठ्यक्रममा सहकारी विषय समावेश गरिने भनिएको छ । यसले भविष्यमा नीति निर्माण तहसम्म नै सहकारीको भावना बुझ्ने कर्मचारीतन्त्रको विकास हुनेछ । राष्ट्रिय सहकारी अध्ययन अनुसन्धान तथा प्रशिक्षण प्रतिष्ठानको गठन गरी सहकारी सम्बन्धी अध्ययन, अनुसन्धान तथा प्रशिक्षणको कार्यलाई प्रभावकारी बनाईने साथै यसै प्रतिष्ठान अन्तर्गत रहने गरी हाल सञ्चालनमा रहेका सबै सहकारी प्रशिक्षण केन्द्रहरूलाई स्वायत्त निकायको रूपमा विकास गरी सहकारी कलेजको आवश्यकता समेत परिपूर्ति गरिने भनिएको छ । अहिले भएका सहकारी प्रशिक्षण केन्द्रहरूको स्वायत्त र स्वतन्त्र विकासमा यसले निश्चयनै योगदान पुग्नेछ । विभिन्न तहमा सहकारी सूचना केन्द्रहरूको स्थापना गरी सहकारी सम्बन्धी सूचना सम्प्रेषणलाई प्रभावकारी बनाइने प्रतिवद्धता नीतिमा अभिव्यक्त गरिएको छ, जसबाट आम नागरिकहरूमा सहकारीको बारेमा चेतना अभिवृद्धि हुनुका साथै आफ्नो हक अधिकारका बारेमा जानकार बनाउन मद्दत मिल्नेछ । सहकारी क्षेत्रको प्रवर्द्धनका लागि स्थानीय, राष्ट्रिय र अन्तर्राष्ट्रियस्तरका कार्यक्रमहरूको आयोजना गरी सहकारीको महत्व र उपयोगिताका बारेमा जनचेतना अभिवृद्धि गरिने साथै सहकारी सम्बन्धी जनचेतना बढाउन सञ्चार माध्यमहरूको प्रभावकारी उपयोग र सहकार्यमा विशेष जोड दिइने भनिएको छ । शिक्षण संस्थामा सहकारी सम्बन्धी रचनात्मक क्रियाकलापहरू सञ्चालन गरी विद्यार्थी जीवनमा नै सहकारी पद्धतिको अभ्यास गर्न उत्प्रेरित गरिने र सहकारीको अनौपचारिक शिक्षा प्रवर्द्धन गर्न प्रवर्द्धनात्मक सामाग्रीहरूको प्रकाशन र प्रभावकारी प्रसारणको व्यवस्था मिलाइने प्रतिवद्धता समेत नीतिले अंगिकार गरेको छ ।

**कृषि तथा अन्य क्षेत्रमा सहकारी व्यावसायिक पद्धतिको विकास** :

सहकारी पद्धतिबाट उद्योग व्यवसाय स्थापना र सञ्चालन गर्न कुनै अवरोध नहुने गरी सम्बन्धित विषयहरूको क्षेत्रगत नीति तथा कानूनहरूमा परिमार्जन गरिने भनि नीतिगत प्रतिवद्धता व्यक्त गरिएको छ । यस्तो व्यवस्थाले समूहगत रूपमा सहकारी स्थापना गरी सबै आर्थिक क्षेत्रमा उद्योग व्यवसाय सञ्चालन गर्ने फराकिलो आधार निर्माण हुनेछ । श्रमिकहरूको स्वामित्व रहने सहकारी उद्योग व्यवसाय मार्फत देश भित्रै रोजगारीको अवसर सिर्जना गर्ने गरी श्रमिक सहकारी उद्योग व्यवसायको स्थापनालाई प्रश्रय दिइने नीतिगत व्यवस्था रहेको छ । यसबाट सिपमूलक जनशक्तिहरू एक आपसमा मिलि सामूहिक उद्योग व्यवसाय गर्न पाउने वातावरण बन्नेछ । कृषि उत्पादन, भण्डारण, प्रशोधन तथा बजारीकरण र कृषि सामाग्रीको आपूर्ति

व्यवस्थापनमा कृषि सहकारी संघसंस्थाहरूको संलग्नतालाई प्रोत्साहन गरिने र यसबाट कृषक र उपभोक्ता बिचको बिचौलीयाको अन्त्य भई कृषि पेशा भरपर्दो व्यवसायको रूपमा विकसित भएर जाने अवस्था सिर्जना हुने गरी कार्यनीति अंगिकार गरिने नीतिगत व्यवस्था गरिएको छ । त्यसैगरी सार्वजनिक क्षेत्रका कलकारखाना, कृषि फर्म तथा बजार केन्द्रहरूको व्यवस्थापनमा सहकारी संघ संस्थाहरूको संलग्नता र सहभागितालाई प्राथमिकता दिइने कुरा उल्लेख छ, जसले सहकारी बजारको परिकल्पना गरेको छ । कृषि, शिक्षा, स्वास्थ्य, उर्जा, वीमा, पर्यटन, सञ्चार जस्ता उत्पादन तथा सेवाका उद्योग व्यवसायमा सहकारी संघ संस्थाको लगानी र व्यवस्थापनलाई उत्प्रेरित गरिने भनि सहकारी पद्धतिको व्यवसायलाई प्रवर्द्धन गरिने व्यवस्था समेत नीतिमा गरिएको छ । सहकारीलाई अर्थतन्त्रको एउटा सवल स्तम्भको रूपमा स्थापित गर्न उत्पादन तथा सेवामूलक सहकारीहरूलाई उपयुक्त वित्तीय तथा गैर वित्तीय सुविधा उपलब्ध गराइ प्रवर्द्धनात्मक काम सञ्चालन गरिने भनिएको छ । कूल गार्हस्थ उत्पादनमा सहकारी क्षेत्रको योगदान बढाउन निजी क्षेत्र र सहकारी बिच अग्र, पृष्ठ र अन्तर सम्बन्धको विकास गरिने स्पष्ट प्रतिवद्धता नीतिले अंगिकार गरेको छ । यसका लागि राज्यले साझेदारी उद्योग व्यवसायको प्रारूप तयार गरी कार्यान्वयनमा ल्याउने योजना प्रस्ताव गरेको छ । राष्ट्रिय योजना आयोग, कृषि, स्वास्थ्य, उद्योग, शिक्षा, पर्यटन, उर्जा, सिँचाई, स्थानीय विकास, शहरी विकास, युवा, श्रम तथा रोजगार जस्ता केन्द्रीय र सो अन्तर्गतका निकायहरूमा सहकारी पवर्द्धनका लागि जिम्मेवार महाशाखा/शाखा वा सम्पर्क विन्दुको व्यवस्था गरी विषयगत रूपमा सहकारीको विकास, विस्तार र प्रवर्द्धनमा सम्बन्धित निकायहरूलाई जिम्मेवार बनाइने विषय नीतिमा समाहित गरिएको छ । कृषिमा आधारित उत्पादन, भण्डारण, प्रशोधन, बजारीकरण तथा कृषि सामाग्री आपूर्तिको लागि कृषकहरूको सहभागितामा स्थापना गरिएको सहकारी उद्योग व्यवसायलाई सहुलियतपूर्ण ऋण तथा अनुदान सहयोग उपलब्ध गराउने व्यवस्था मिलाइने प्रतिवद्धता नीतिले समेटेको छ । कृषि सामाग्रीहरूको उत्पादन, आयात तथा नीर्यात र वितरणका कार्यहरूमा सहकारीका संघ संस्थाहरूलाई प्राथमिकता दिई आवश्यक सहयोग उपलब्ध गराइने र भूमिहीन तथा साना किसानहरूलाई सहकारी खेती गर्न उपयोगमा नआएका सार्वजनिक जग्गा लिजमा उपलब्ध गराउने व्यवस्था मिलाइने भनिएको छ । जग्गा चक्लाबन्दी गरी सहकारी पद्धतिबाट सामूहिक खेती गर्ने वा सहकारीमा आवद्ध भई "एक गाउँ एक उत्पादन" को लक्ष्य अनुसार एकै प्रकृतिको उत्पादनको अभियानमा लागेका कृषकहरूको सहकारीहरूलाई राज्यबाट विशेष सुविधाहरू उपलब्ध गराइ प्रोत्साहन गरिने भनिएको छ । कृषि क्षेत्रको उत्पादकत्व बढाउन उन्नत प्रविधिको प्रयोग गर्ने तथा प्राङ्गारिक खेतीलाई प्रोत्साहित गर्न कृषकहरू सहभागी सहकारीलाई विशेष सुविधाहरू उपलब्ध गराइने भनिएको छ । आर्थिक, सामाजिक, सांस्कृतिक र वातावरणीय विषयसँग सम्बन्धित नीति तथा कार्यक्रम तर्जुमा, कार्यान्वयन र अनुगमनमा सहकारीसँग सम्बन्धित केन्द्रीय वा स्थानीय सरकारी निकाय र सहकारी संघहरूको परामर्श लिइने प्रतिवद्धता व्यक्त गरिएको छ । सम्बन्धित विषयका सहकारी संघसंस्थाहरूको सहभागिता अभिवृद्धि गर्न र परामर्श लिन राज्यले गठन गर्ने विभिन्न समिति तथा उपसमितिमा सहकारी संघसंस्थाहरूको प्रतिनिधित्व सुनिश्चित गरिने भनिएको छ । स्वरोजगारमूलक विशेष कार्यक्रमहरू अन्तर्गत उपलब्ध गराइने सहूलियतपूर्ण कर्जा तथा अनुदान सहयोग कार्यक्रमहरूमा कृषि तथा ग्रामिण क्षेत्रका उत्पादन, वितरण तथा सेवामूलक सहकारीलाई प्राथमिकता दिइने स्पष्ट व्यवस्था गरिएको छ । सहकारी मार्फत कृषकहरूलाई सहुलियतपूर्ण ऋण सुविधाहरू उपलब्ध गराउन विभिन्न श्रोतहरूको उपयोग गरिने भनिएको छ । सहकारी संघ संस्थाहरूको उत्पादनलाई बजारीकरण गर्न सघाउ पुर्‍याउन विभिन्न स्थानहरूमा सरकार र सहकारी बिचको सहकार्यमा सहकारी बजार केन्द्रहरूको विकास र विस्तार गर्दैं लगिने भनि नीतिगत व्यवस्था गरिएको छ ।

**लक्षित समूहहरूमा सहकारी प्रवर्द्धन :**

लैङ्गिक दृष्टिकोणले पछि परेका सहकारीमा आवद्ध महिलाहरूलाई एकल तथा सामूहिक रूपमा उद्योग व्यवसाय सञ्चालन गर्ने क्षमता विकासका लागि आवश्यक पर्ने व्यावसायिक तथा सीपमूलक तालिम प्रदान गर्न सहयोग उपलब्ध गराइने, विपन्न परिवारलाई सहकारी संस्थाहरूमा आवद्ध गराई सामूहिक उद्योग व्यवसायहरू सञ्चालन गरी उनीहरूको आर्थिक, सामाजिक तथा सांस्कृतिक विकासमा योगदान पुर्‍याउने गरी लक्षित कार्यक्रमहरू सञ्चालन गरिने, लक्षित समूहद्वारा सञ्चालन गरिने उद्योग व्यवसायहरूका लागि बिउ पूँजीको व्यवस्थापन एवं व्यावसायिक क्षमता अभिवृद्धि गर्न सहुलियतपूर्ण ऋण तथा पूँजीगत अनुदान उपलब्ध गराइने जस्ता लक्षित समूहमा सहकारीको पहुँच विस्तार गरी गरिबी निवारण र सामाजिक एकीकरणमा योगदान पुर्‍याउने लक्ष्यहरू नीतिमा समेटिएको छ । त्यसैगरी सहकारी संघसंस्थाहरूको नेतृत्वमा लैङ्गिक समानता र समावेशीको अवधारणा विकास गर्न सकारात्मक विभेदका विशेष व्यवस्थाहरूका साथै नेतृत्व क्षमता विकासका लागि सशक्तिकरणका कार्यक्रमहरू सञ्चालन गरिने भनिएको छ । अनौपचारिक समूहहरूलाई सहकारीमा रूपान्तरण गरी क्षमता अभिवृद्धिका कार्यक्रमहरू सहित संस्था दर्ताको प्रक्रियालाई सहकारीका कार्यालयहरूबाट सहजिकरण गरिने र समुदायका सदस्यहरूलाई

सहकारीको माध्यमबाट एकजुट भई उद्योग व्यवसाय सञ्चालन गर्न उत्प्रेरित गर्ने खालका कार्यक्रमहरू सञ्चालन गरी आर्थिक विकासमा सबैलाई परिचालन गर्ने प्रयासलाई अभियान अन्तर्गत ल्याइने महत्वपूर्ण विषय नीतिले अंगिकार गरेको छ । गरिव घरपरिवार पहिचान सहित त्यस्ता व्यक्तिहरूलाई सहकारीमा संगठित गरी बचत परिचालन, विना धितो कर्जा, जोखिम व्यवस्थापन, सीपमूलक तालिम, कृषि उत्पादन तथा लघु उद्यम स्थापनामा सहयोग उपलब्ध गराइने व्यवस्था नीतिमा रहेको छ ।

सहकारीमा आवद्ध विपन्न महिला, सीमान्तकृत, गरिब समुदाय, अपाङ्ग, भूमिहीन तथा पिछडिएको समुदाय र श्रमिकहरूलाई स्वरोजगारमूलक उद्योग तथा व्यवसाय स्थापना गर्न आवश्यक पर्ने व्यावसायिक तथा सीपमूलक तालिमहरू प्रदान गर्ने व्यवस्था मिलाइने प्रतिवद्धता नीतिगत व्यवस्था भित्र रहको छ । महिला उद्यमशीलता र नेतृत्वको विकास गर्न महिलाहरूले सञ्चालन गरेका सहकारीहरू बिच सहकार्यका लागि सामूहिक लगानीका उद्योग व्यवसाय सञ्चालन गर्न प्रोत्साहन गरिने व्यवस्था नीतिमा रहेको छ । सहकारी मार्फत महिलाहरूद्वारा स्थापना गरिने साना तथा घरेलु उद्योगहरूलाई पूँजीगत अनुदान सहयोग उपलब्ध गराउने व्यवस्था मिलाइने भनिएको छ । सीमान्तकृत एवं न्यून आय भएका वर्गलाई सहकारीमा आवद्ध गराई उपलब्ध सीप, पूँजी तथा श्रमलाई अधिकाधिक परिचालन गरी जीविकामुखी/निर्वाहमुखी क्रियाकलापबाट व्यावसायिकता तर्फ उन्मुख तुल्याउने कार्यक्रमहरू सञ्चालन गरिने भनिएको छ । ग्रामिण क्षेत्रका कृषि सहकारीहरूलाई विषयगत आवश्यकताको आधारमा निर्दिष्ट कार्यविधि बमोजिम सहुलियत ब्याजदरमा ऋण सुविधा, कर्जाको ब्याजमा अनुदान, बाली तथा पशु बीमा गर्दा लाग्ने प्रिमियम रकममा अनुदान तथा मेशिन औजारको खरिद लगायतको पूँजीगत खर्चमा अनुदान दिने व्यवस्था मिलाइने प्रतिवद्धता व्यक्त गरिएको छ । पिछडिएका वर्ग, भूमिहीन लगायत श्रोत र साधन विहिन र अनौपचारिक क्षेत्रमा काम गर्ने श्रमिकहरूलाई आय आर्जनको क्रियाकलापमा संलग्न गराउन सहकारीमा आवद्ध गराई पूँजी माथिको पहुँचका लागि सहुलियतपूर्ण ऋण तथा पूँजीगत अनुदान उपलब्ध गराउने व्यवस्था गरिने भनिएको छ । परम्परागत पेसालाई व्यावसायिक बनाउन लक्षित समुदायलाई सहकारीमा संगठित गरी आधुनिक सीपमूलक तालिमको व्यवस्था गरी पूँजीमा पहुँच पुऱ्याउन सहुलियतपूर्ण ऋण तथा अनुदान सहयोग उपलब्ध गराउने व्यवस्था मिलाइने भनिएको छ । विपन्न समुदायका व्यक्तिहरूको सहभागिता र बाहुल्यता रहेका सहकारी संस्थाहरू परिचालन गरी गरिबी निवारणका क्रियाकलाप संचालन गर्न सरकारका सम्वद्ध निकायहरू र विकास साझेदारहरूलाई निर्देशित गरिने भनिएको छ । गरिव घरपरिवार पहिचान पत्रका आधारमा गरिवहरू मात्र सदस्य भई सञ्चालनमा ल्याइएका वा अन्य सहकारीमा आवद्ध परिचय प्राप्त गरिव सदस्यहरूलाई प्रदान गरिने विना धितो कर्जाको सुरक्षण, बचतको सुरक्षण, बालि तथा पशुधन विमा, कृषि तथा लघु व्यवसायका लागि पूँजीगत अनुदान, सीपमूलक तालिम जस्ता आय अभिवृद्धि तथा जोखिम व्यवस्थापनका कार्यमा निर्दिष्ट कार्यविधि बमोजिम सहयोग गर्ने आवश्यक व्यवस्था मिलाइने प्रतिवद्धता व्यक्त गरिएको छ । सहकारी उद्योग व्यवसायलाई उपलब्ध गराइने अनुदान सहयोग वा अन्य सुविधालाई प्रभावकारी बनाउन राष्ट्रिय योजना आयोग, अर्थ मन्त्रालय, सहकारी तथा गरिबी निवारण मन्त्रालय, सहकारी विभाग र राष्ट्रिय सहकारी संघका पदाधिकारीको सहभागिता रहने एक उच्चस्तरीय समितिको गठन गरी अनुदान कार्यक्रमलाई प्रभावकारी बनाइने संरचना व्यवस्था समेत प्रस्ताव गरिएको छ । राष्ट्रिय सहकारी विकास बोर्ड ऐन बमोजिमको सहकारी विकास कोष मार्फत सहकारी उद्योग व्यवसायलाई सहुलियतपूर्ण ऋण तथा अनुदान सहयोग परिचालन गर्न कोषको आकार र प्रभावकारितामा वृद्धि गरिने प्रतिवद्धता सहित सहकारी बोर्डको भूमिकालाई सहकारी अभियानमा स्थापित गर्ने लक्ष्य समेत नीतिमा समेटिएको छ ।

**प्रतिस्पर्धी, प्रभावकारी एवं गुणस्तरीय सहकारी व्यवसाय** :

सबै प्रकारका विभेदकारी व्यवस्थाहरूको अन्त्य गरी नीजी क्षेत्रसँग स्वस्थ प्रतिस्पर्धा गर्न सक्ने क्षेत्रको रूपमा सहकारीलाई एउटा व्यावसायिक पद्धतिको रूपमा व्यापकता दिइने लक्ष्य सहकारी नीतिको रहेको छ । आर्थिक विकासका सम्भावित क्षेत्रहरूमा सहकारी उद्योग व्यवसायको विस्तार एवं विविधिकरणलाई प्रोत्साहन गरिने भनिएको छ । सहकारी उद्योग व्यवसायलाई वित्तीय सहयोग उपलब्ध गराउनुका साथै आवश्यक पूर्वाधारको पहुँच अभिवृद्धि गरिने प्रयास समेत राज्यको रहने छ । सहकारी उद्योग व्यवसायलाई नाफामूलक नभै सदस्य र समुदायको सेवाप्रति केन्द्रित बनाउन र सहकारीको व्यवस्थापनलाई सिद्धान्तनिष्ट बनाउन उपयुक्त कर प्रणालीको विकास गरी सहकारी व्यवसायलाई प्रवर्द्धन गरिने प्रतिवद्धता नीतिमा समेटिएको छ । रोजगारी सिर्जना, उत्पादनमा वृद्धि, स्थानीय सम्भाव्यताको उपयोग, सेवा प्रवाहमा गुणस्तरीयता एवं उत्पादनको मूल्य अभिवृद्धिमा योगदान पुऱ्याउने सहकारी उद्योगहरूको स्थापना र क्षमता अभिवृद्धिको कार्यमा सहयोगका कार्यक्रमहरू सञ्चालन गरिने भनिएको छ । सहकारी उद्योग व्यवसायहरूको समग्र व्यवस्थापनलाई प्रभावकारी बनाउन सूचना प्रविधिको उपयोगमा विशेष

जोड दिइने र सहकारी क्षेत्रमा अनुसन्धान तथा विकासको कार्यलाई प्रोत्साहित गर्दै यस क्षेत्रमा नविन प्रयोग तथा सम्भावनाका नँया क्षेत्रहरूको पहिचान गरिने उल्लेख छ ।

सहकारी क्षेत्रको उत्पादकत्व र गुणस्तरमा वृद्धि ल्याउन कृषि सहकारीका पदाधिकारी तथा सदस्यहरूलाई आवश्यक पर्ने तालिम, अवलोकन भ्रमण तथा अनुशरण कार्यक्रमहरू र परामर्श सेवा सुविधाहरूको विस्तार गरिने भनिएको छ । सहकारी संघ संस्थाहरूलाई व्यावसायिक रूपमा सक्षम तुल्याउन सहकारीका सदस्यहरूलाई लक्षित गरी प्राविधिक तथा व्यावसायिक तालिमका विशेष कार्यक्रमहरू सञ्चालन गरिने भनिएको छ । सहकारी उद्योग व्यवसायका लागि आवश्यक पर्ने दक्ष जनशक्तिको सहज उपलब्धताका लागि मानव संशाधन विकास योजना बनाउन र सम्बन्धित निकायहरू बिच समन्वय गर्न राष्ट्रिय सहकारी विकास बोर्डको भूमिका प्रभावकारी बनाइने कुरा नीतिमा उल्लेख छ । सहकारी क्षेत्रको उत्पादन तथा सेवा प्रवाहमा प्रतिस्पर्धात्मक एवं गुणात्मक क्षमता वृद्धिको लागि उपयुक्त प्रविधिको अवलम्बनमा प्रोत्साहन हुने गरी आर्थिक सहयोग तथा सुविधाहरू उपलब्ध गराइने प्रतिवद्धता व्यक्त गरिएको छ । सहकारी उद्योग तथा व्यवसायलाई आकर्षित र प्रतिस्पर्धी तुल्याउन उत्पादनको आधार तथा परिमाण, भौगोलिक विकटता, सेवा प्रवाह एवं रोजगारी सिर्जना जस्ता आधारमा विशेष सुविधाहरू उपलब्ध गराइने भनिएको छ । ग्रामिण क्षेत्र तथा कम विकसित नगरपालिका र लक्षित समूहका महिला, अपाङ्ग, मजदुर, श्रमिक र पिछडिएका तथा गरिव व्यक्तिहरू मात्र आवद्ध सहकारी संस्थाहरूको संस्थागत विकासमा सहयोग पुऱ्याउने गरी उपयुक्त कर प्रणालीको विकास गरिने प्रतिवद्धता समेत नीतिमा अभिव्यक्त गरिएको छ ।

**व्यावसायिकता र सुशासन** :

सहकारीका पदाधिकारी, व्यवस्थापक र कर्मचारीहरूको गुणस्तर र क्षमता अभिवृद्धिमा विशेष जोड दिइने भनिएको छ । सहकारीको व्यवस्थापनलाई विधि र प्रक्रियामा आधारित बनाई सहभागिता, पारदर्शिता र जवाफदेहितालाई व्यवहारमा सुनिश्चित गर्ने व्यवस्था मिलाइने अठोट लिइएको छ । सहकारीका पदाधिकारी, व्यवस्थापक र कर्मचारीहरूलाई सहकारी सञ्चालनका मापदण्डहरू र आचार संहिताको पालनामा जिम्मेवार बनाइने भनिएको छ । सहकारी संघ संस्थाहरूको आन्तरिक नीयन्त्रण पद्धति र लेखापरीक्षणलाई थप व्यवस्थित गरी स्व-नियमनको अभ्यासलाई प्रभावकारी बनाइने भनिएको छ । निश्चित सीमा भन्दा बढीको कारोबार गर्ने सहकारीको व्यवस्थापनमा सञ्चालक समिति र व्यवस्थापन बिचको कार्य विभाजन र सम्बन्धलाई परिभाषित गरी संस्थागत संस्कृति (Corporate Culture) को विकास गरिने भनिएको छ । प्रभावकारी सूचना सम्प्रेषणको विधि अवलम्बन गरी गराई सहकारीका सदस्यहरूमा सूचना तथा जनचेतना प्रवाह गरी सहकारीमा सुशासनको प्रवर्द्धन गरिने भनिएको छ । सहकारी मार्फत हुने वित्तीय कारोबारलाई सुरक्षित र भरपर्दो बनाउन सबै सहकारीको नीयमित अनुगमन र सो को आधारमा नियमन हुने प्रभावकारी व्यवस्था गरिने भनिएको छ । व्यवस्थापनमा सहकारी पद्धति विपरितका कार्यहरू र सहकारीको श्रोत साधनको दुरूपयोग गर्ने प्रवृत्ति अन्त्य गर्न शून्य सहनशीलताको नीति अवलम्बन गरिने भनिएको छ । सहकारीको संघीय संरचनालाई व्यावसायिक र सदस्य संघसंस्थाहरू प्रति बढी जिम्मेवार बनाउन प्रभावकारी कानूनी व्यवस्था गरिने प्रावधान नीतिमा रहेको छ । सहकारीहरू बिच स्वस्थ प्रतिस्पर्धाको विकास गर्न संस्थाहरूलाई विषयगत संघहरूमा आवद्ध गराई सहकारीहरू बिचको सहकार्यको संस्कृतिलाई प्रवर्द्धन गरिने दृढता प्रकट गरिएको छ । सहकारीको मूल्य र सिद्धान्तहरूको प्रवर्द्धन गर्न तथा सहकारी संघ संस्थाहरूको क्षमता अभिवृद्धिमा सहयोग पुऱ्याउन गैर नाफामूलक सहकारी संस्थाहरूको गठनलाई प्रोत्साहन गरिने भनिएको छ ।

सहकारी संघसंस्थाहरूको सञ्चालन तथा व्यवस्थापनमा जवाफदेहिता, सहभागिता र पारदर्शितालाई संस्थागत गर्दै लगिने छ र यसका लागि विद्यमान सहकारी ऐन नियम समयानुकूल पूनरावलोकन गरिने प्रतिवद्धता व्यक्त गरिएको छ । सहकारी सम्बन्धी मूल्य र सिद्धान्तहरू अनुसरण गर्दै प्रचलित सहकारी ऐन नियम बमोजिम सहकारी संघसंस्थाहरूको सञ्चालन तथा व्यवस्थापन गर्ने सहकारी संघसंस्थाका पदाधिकारीहरूलाई जिम्मेवार र जवाफदेही बनाइने भनिएको छ । सहकारी संघसंस्थाहरूका सदस्यहरूको बचत रकमको सुरक्षण गर्ने गरी संघसंस्थाहरूको योगदानमा आधारित बचत सुरक्षण कोषको व्यवस्था गरिने भनिएको छ । लगानीको सुरक्षाका लागि लगानीका मापदण्डहरू निर्धारण गरी सो कार्यको अनुगमन नियमनका साथै कर्जा सूचना प्रणालीको प्रभावकारी व्यवस्था मिलाइने भनिएको छ । सहकारी संघसंस्थाहरूको व्यवस्थापनलाई सवल बनाउन सहकारी संघसंस्थाको लेखा तथा लेखापरीक्षण कार्यलाई थप व्यवस्थित बनाउँदै लगिने भनिएको छ । सार्वजनिक सुनुवाईको नीयमितता मार्फत सहकारीका संघसंस्थाहरूलाई सदस्य र समुदायप्रति जिम्मेवार र पारदर्शी व्यवहारतर्फ उत्प्रेरित गरिने प्रतिवद्धता व्यक्त गरिएको छ । सहकारीका सिद्धान्त, मूल्य र मापदण्डहरूको अनुशरण गरी समग्र सहकारी क्षेत्रलाई

स्वनियमनको अभ्यास गर्ने थलो बनाउन आन्तरिक नीयन्त्रण, बाह्य परीक्षण र निहित स्वार्थको द्वन्द (Conflict of Interest) व्यवस्थापनका लागि उपयुक्त व्यवस्थाहरू गरिने भनिएको छ । सहकारी संघसंस्थाहरूको नीयमित रूपमा अनुगमन र नियमन गर्न सहकारी विभागलाई आवश्यक साधन श्रोत र अधिकार सहित जिम्मेवार निकायको रूपमा विकास गरिने भनिएको छ । सहकारी संस्थाहरूमा स्वस्थ प्रतिस्पर्धाको विकास गर्न र लागत प्रभावकारिता कायम गर्न "एक सदस्य एक सहकारी" को नीति अंगिकार गरिने विषय नीतिमा समेटिएको छ । कुनै निर्दिष्ट भौगोलिक क्षेत्रमा एउटा विषयको कारोबार गर्ने सहकारी संस्थाहरूको संख्या अत्यधिक भई अस्वस्थ प्रतिस्पर्धाको स्थिति देखिएमा निश्चित अवधिका लागि त्यस्ता स्थानहरूमा नयाँ संस्था दर्तामा रोक लगाउने व्यवस्था समेत गर्न नीतिले मार्ग प्रशस्त गरेको छ ।

सहकारीका सदस्यहरूलाई सहकारी शिक्षाको नीयमित व्यवस्था मिलाउन सहकारी संस्थाहरूलाई जिम्मेवार बनाइने भनिएको छ । दर्ताका लागि प्रस्तावित सहकारी संस्थाका निवेदक सदस्यहरूलाई दर्ता अघि सहकारी सम्बन्धी अनुशिक्षण लिनु पर्ने व्यवस्थालाई अनिवार्य गरिने भनिएको छ । निश्चित सिमाभन्दा बढीको वित्तीय कारोबार गर्ने सहकारी संघसंस्थाहरूको कारोबारको मासिक तथा वार्षिक प्रतिवेदन लिई अनुगमन कार्यलाई थप प्रभावकारी बनाइने र यस्ता प्रतिवेदनहरू संकलन तथा विश्लेषणको कार्यलाई व्यवस्थित गर्न सूचना प्रविधिको उपयोग गरिने भनिएको छ । क्षमताको विश्लेषण गरी सम्बन्धित विषयका केन्द्रीय सहकारी संघहरूलाई आफ्‍ना सदस्य संघसंस्थाहरूको स्वंय अनुगमन गरी नियमनको कार्यमा नेपाल राष्ट्र बैंक, सहकारी विभाग र सहकारीका कार्यालयहरूलाई सघाउने प्रणालीको विकास गरिने प्रतिवद्धता व्यक्त गरिएको छ । सहकारीमा व्यावसायिकता र सहकार्यको संस्कृतिलाई प्रवर्द्धन गर्न उपयुक्त कानूनी व्यवस्था, आचार संहिताको निर्माण, समितिका सदस्यहरूको निर्वाचन तथा नीयुक्ति प्रक्रियाको अनुगमन र नियमनमा विशेष जोड दिइने भनिएको छ । स्पष्ट मापदण्ड र कार्यविधिहरूका आधारमा सहकारी संघसंस्थाहरूको नियमन कार्य सञ्चालन गरिने भनिएको छ । एकीकरण कार्यलाई प्रोत्साहन गर्न थप सुविधाको प्रावधान र विशेष कार्यक्रमहरू सञ्चालन गरी सहकारीका संघसंस्थाहरूको संख्यालाई सीमित बनाई क्षमता वृद्धि गर्न अभिप्रेरित गरिने भनिएको छ । निर्दिष्ट मापदण्ड बमोजिम न्यूनतम शर्तहरू पुरा गर्न नसक्ने सहकारीहरूलाई मर्जरमा लैजाने अनिवार्य शर्तहरूको निर्माण गरी कार्यान्वयनमा ल्याइने भनिएको छ । वित्तीय कारोबार गर्ने सहकारीहरूलाई सेवा विशिष्टिकरणको आधारमा अन्य कारोबार गर्न निरूत्साहित गरिने र यो व्यवस्था शहरी क्षेत्रमा तत्कालै कार्यान्वयनमा लगिने भनिएको छ । वित्तीय सहकारीको अनुगमनको लागि कारोबार र सदस्यताका आधारमा नेपाल राष्ट्र बैंक, सहकारी विभाग र सम्बन्धित केन्द्रीय सहकारी संघ र कृषि सहकारी संस्थाहरूको अधिकांश स्वामित्व रहेको साना किसान विकास बैंकको उपयोग गर्ने व्यवस्था मिलाइने भनिएको छ । शहरी क्षेत्रमा वित्तीय सहकारीको सघनतालाई नीयन्त्रण गर्ने उपयुक्त व्यवस्थाहरू गरी सहकारी वित्तीय सेवाहरूलाई ग्रामिण तथा वित्तीय सेवा नपुगेका क्षेत्रहरूमा विस्तार गर्ने गरी आवश्यक व्यवस्थाहरू मिलाइने भनिएको छ । वित्तीय कारोबार गर्ने उद्देश्यले स्थापना गरिने सहकारी संघ संस्थाहरूको दर्ताको लागि सम्भाव्यता अध्ययनलाई अनिवार्य गरिने र यसका लागि निर्दिष्ट कार्यविधि बनाई सो को पालना गर्ने गरी सहकारी प्रशासनलाई पारदर्शी बनाइने भनिएको छ । सहकारी मार्फत सञ्चालन गरिने लघु वित्त कार्यक्रमलाई सदस्यहरूको आर्थिक शोषण नहुने गरी परिचालन गर्न र सहकारी मार्फत गरिने थोक कर्जा प्रवाहमा एक रूपता कायम गर्न स्पष्ट कार्यविधिहरूको तर्जुमा गरी कार्यान्वयनमा ल्याइने भनिएको छ ।

**सरकार, सहकारी, निजी क्षेत्र तथा विकास साझेदारहरू बिच सहकार्य :**

सरकार, निजी क्षेत्र र सहकारी बिचको सहकार्य र साझेदारीमा उत्पादन तथा सेवामूलक उद्योग व्यवसायहरूको स्थापना गर्न प्रोत्साहन गरिने नीतिगत व्यवस्था गरिएको छ । सहकारी उद्योग व्यवसायको विकास, विस्तार र प्रवर्द्धनमा स्थानीय निकाय तथा विकास साझेदारहरूको सहभागितालाई प्रोत्साहित गरिने र देशको आर्थिक विकासमा सहकारी क्षेत्रको योगदान अभिवृद्धि गर्न उत्पादनका अन्य क्षेत्रहरूसँग अग्र तथा पृष्ठ सम्बन्ध कायम हुने विशेष व्यवस्थाहरू गरिने भनिएको छ । राष्ट्रिय अर्थतन्त्रमा सहकारी क्षेत्रको योगदानलाई गणना गरी प्रकाशन गर्ने गरी जिम्मेवार निकायहरूलाई परिचालन गरिने भनिएको छ । सहकारीको विकास, विस्तार र प्रवर्द्धनमा सम्बन्धित सरकारी, गैर सरकारी तथा सहयोगी निकायहरूको सहयोगीलाई समन्वयात्मक ढंगले परिचालन गर्ने पद्धतिको विकास गरिने भनिएको छ । जनशक्ति विकास, अध्ययन अनुसन्धान तथा अनुशरण, लक्षित समुदाय र क्षेत्रमा सहकारी उद्योग व्यवसायको विकास सम्बन्धी एकीकृत कार्यक्रम एवं सहकारी उद्योग व्यवसायलाई टेवा पुग्ने पूर्वाधार विकासका लागि द्विपक्षीय तथा बहुपक्षीय वैदेशिक सहयोग परिचालन गरी सहकारी क्षेत्रको सन्तुलित र अपेक्षित विकास गरिने भनिएको छ । सहकारी क्षेत्रको विकासका लागि न्यून हुने पूँजी परिपूर्ति गर्न सहुलियतपूर्ण

ऋण तथा अनुदान सहयोगका लागि वैदेशिक एवं आन्तरिक श्रोत परिचालनका अवसरको उपयोग गरिने भनिएको छ । राष्ट्रिय सहकारी अभियानलाई विश्व सहकारी अभियानसँग जोडी राम्रा अभ्यासहरूको अनुसरण एवं आपसी सहयोगहरू प्रवर्द्धन गर्न मित्र राष्ट्रहरूसँग द्विपक्षिय, क्षेत्रिय र अन्तर्राष्ट्रियस्तरमा सम्बन्ध र सहकार्यको लागि रचनात्मक प्रयासहरू गरिने भनिएको छ ।

सहकारीको विकास, विस्तार र प्रवर्द्धनको कार्यमा स्थानीय तहका सरकारी निकायहरू, स्थानीय निकायहरू, सहकारी संघसंस्थाहरू, सहयोगी संस्थाहरू र नागरिक समाजका बिचमा स्थानीय सञ्जाल निर्माण गरी सहकार्य र समन्वयको संस्कृति विकास गरिने भनिएको छ । सहकारी क्षेत्रको विकास, विस्तार र प्रवर्द्धनका लागि स्थानीय निकायहरूको अग्रसरता र सहभागितालाई सुनिश्चितता प्रदान गरिने र स्थानीयस्तरमा सहकारीको विकास र प्रवर्द्धन गर्ने भूमिकामा स्थानीय निकायहरूको अगुवाईलाई प्रोत्साहन गरिने भनिएको छ । सहकारी र निजी क्षेत्रको बिचमा उत्पादन, प्रशोधन तथा बजारीकरणको कार्यमा सहकार्यको संस्कृति विकास गरी एक अर्का बिच परिपूरकको सम्बन्धलाई विकसित गर्दै लगिने भनिएको छ । सहकारी क्षेत्रको विकास, विस्तार र प्रवर्द्धनमा साझेदारहरूको सहभागिता एवं सहयोगलाई समन्वयात्मक ढंगले परिचालन गरिने भनिएको छ । सहकारी क्षेत्रको विकासका लागि द्विपक्षीय र बहुपक्षिय सहयोग परिचालन गर्न विभिन्न मित्र राष्ट्रहरूका सहयोगी सरकारी तथा गैर सरकारी निकायहरूसँग सहकार्य गर्ने, सहकारीका क्षेत्रिय तथा विश्वस्तरका सहकारी संघ संस्थाहरूसँग सहयोगको आदान प्रदान गर्न विभिन्न तहका सञ्जालमा सक्रिय सहभागिता जनाउने, सहयोगी संस्था तथा निकायहरूसँग जीवन्त सम्बन्ध कायम राखी सहकारी अभियानलाई निरन्तर रूपमा प्रवर्द्धन गरिने भनिएको छ । सहकारी क्षेत्रको विकास, विस्तार र प्रवर्द्धनमा महत्वपूर्ण योगदान पुऱ्याउने निकाय र व्यक्तिहरूलाई नीयमित रूपमा सम्मान तथा पुरस्कृत गर्ने व्यवस्था गरिने प्रतिवद्धता नीतिमा समेटिएको छ ।

**योजनावद्ध विकास, आवश्यक संगठन संरचनाको निर्माण एवं कानूनी व्यवस्था:**

सहकारी क्षेत्रको विकास, विस्तार र प्रवर्द्धनका लागि दीर्घकालीन रणनीतिक योजनाको तर्जूमा गरी कार्यान्वयन गरिने व्यवस्था रहेको छ । विद्यालय तथा उच्च शिक्षाको पाठ्यक्रममा सहकारी शिक्षालाई उचित स्थान दिनुका साथै सहकारी प्रशिक्षण केन्द्रहरूको क्षमता, गुणस्तर र पहुँच अभिवृद्धि गरिने प्रतिवद्धता व्यक्त भएको छ । सहकारी विभाग तथा अन्तर्गतका कार्यालयहरूको संगठन संरचनामा पुनरावलोकन गरी सेवा प्रवाहलाई प्रभावकारी बनाइने भनिएको छ । सहकारी संघहरूलाई अभियानको अगुवाई गर्ने र व्यवसायलाई सुदृढ गर्ने उद्देश्य तर्फ केन्द्रित हुने गरी सहकारी क्षेत्रको स्वायत्तता र स्वतन्त्रताको अभ्यासलाई सुदृढ गरिने र सेवा र उत्पादनको प्रकृतिको आधारमा विषयगत संघ संस्थाहरूको गठन र सञ्चालनलाई प्रोत्साहन हुने गरी संघ संस्था दर्ता सम्बन्धी प्रावधानहरू स्पष्ट पारिने प्रतिवद्धता व्यक्त भएको छ । सहकारी संघसंस्थाहरूलाई प्रभावकारी ढंगले परिचालन गर्न अल्पकालीन र दीर्घकालिन योजना निर्माण गरी सहकारी क्षेत्रको विकास, विस्तार र प्रवर्द्धन गरिने भनिएको छ । सहकारी क्षेत्रको लागि आवश्यक पर्ने मानव संशाधनको प्रक्षेपण तथा जनशक्ति व्यवस्थापनको लागि सुदृढ संरचनाहरूको विकास गरिने भनिएको छ । जनशक्ति प्रक्षेपणको कार्यमा सहकारी विकास बोर्ड र जनशक्ति विकासमा विश्वविद्यालयहरू, उच्च माध्यमिक शिक्षा परिषदसँग सहकार्य र समन्वय गरी आवश्यक व्यवस्थाहरू मिलाइने स्पष्ट प्रावधान राखिएको छ । जनशक्ति विकासको काममा सहकारी प्रशिक्षण केन्द्रहरू र सहकारीका संघहरूलाई समेत परिचालन गरिने भनिएको छ । राष्ट्रिय सहकारी विकास बोर्डलाई सहकारीको विशेषज्ञ निकायको रूपमा विकास गर्न आवश्यक स्रोत तथा साधन उपलब्ध हुने व्यवस्था सुनिश्चित गरिने भनिएको छ । यसका लागि आवश्यकताका आधारमा संगठन संरचना र कानूनी व्यवस्थामा परिमार्जन गरिने भनिएको छ । सहकारी संघ संस्थाहरूको विकास, विस्तार र प्रवर्द्धनका लागि विषयगत आधारमा सम्बन्धित मन्त्रालय, विभाग, बोर्ड, समिति तथा निकायहरूलाई जिम्मेवार बनाउँदै लगिने भनिएको छ । राष्ट्रिय सहकारी संघको भूमिकालाई प्रभावकारी बनाउन संघको क्षमता अभिवृद्धि तथा सहकारी क्षेत्रको प्रवर्द्धनात्मक कार्यमा सहयोग र सहकार्यको संस्कृति विकास गरिने भनिएको छ । सहकारी संघहरूको भूमिकालाई प्रभावकारी बनाउन देहाय बमोजिमको व्यवस्था गरी संघहरूलाई सवल बनाउने कार्ययोजना रहेको छ : (क) सहकारी अभियानलाई नेतृत्व प्रदान गर्ने गरी विभिन्न तहका सहकारी संघहरूको संगठन संरचनालाई प्रभावकारी बनाउँदै लगिने । (ख) व्यावसायिक उद्देश्यले संघ संस्थाहरूलाई आवश्यकता र सम्भाव्यताका आधारमा विभिन्न तहमा संगठित भई संयुक्त रूपमा उद्योग व्यवसाय गर्न प्रोत्साहित गरिने । (ग) सहकारीका संघहरूको नेतृत्वमा महिलाहरूको सहभागिता कम्तीमा ४० प्रतिशत पुऱ्याउने गरी समतामूलक सकारात्मक विभेदका व्यवस्थाहरू अवलम्बन गरिने । (घ) निर्दिष्ट भौगोलिक क्षेत्रका सबै सहकारी संघ संस्थाहरूलाई सम्बन्धित संघहरूमा सदस्यता लिन प्रोत्साहन गरिने । (ङ) संघसंस्थामा रहेको सदस्य संख्याको आधारमा संघमा मतदानको अधिकार कायम हुने

व्यवस्था मिलाई संघहरूको संरचनालाई बढी भन्दा बढी प्रतिनिधित्व मूलक बनाइने र (च) संघहरूको नेतृत्वलाई गैर राजनैतिक बनाउन आचार संहिता र मापदण्डहरूको उपयोग गरिने ।

क्षेत्रगत नीति तथा कानूनहरूमा सहकारी सम्बन्धी व्यवस्था समावेश गरी सहकारी उद्योग व्यवसायको दायरा फराकिलो बनाइने भनिएको छ । सहकारी ऐनमा समेत क्षेत्रगत विषयहरूलाई सम्बोधन गरिने प्रतिवद्धता व्यक्त भएको छ । राष्ट्रिय सहकारी बैंकलाई सहकारीको साझा स्वामित्वको बैंकको रूपमा विकास गर्न सबै सहकारी संघसंस्थाहरूलाई सदस्यता लिन प्रोत्साहन गरिने भनिएको छ । सहकारी बैंकको व्यवस्थापन र नियमनको लागि आवश्यक कानूनी व्यवस्था गरिने भनिएको छ । बचत तथा ऋणको कारोबार गर्ने सहकारीलाई व्यवस्थित रूपमा सञ्चालन गर्न छुट्टै बचत तथा ऋण सहकारी ऐनको निर्माण गरिने प्रतिवद्धता व्यक्त गरिएको छ । सहकारी क्षेत्रको प्रशासनिक कार्यहरूमा दक्ष अधिकृत तथा कर्मचारीहरूको उपलब्धता सुनिश्चित गर्न निजामती सेवा अन्तर्गत वृत्ति विकासको अवसर सहित सहकारी समूहको व्यवस्था गरिने भनिएको छ । सहकारी तथा गरिबी निवारण मन्त्रालय वा अन्तर्गतका निकायहरूमा कार्यरत कर्मचारीहरूको वृत्ति विकासका अवसरहरूमा वृद्धि गरी आकर्षक समूहको रूपमा विकसित गरिने प्रतिवद्धता नीतिमा समेटिएको छ । सहकारी क्षेत्रको विकास, विस्तार र प्रवर्द्धनको कार्यमा सहकारी संघसंस्थाहरूको भूमिकालाई महत्व दिई राज्यको भूमिका सहजकर्ता र नियमनकारी निकायको रूपमा सीमित गर्दै लगिने दीर्घकालिन सौँच राज्यको रहेको कुरो नीतिमा स्पष्ट रूपमा अभिव्यक्त भएको छ । राज्य नीयन्त्रित र निर्देशित पुराना साझा संस्थाहरूलाई प्रचलित कानून तथा सहकारीका सिद्धान्त बमोजिम पूर्णरूपमा सहकारीकरण गरिने अठोट लिइएको छ ।

**(२) आवधिक योजना र कार्यक्रमहरू :**

नेपालका हरेक जसो आवधिक योजनामा सहकारीको विकास र प्रवर्द्धनका लागि व्यवस्था गरिएको पाइन्छ । यहाँ अहिले कार्यान्वयनमा रहेको १४ औ त्रिवर्षीय योजनामा सहकारीको बारेमा गरिएको व्यवस्थाहरू उल्लेख गरिएको छ ।

**चौधौं योजनामा सहकारी (२०७३ श्रावण देखि २०७६ अषाढसम्म)**

**कार्यनीतिहरू :**

(१) सहकारी संस्थालाई कृषि, पर्यटन, उद्योग, ऊर्जा जस्ता प्रत्यक्ष उत्पादनशील क्षेत्रमा परिचालन गरिने ।

(२) सहकारी संस्थाहरूको व्यवस्थापनमा दक्षता अभिवृद्धि गर्न तालिमको व्यवस्था गरिने ।

(३) कृषि तथा ग्रामिण सहकारी संस्थाहरूको उत्पादनलाई बजारीकरण गर्नका लागि सघाउ पु¥याउन विभिन्न बजार तथा बजार सूचना केन्द्रको विकास गरिने ।

(४) सहकारी मैत्री कर प्रणालीको विकास गरिने ।

(५) स्थानीय निकाय, विकास साझेदार र सामुदायिक संस्थाहरू समेतबाट सहकारी क्षेत्रमा वित्तीय तथा प्राविधिक सहायता परिचालन गरिने ।

(६) सहकारीमा आवद्ध विपन्न महिला, सीमान्तकृत गरिब, अपाङ्गता भएका व्यक्ति, भूमिहीन तथा पिछडिएको समुदाय र श्रमिकलाई स्वरोजगारमूलक उद्योग तथा व्यवसाय स्थापना गर्न आवश्यक पर्ने पूँजी र सीपमूलक तालिम उपलब्ध गराउने व्यवस्था मिलाइने ।

(७) महिला, गरिब, सीमान्तकृत, अपाङ्गता भएका व्यक्ति, भूमिहीन तथा पिछडिएका वर्ग र श्रमिकको जीवनस्तरमा सुधार ल्याउन सहकारी पद्धतिको व्यवसायमा पहुँच बढाइने ।

(८) सहकारीमा आवद्ध कृषकलाई सहुलियत कर्जाका लागि कृषि सहकारी संस्थाहरूको स्वामित्व रहेको साना किसान विकास बैंक मार्फत पूँजी परिचालनमा सहयोग पु¥याइने ।

(९) युवाहरूलाई स्वदेशमै काम गर्ने वातावरण सिर्जना गर्न सहकारी मार्फत रोजगारी सिर्जना तथा युवा स्वरोजगार कार्यक्रम सञ्चालन गरिने ।

(१०) सहकारी सूचना प्रणालीको विकास गरी सोको प्रयोगबाट अनुगमन कार्यलाई प्रभावकारी बनाइने ।

(११) सहकारीका बचतकर्ताहरूको बचतको सुरक्षाको प्रत्याभूति गर्न बचत सुरक्षण (बीमा) को व्यवस्था गरिने ।

(१२) वित्तीय अवस्था र कारोबार आकारको आधारमा सहकारी संस्थाको वर्गीकरण गरिने ।

(१३) सहकारी क्षेत्रको विकासका लागि आवश्यक कानूनी व्यवस्था, दीर्घकालीन रणनीतिक योजनाको तर्जुमा एवं उपयुक्त संगठन संरचनाको निर्माण गरिने ।

(१४) सहर केन्द्रित बचत तथा ऋण सहकारी संस्थाहरूको नियमनका लागि छुट्टै संयन्त्रको स्थापना गरिने ।

**प्रमुख कार्यक्रमहरू** :

क. **सहकारी क्षेत्रको प्रवर्द्धन कार्यक्रम** : १. कृषि, उद्योग र सेवाको क्षेत्रमा रोजगारीको सिर्जना तथा उत्पादन वृद्धि । २. राष्ट्रिय प्राथमिकताका क्षेत्रहरूको विकासका लागि प्रोत्साहन तथा सहभागितामा आधारित पूँजीगत अनुदान । घ। लक्षित समूह सहकारी प्रवर्द्धन र पहुँच अभिवृद्धि कार्यक्रमः सहकारी सचेतना, संस्था गठन, विकास, शिक्षा र तालिम तथा आयोजना सञ्चालनका लागि क्षमता विकास, बिउ पूँजी, प्राविधिक सहयोग वा सहभागितामा आधारित पूँजीगत अनुदान उपलब्ध गराउने ।

ख. **उद्यमशीलता तथा क्षमता विकास** : १. सहकारी संघ-संस्थाका पदाधिकारी र कर्मचारीहरूलाई सहकारी व्यवस्थापन तथा उद्यमशीलता र नेतृत्व विकासका तालिम । २. प्रशिक्षक तथा प्रशिक्षण विधि, पाठ्यपुस्तक पाठ्यक्रम तथा पाठ्य सामाग्रीहरूको स्तरोन्नति र सुधार । घ।सहकारी विभाग र मातहत तालिम केन्द्रहरू, डिभिजन सहकारी कार्यालयहरू मार्फत सहकारीसम्बन्धी वित्तीय साक्षरता कार्यक्रम सञ्चालन ।

ग. **सहकारीसम्बन्धी सञ्चार** : १. सहकारी सञ्चार रणनीति तर्जुमा । २. सहकारीको विकास तथा प्रवर्द्धनको लागि सहकारीका सर्वमान्य सिद्धान्त, मूल्य र स्थापित मान्यतामा आधारित सहकारी विधिहरूसम्बन्धी स्रोत सामाग्रीहरू निर्माण, सुधार तथा प्रचार प्रसार गर्ने ।

घ. **अनुगमन, अनुसन्धान तथा मूल्याङ्कन** : १. सहकारी संघसंस्थाहरूको सुदृढिकरण, विकास र प्रवर्द्धनको लागि नीयमित अनुगमन, नियमन र निरीक्षण । २. सहकारी तथा गरिबी निवारण सूचना प्रणालीको स्थापना । घ. सहकारी क्षेत्रसम्बन्धी अध्ययन तथा अनुसन्धान ।

**आर्थिक सामाजिक क्षेत्रमा सहकारी क्षेत्रको भूमिका** : समुदायमा रहेको स्रोत साधनको सङ्गठित संस्था मार्फत परिचालन गरी सामाजिक रूपान्तरण, समावेशी आर्थिक वृद्धि र समुदायको सशक्तीकरण गर्ने कार्यमा सहकारीको भूमिका रहनेछ । सरकार उपस्थित हुन नसक्ने र निजी क्षेत्र आकर्षित नहुने क्षेत्रमा आधारभूत वस्तु र सेवा प्रवाहलाई सुनिश्चित गर्न सहकारी क्षेत्रको भूमिका महत्वपूर्ण रहने । खासगरी ग्रामिण तथा स्थानीयस्तरमा जनसमुदायलाई संगठित गरी उनीहरूको आर्थिक-सामाजिक रूपान्तरण गर्न र समावेशी आर्थिक वृद्धिमा सहकारी क्षेत्रले महत्वपूर्ण भूमिका निर्वाह गर्नेछ । सहकारीको अभियान, सञ्जाल र शक्तिलाई उद्यम विकास, समावेशी आर्थिक वृद्धि, गरिबी निवारण, सामाजिक सुरक्षा र समुदायको विकासमा सक्रिय गराइनेछ । यसरी सहकारीलाई आर्थिक र सामाजिक क्षेत्रमा परिचालन गर्ने गरी चौधौं योजनाले सहकारी क्षेत्रको भूमिका खोजेको छ ।

कूल ग्राहस्थ उत्पादनसँगको अनुपातमा सहकारी क्षेत्रको लगानी र सार्वजनिक खर्चमा २ प्रतिशतले योगदान पुग्ने अनुमान गरिएको छ । राष्ट्रिय बचत अभिवृद्धि गरी लगानी वृद्धि गर्न सहकारीलाई एक माध्यमको रूपमा तोकिएको छ । कार्यनीति अन्तर्गत सार्वजनिक, निजी, सहकारी एवं गार्हस्थ्य क्षेत्रमा उपभोगलाई व्यवस्थित गरी बचत अभिवृद्धि गरिने, साना बचतकर्ता खाशगरी कृषक, साना उद्यमी र मजदुरहरूलाई बचत एवं लगानी प्रति आकर्षण गर्न विभिन्न उत्प्रेरणा र प्रवर्द्धनका कार्यक्रमहरू सञ्चालन गर्ने, वैदेशिक रोजगारमा जाने व्यक्ति तथा तिनका परिवारलाई लक्षित गरी वित्तीय साक्षरता सम्बन्धी कार्यक्रमहरू सञ्चालन गरिने, बचत समूह तथा सहकारी संस्थाहरूलाई प्रवर्द्धन गरी साना बचतकर्ताको बचत अभिवृद्धि गरिने, सरकारी ऋणपत्र तथा बचतपत्रहरूको कारोबारमा ग्रामिण तथा साना सहरहरूमा पहुँच समेत विस्तार गर्न बैंक तथा वित्तीय संस्थाका शाखाहरू र सहकारी संस्थाहरूलाई परिचालन गरिने कार्यनीति तय गरिएको छ । मौद्रिक नीति भित्र सहकारी संस्था लगायत लघुवित्त संस्थाहरूको नियमन, सुपरिवेक्षण र अनुगमनको लागि एक छुट्टै निकायको स्थापना गरी कार्यान्वयनमा ल्याइने कार्यनीति तय गरिएको छ ।

### कृषि क्षेत्रको योजना भित्र सहकारी

निजी तथा सहकारी क्षेत्रको संलग्नता बढाउँदै करार सम्झौतामा आधारित तथा सहकारी खेतीलाई प्राथमिकता दिई मूल्य श्रृङ्खला पद्धति अनुसार उत्पादनदेखि बजारीकरणसम्मका कार्यक्रमहरू एकीकृत रूपमा सञ्चालन गरिनेछ ।

### कार्यक्रमहरू

कृषि उत्पादन तथा उत्पादकत्व वृद्धि : समूहमा आधारित साना सिंचाई निर्माण तथा मर्मत सम्भार, सहकारीमा आधारित साना सिंचाई पूर्वाधार निर्माण, मध्य पहाडी जिल्लाहरूमा प्लास्टिक पोखरी तथा मध्य तराईका जिल्लाहरूमा स्यालो ट्युवेल जडान गरी सिञ्चित क्षेत्र विस्तार । कृषि यन्त्र औजार उपकरणमा अनुदान दिने र कृषि सहकारीसँगको सहकार्यमा सामुदायिक बिउबिजन प्रशोधन तथा वितरण कार्यलाई सहजीकरण गर्न सामुदायिक सेवाकेन्द्र स्थापना । कृषक समूह तथा सहकारीहरूलाई बिउ भण्डारण घर, उपकरण खरिद सहयोग, थ्रेसिङ फ्लोर निर्माण र बिउबिजन आत्मनिर्भर कोष स्थापनामा सहयोग । कृषक, कृषि उद्यमी, समूह र कृषि सहकारीलाई प्रतिफलमा आधारित प्रोत्साहन अनुदान । दुग्ध सहकारी तथा पशुपन्छीजन्य बजारीकरणमा संलग्न कृषक सहकारीहरूको संस्थागत क्षमता अभिवृद्धि । सार्वजनिक-निजी-सहकारी साझेदारीमा पशुपन्छी बजार प्रवर्द्धन र पूर्वाधार विकासका कार्यक्रम सञ्चालन । साना कृषकहरूलाई सहकारीमा आवद्ध गर्दै पशुपन्छी व्यवसायमार्फत आयआर्जनमा अभिवृद्धि । उत्पादक सहकारी संस्थामार्फत कृषकहरूलाई मिल्क एनालाइजर, अल्मुनियम र स्टिल क्यान तथा मिल्किङ मेसिनको खरिदमा अनुदान ।

**आर्थिक वर्ष २०७६/७७ देखि २०८०/८१ को पन्ध्रौ योजनाको आधार पत्र (मस्यौदा)** ले सहकारी क्षेत्रको विकासका लागि नीतिहरू तय गरेको छ । योजनाको अवधारणा पत्रका आधारमा सहकारी क्षेत्रलाई थप सुदृढ गर्ने लक्ष्य लिइएको छ ।

सहकारीको माध्यमबाट गरिबी तथा विपन्न वर्गका सदस्यको संलग्नतामा सञ्चालन हुने व्यावसायिक अयोजनालाई वित्तीय एवं प्राविधिक सहयोग उपलब्ध गराउने, सहकारी क्षेत्रको प्रवर्द्धनका लागि नीतिगत र संस्थागत प्रबन्ध मजबुत बनाउने, सहकारी संस्थाको सघनतालाई उत्पादनशील क्षेत्रमा केन्द्रित गर्न प्रोत्साहन गर्ने, सहकारी संघ संस्थाको क्षमता अभिवृद्धिका लागि सहकारी शिक्षा, नेतृत्व विकास एवं व्यवस्थापन तालिमलाई व्यापक तुल्याउने, सहकारी क्षेत्रको प्रभावकारी नियमनका लागि एकीकृत अनुगमन प्रणालीको विकास गर्ने र बहुउद्देश्यीय तथा अन्य सहकारी संघसंस्था, कृषक समूह, व्यावसायिक फर्मको संलग्नतामा पशुपालन लगायतका अन्य माध्यमबाट बायोग्याँस प्लाण्टको स्थापना, सञ्चालन तथा उत्पादित वस्तुको प्रयोगका लागि अनुदानको व्यवस्था गर्ने रणनीतिहरू निर्धारण गरिएको छ । सहकारीमा महिला सहभागिता ५३ प्रतिशत, महिलाहरूको नेतृत्व ४३.५ प्रतिशत, शेयर पूँजी ८६ अर्ब, बचत रू. ३८४ अर्ब पुऱ्याउने लक्ष्य तोकिएको छ । सहकारी क्षेत्रले ८३ हजारलाई रोजगारी दिने लक्ष्य राखिएको छ । यद्दपि अवधारणा पत्र मस्यौदा मात्र भएकोले यसमा परिमार्जनको सम्भावना छ ।

**(३) अधिकार बाँडफाँड** : संविधानतः सहकारी तीनै तहको सरकारको कार्यक्षेत्रमा परेकोले यस अघि स्थापना गरिएको सहकारी विभाग अन्तर्गतको कार्यालयहरू खारेज गरी कार्यक्षेत्रका आधारमा ७५३ वटा स्थानीय तह र ७ वटा प्रदेश मन्त्रालयलाई अधिकार बाँडिएको छ ।

### (४) सहकारी ऐन, नियममा भएका व्यवस्था र त्यसका असरहरू

**(क) कोषको विभाजन** : ऐन नियममा भएको व्यवस्था बमोजिम करपछिको नाफामा २५ प्रतिशत जगेडा कोष छुट्टाएर बाँकी भएको रकमलाई शतप्रतिशत कायम गरी सोबाट संरक्षित पूँजी फिर्ता कोषका लागि २५ प्रतिशत र सहकारी प्रवर्द्धन कोषमा ०.५ प्रतिशत छुट्ट्याउने अनिवार्य गरेको छ । संरक्षित पूँजी फिर्ता र प्रवर्द्धन कोषमा रकम छुट्ट्याएर बाँकी रहेको रकमलाई फेरी शतप्रतिशत मानि विभिन्न ७ थरिका कोषहरूमा कम्तीमा ५ प्रतिशतका दरले रकम छुट्टयाएर मात्र लाभांश कोषका रकम राख्न सकिने हुन्छ । यो बाहेक स्थिरिकरण कोषमा समेत तोकिएको रकम जम्मा गर्ने दायित्व बचत तथा ऋण सहकारी संस्थाहरूले बहन गर्नु पर्ने हुन्छ । यसरी आयकरपछिको लाभांशबाट कम्तीमा ६५ प्रतिशत रकमको कोष व्यवस्थापनपछि बाँकी रहेको ३५ प्रतिशत रकम शेयर लाभांशको रूपमा वितरण गर्न सकिने अवस्था आएको छ । यसबाट शेयर पूँजीमा १८ प्रतिशत लाभांश दिन सक्ने अवस्था नआउन सक्दछ । शेयर पूँजीमा प्रतिफल ज्यादै कम भयो भने सदस्यता छाड्ने वा कम शेयर खरिद गर्ने पद्धतिको विकास हुनेछ । शेयर पूँजी घट्ने वित्तिकै पूँजीको आधारमा १:१५ का दरले बचत परिचालन गर्नुपर्ने कानूनी व्यवस्थाका कारण बचतको आकारमा पनि प्रतिकूल प्रभाव पर्ने हुन सक्दछ । पूँजीमा प्रतिफल नहुने अवस्थामा

सहकारी संस्थाहरू विशिष्टिकृत संघको निर्माण गरेर अन्य व्यवसायमा जान पनि कठिन हुन सक्दछ । पूँजी निर्माणका लागि जगेडा कोष र वितरण नगरिने संरक्षित पूँजी फिर्ता कोषको रकम उपयोगमा सहकारी संस्थाहरूले प्राथमिकता दिनु पर्ने अवस्था आउन सक्दछ । खाशगरी कोष विभाजनको यो व्यवस्था महासंघ, संघ, विशिष्टिकृत संघ र सहकारी बैकले पनि अवलम्बन गर्नै पर्ने हुन्छ । पूँजीमा प्रतिफल पहिलो प्राथमिकता हने भएकोले सहकारी उद्योग व्यवसायको विकासमा यो व्यवस्था प्रतिकूल हुनेछ । यो भनेको सहकारी क्षेत्रमा पूँजी लगानीको सम्भावनामाथि नै आघात पर्न सक्ने अवस्था हो । उदाहरणका लागि जलविधुत्त उत्पादनमा लगानीलाई लिन सकिन्छ । यो परियोजना कार्यान्वयनमा ल्याउन समय लाग्नुका साथै उत्पादित विधुत्त नेशनल ग्रिडमा उपयोग हुने हो । जलविधुत्त परियोजनाबाट हुने लाभांशबाट ६५ प्रतिशतको अनिवार्य कोषहरू राख्नु पर्दा डिभिडेण्डको अंश ज्यादै कम हुने भएकोले जलविधुत्त परियोजनामा सहकारी मोडलको प्रयोग किन गर्ने ? आवाश जस्तो सहकारीमा लाभांशको सम्भावना हुँदैन । यो सदस्यहरूले उपभोग गर्ने हो । यस्तो सहकारीको लागि कोष विभाजनको व्यवस्था कसरी उपयोगमा ल्याउन सकिन्छ ?

**(ख) स्थिरिकरण कोष सम्बन्धी व्यवस्था** : स्थिरिकरण कोषमा बचत तथा ऋण सहकारी संस्थाहरूको आवद्धता रहन सक्ने व्यवस्था रहेको छ । कम्तीमा रू. १० करोड पूँजी जुटाई यो कोषको स्थापना हुन सक्नेछ । नेफ्स्कूनको अध्यक्षको अध्यक्षतामा गठन गरिने यो समितिमा सरकारी प्रतिनिधिहरू समेत रहने व्यवस्था छ । कोषमा आवद्धताको अनिवार्य व्यवस्था गरिएको छैन । कोषमा योगदान गर्ने समस्याग्रस्त (महासंघ वा विषयगत संघले व्यवस्थापन जिम्मा लिएको अवस्थामा) संस्थाको सबै दायित्व भुक्तान र यस्तो संस्थाको व्यवस्थापनमा लाग्ने खर्च समेत यही कोषबाट बहन गर्नु पर्ने कानूनी व्यवस्था रहेको छ । केन्द्रीय तरलता कोषको अवधारणालाई नेपालमा व्यापक अर्थमा प्रयोग गर्न खोजिएको छ । यो नयाँ अभ्यास पनि हो । नेफ्स्कूनका सदस्य सहकारी संस्थाहरू मिलेर यस्तो कोषको व्यवस्था गर्न सक्दा बचतकर्ताहरू भने ढुक्क हुन सक्नेछन् । तर यो व्यवस्था सबै सहकारीको लागि नभै समस्यामा परेका तर व्यवस्थापनमा सधार गरी गरी सञ्चालन योग्य बनाउन सकिने खालका सहकारी जसको व्यवस्थापन महासंघ वा विषयगत संघले जिम्मा लिएको बेलामा मात्र कार्यान्वयनमा ल्याउन सकिने भएकोले व्यापक सुरक्षा यसबाट सम्भव देखिदैन ।

**(ग) बचत तथा कर्जा सुरक्षण कोष** : सहकारी ऐन नियमले बचत तथा कर्जा सुरक्षण कोषको व्यवस्था गरेको छ । ऐन नियममा प्रत्येक तहको सरकारले यस्तो कोष बनाउन सक्ने व्यवस्था गरेकोले यो कोषको व्यवस्थापन जटिल छ । नियम बमोजिम बचत तथा ऋणको कारोबार गर्ने सबै खाले सहकारी संस्थाहरू यसमा आवद्ध हुन सक्नेछन् । यसका लागि विशिष्टिकृत संघको गठन गर्नु पर्ने व्यवस्था नियमावलीले गरेको छ । कोष स्थापनाका लागि रू. ६० करोडको चुक्ता पूँजी आवश्यक हुनेछ भने पूँजीको कम्तीमा ६० प्रतिशत सहकारी संस्थाहरूको लगानी अनिवार्य गरिएको छ । यस कोषबाट रू. ३ लाखसम्मको बचतको सुरक्षण हुनेछ भने कर्जा तर्फ कर्जाको प्रकृतिका आधारमा रू. ३० हजार देखि रू.१० लाखसम्मको सुरक्षण हुने भनिएको छ । यद्यपि, तोकिएको सीमा भित्र रहने गरी कूल कर्जाको ८० प्रतिशत मात्र यस कोषबाट क्षतिपूर्ति भराउन सकिने छ । कोषको व्यवस्थापनका लागि कोष सञ्चालक समितिको गठनको व्यवस्था गरिएको छ । यस्तो सहकारी स्थापनामा बचत तथा ऋणको कारोबार गर्ने सहकारी संस्थाहरूलाई अनिवार्य भने गरिएको छैन । नेपालमा पहिलो पटक बचत सुरक्षणको व्यवस्था गरिएको भए तापनि यो नयाँ प्रयोग भएको र सीमित रकमको मात्र सुरक्षण हुने व्यवस्थाले गर्दा बचतकर्ताहरूमा सहकारी प्रति ढुक्क हुने वातावरण मिल्ने देखिदैन ।

**(घ) बचत संकलन गर्ने सहकारी संस्थाहरूको निरीक्षण तथा अनुगमन** : सहकारी ऐन, २०७४ मा भएको प्रावधान अनुसार कार्यक्षेत्रका आधारमा संघ प्रदेश र स्थानीय तहले सहकारी संस्थाहरूको निरीक्षण तथा अनुगमन गर्ने जिम्मेवार निकायहरू हुन् । हालै जारी गरिएको सहकारी नियमावलीको नियम ७२ ले रू. ५ करोड भन्दा बढी बचत दायित्व भएको स्थानीय तहमा कार्यक्षेत्र सीमित सहकारी संस्थाको निरिक्षण तथा अनुगमन गर्ने दायित्व स्थानीय तह र प्रदेश सरकारको संयुक्त हुने व्यवस्था गरेको छ । त्यस्तै रू. २५ करोड भन्दा बढीको बचत दायित्व हुने स्थानीय तह वा प्रदेशभित्र कार्यक्षेत्र भएका सहकारी संस्थाको निरिक्षण तथा अनुगमन गर्न स्थानीय तह वा प्रदेश र विभागले संयुक्त रूपमा टोली खटाउने व्यवस्था गरिएको छ । रू. ५० करोड भन्दा बढीको बचत दायित्व भएका सहकारी संस्थाको अनुगमनमा नेपाल राष्ट्र बैंकको सहभागिता रहने छ वा यस्ता सहकारी संस्थाको विभागले आफै सघन अनुगमन गर्ने छ । यस व्यवस्थाले निरीक्षण तथा अनुगमनको क्षेत्रमा संघ, प्रदेश र स्थानीय तह बिच अधिकार क्षेत्रमा किचलो सिर्जना गरेको छ । यस बाहेक निरीक्षण तथा अनुगमनको कार्यमा आपसी समन्वय र सहकार्य तथा सम्बन्धित विषयगत संघलाई ऐन प्रदत भूमिकालाई गौण बनाई दिएको छ ।

**(ङ) साधारण सभाको व्यवस्थापन** : दफा ४० को उपदफा (४) ले साधारण सभा बस्न गणपुरक संख्या ५१ प्रतिशत तोकेको छ । यो व्यवस्था कार्यान्वयनमा ल्याउन जटिलता छ । धेरै सदस्यता भएको र कार्यक्षेत्र ठूलो भएको सहकारीको लागि असम्भव पनि हुन सक्दछ । सात दिन भित्र अर्को सूचना प्रकाशन गरी साधारण सभा बोलाउनु पर्ने र त्यस्तो सभामा भने एक तिहाईको उपस्थिति भए गणपुरक संख्या पुगेको मानिने पुरक व्यवस्थाले थोरै राहत दिएको देखिन्छ । त्यसैगरी २ हजार भन्दा बढी सदस्य हुने संस्थाले महानगर र उप महानगरको हकमा प्रत्येक वडामा र नगरपालिका र गाउपालिकाको हकमा प्रत्येक स्थानीय तहमा छुट्टाछुट्टै साधारण सभा राख्नु पर्ने व्यवस्था उपदफा (५) ले गरेको छ । साधारण सभालाई प्रतिनिधित्वमूलक गराउन सकिने ठाँउ देखिदैन । सहकारीको विनियम र कार्यविधि सन्सोधन गर्न कूल सदस्यको ५० प्रतिशत सदस्यहरूले पारित गर्नु पर्ने व्यवस्था धेरै सदस्य रहेका सहकारीहरूको लागि कार्यान्वयनमा ल्याउनै नसकिने हुन सक्दछ । पूँजी वृद्धि गर्नु पर्‍यो भने पनि विनियम सन्शोधन गर्नुपर्ने वाध्यात्मक व्यवस्था गरिएको छ ।

**(च) जगेडा कोष सम्बन्धी व्यवस्था र यसको उपयोग** : नियम ४ उपनियम (२) ले विशिष्टिकृत संघमा जगेडा कोषको रकम लगानीको रूपमा प्रयोग गर्न खुला गरेको छ । यो कोष संस्थागत पूँजी हो । पर्ल्स अनुगमन प्रणालीको आधारमा यो कोषको उपयोग लगानीमा जान सक्दैन । सम्पत्तिको बढीमा २ प्रतिशतसम्म वित्तीय संस्थाहरूमा शेयर लगानी गर्न सकिन्छ भने आय आर्जन नहुने सम्पत्तिमा बढीमा ५ प्रतिशत खर्च गर्न सकिन्छ । गैह्र वित्तीय क्षेत्रमा लगानी पर्ल्स अनुगमन प्रणालीले निषेध गरेको छ । कूल सम्पत्तिको कम्तीमा १० प्रतिशत संस्थागत पूँजी पुर्‍याउनु संस्थाको लागि चुनौतीपूर्ण कार्य हो । २०/२५ वर्ष पुराना राम्रा संस्थाहरू समेत यो सीमा पुर्‍याउन नसकिरहेको अवस्था प्रति हामी सचेत हुनु पर्दछ ।

**(छ) बचत तथा ऋण सहकारी दर्ताको आधारभूत मापदण्ड र एकीकरण** : महानगर वा उपमहानगरपालिकाको हकमा एक वडामा प्रति संस्था ५ हजार, नगरपालिकामा २ हजार र गाउँपालिकामा ५ सय जनसंख्या बिच एक संस्था मात्र दर्ता हुन सक्ने व्यवस्था नियमावलीले गरेको छ । यस अगि दर्ता भएका संस्थाहरू ३ वर्षभित्र एकीकरण गर्नु पर्ने बाध्यात्मक व्यवस्था नियमावलीको हो । यसो गर्न अनिवार्य मर्जरको नीति आवश्यक छ । संस्थाहरू कसरी मर्जरमा लान सकिन्छ भन्ने विषयमा नियमावलीमा कुनै व्यवस्था भने छैन । कतिपय प्रदेश र स्थानीय तहले कार्यान्वयनमा ल्याइसकेका ऐनमा भएका व्यवस्थाहरू पनि संघीय नियमावलीसँग बाझिने धेरै सम्भावना पनि छ । प्रदेश वा स्थानीय तहको संबैधानिक स्वायत्ततामाथि पनि प्रश्न उठाउन सक्ने गुञ्जायस देखिन्छ । यो व्यवस्थाको कार्यान्वयन अत्तिनै जटिल तथा कतिपय अवस्थामा व्यवहारमा आउनै नसक्ने अवस्था पनि सिर्जना हुन सक्दछ । त्यसैगरी बचत तथा ऋण सहकारीको मुख्य कारोबार गरी रहेका साना किसान सहकारी संस्था तथा बहुउद्देश्यीय सहकारी संस्थाको नाम परिवर्तन वा कारोबारमा समायोजन अर्को चुनौती ऐन नियमले सिर्जन गरिदिएको छ । साना किसान सहकारी संस्थाहरूको स्वामित्व रहेका कम्पनी कानून बमोजिम दर्ता रहेको साना किसान सहकारी लघुवित्त संस्था (सान किसान विकास बैंक) सँगको कारोबारलाई बैधानित्रा दिन नचाहेको पनि प्रचलित ऐन नियमबाट प्रष्ट भएको छ । यस्तो अवस्थामा एकीकरणको अभियान थप चुनौतीपूर्ण रहेको छ ।

**(ज) लिक्विडेशन पछिको सम्पत्ति व्यवस्थापन** : ऐन नियम बमोजिम विघटन भई लिक्विडेशनमा गएको सहकारी संस्थाको दायित्व भुक्तानपछि बाँकी रहेको सम्पत्ति रजिष्ट्रारको निर्देशन बमोजिम कुनै सहकारी संस्था वा सम्बन्धित विषयगत संघमा हस्तान्तरण हुने वा नेपाल सरकारले मन्त्रालयको सिफारिश बमोजिम अन्य कुनै सामाजिक वा सामुदायिक काममा उपयोग गराउने अनिवार्य व्यवस्था गरेको छ । यो व्यवस्थाले सहकारीमा गरिने लगानीलाई निरूत्साहित गर्दछ । सहकारी सामुदायिक व्यवसाय हो । लगानीको दृष्टिकोणले यो पनि निजी क्षेत्र नै हो । सहकारी पद्धतिको उपयोग गरी व्यक्ति व्यक्ति मिली साना उद्योग व्यवसायहरू सञ्चालन गर्न सकिन्छ । यस्तो उद्योग व्यवसायहरूमा लगानीको जोखिम पनि तिनै सदस्यहरूको नै हो । सहकारी संगठनहरू विविध आधारमा विघटन हुने वा स्वरूप परिवर्तनमा जान सक्ने बाटो खुला राखिनु पर्दछ । सहकारी व्यवसायले निजी क्षेत्रसँग प्रतिस्पर्धामा गर्नु पर्ने हुन्छ । सहकारीको सम्पत्ति सरकारको निर्णय बमोजिम उपयोग हुने व्यवस्थाबाट सहकारी क्षेत्रको दायरालाई सीमित बनाई दिएको छ ।

**(झ) सहकारीका संघहरूको संरचना** : सहकारी ऐन नियम बमोजिम जिल्ला, प्रदेश, केन्द्र र राष्ट्रिय तहमा सहकारी संघहरूको निर्माणलाई प्रश्रय दिएको छ । जिल्ला र प्रदेशमा सहकारी संघका अलावा विषयगत संघको स्थापना पनि रहने छ भने केन्द्रमा पनि विषयगत संघ रहन सक्नेछ । एउटा सहकारी संस्थाले शेयर सदस्यको रूपमा जिल्लामा २, प्रदेशमा २ र केन्द्रमा विषयगत संघ र सहकारी बैंक गरी २ सहकारीमा सदस्यता लिन सक्ने प्रावधान रहेको छ । यो बाहेक विशिष्टिकृत संघमा गरिने लगानीलाई पनि गणना गर्ने हो भने यो संख्या अझ बढ्ने निश्चित नै छ । विषयगत संघहरू व्यावसायिक

नभई रहेको अवस्थामा धेरै तहका संघहरूमा सदस्यता भनेको राजनीति अभिष्ट पुरा गर्न संघहरूको स्थापना गर्नु मात्र हो । अहिले पनि कतिपय विषयगत संघहरूसँग कुनै विजनेश छैन । सहकारी विभागको अनुदानको भरमा अफिससम्म धान्न सकेको अवस्था देखिएको छ । अन्य देशहरूमा प्राइमरी सहकारीको सदस्यता एक व्यावसायिक संघमा मात्र हुने प्रचलन रहेको छ । मुख्य विषय सहकारीको विषयगत संघको काम प्राइमरी संस्थाहरूलाई एकीकृत रूपमा समेटी व्यावसायिक उन्नति गर्नु नै हो । सहकारी संस्थाहरूको संख्या घटाउने र भएका सहकारी संघहरूलाई विघटन गरी दुई तहको संरचना बनाउने काम ज्यादै कठिन भएको सहकारीको इतिहासबाट पुष्टी हुन्छ ।

**(ञ) सहकारी मार्फत उद्यमशीलता विकासको सम्भावना** : कम्तीमा २५ वटा बहुउद्देश्यीय वा विषयगत सहकारी संस्थाहरू मिलेर जलविधुत्त आयोजना, रासायनिक मल कारखाना, आवासीय परियोजना, यातायात, भारी कृषि उपकरण, फलफूल प्रशोधन, जडिवुटी प्रशोधन, चिनी उद्योग, शीत भण्डार, अस्पताल, शिक्षालय, प्राविधिक शिक्षालय, प्रयोगशाला, जस्ता ठूला लगानी चाहिने उत्पादन कार्य गर्न वा सदस्यका साझा आवश्यकताका वस्तु वा सेवाको परिपूर्ति गर्न विशिष्टिकृत संघको गठन गर्न सकिने नयाँ अभ्यासको लागि ऐनले मार्गप्रशस्त गरेको छ । त्यस्तै दुई वा दुई भन्दा बढी सहकारी संस्थाहरू मिलेर आफ्नो उत्पादन वा सेवाको बजारीकरणका लागि संयुक्त वा साझेदारी व्यवसाय, कारोबार, परियोजना वा उद्योग सञ्चालन गर्न सक्नेछन् । विशिष्टिकृत संघ दर्ता गर्न आवेदक संस्थाहरूको संयुक्त शेयर पूँजी रू. १५ करोड, संयुक्त संस्थागत पूँजी रू. ३ करोड र घाटामा नगएको अवस्थाको हुनु पर्नेछ । त्यसैगरी प्रत्येक संस्थाले कम्तीमा रू. १ करोड लगानी गर्नुपर्ने र यस्तो लगानी गर्दा संस्थाको प्राथमिक पूँजी र बचतको अनुपात भने १:१५ कायम राखी बढी भएको रकम मात्र लगानीमा उपयोग गर्न पर्ने गरी शर्तहरू राखिएको छ । संयुक्त वा साझेदारीमा गर्ने व्यवसायको हकमा संस्थाहरू बिच कम्तीमा ५ वर्षको करारनामा, सम्भाव्यता, साधारण सभाको निर्णय, आवश्यक इजाजत समेत संलग्न राखी रजिष्ट्रार समक्ष स्वीकृतिका लागि पेश गर्ने र स्वीकृत भए बमोजिम गर्न सकिने प्रावधानहरू नियमावलीमा व्यवस्था गरिएको छ । यसरी सहकारी संस्थाहरू एक आपसमा मिली आफ्नो उत्पादन वा सेवाको संयुक्त बजारीकरण गर्न सक्ने व्यवस्था प्रचलित सहकारी ऐन नियमले गरेको छ ।

**तत्कालिन समस्याहरू** :

पहिलो समस्या नीतिगत र कानूनी व्यवस्था को हो । सहकारीको अधिकार क्षेत्र स्थानीय तह र प्रदेशमा पुगेको छ । ७५३ वटा स्थानीय तह र ७ वटा प्रदेशहरूले स्वायत्त रूपमा आफ्नो क्षेत्रभित्र सहकारीको विकास र प्रवर्द्धनमा आवश्यक नीतिगत व्यवस्थाहरू गर्ने अधिकार राख्दछन् । सहकारीको प्रचलित सिद्धान्त र मूल्य एवं राम्रा अभ्यासहरूका आधारमा सहकारी सम्बन्धी नीतिगत व्यवस्था र कानूनी ढाँचा अहिलेको आवश्यकता हो । ७६१ वटा नीति र कानूनहरूबिच आवश्यक तालमेल आजको चुनौती हो । प्रचलित संघीय सहकारी ऐन तथा नियमावलीले सहकारी अर्थव्यवस्थाको विकासका लागि पर्याप्त अवसर दिन सकेको छैन । २०६९ सालमा नेपाल सरकारले स्वीकृत गरेको राष्ट्रिय सहकारी नीति पुनरावलोकन हुन सकेको छैन । सहकारी भनेको बचत तथा ऋण हो भन्ने भान परिरहेको छ । अन्य विषयगत कानूनहरूले सहकारीलाई चिन्दैनन् ।

दोश्रो समस्या भनेको सुपरीवेक्षण र नियमन हो । अहिले सहकारीका फाइलहरू स्थानीय तह र प्रदेशमा हस्तान्तरण गरिएको छ । स्थानीय तह र प्रदेश मन्त्रालयमा जनशक्तिको अभाव एउटा समस्या रहेको छ भने अर्कोतर्फ सुपरीवेक्षण र नियमनको काम ती सरकारहरूको प्राथमिकतामा पर्न सकेको छैन । व्यवस्थापकीय पक्षहरू कमजोर रहेको कारणबाट अहिले भएका सहकारीहरूको अनुगमन र नियमन अवश्य नै प्रभावित बनेको छ ।

तेश्रो समस्या भनेको विधमान सहकारी ऐन, २०७४ ले समाधान गर्न नसकेको विभेदकारी व्यवस्था हो । यो ऐनले सहकारी मार्फत हुने बचत तथा ऋणको कारोबारलाई मान्यता दिएको छ । तर, सहकारीको अन्य क्षेत्रहरूका बारेमा अन्य निकायहरूको नीतिमा निर्भर बनाई दिएको छ । सहकारी ऐन, २०७४ कै आधारमा सहकारी मार्फत विद्यालय, संयुक्त आवाश, औधोगिक प्रतिष्ठान, घरेलु उद्योग, पर्यटन व्यवसाय, उर्जा, बीमा, स्वास्थ्य जस्ता क्षेत्रहरूमा लगानी गर्न सहकारी मोडललाई कुनै अन्य निकायले प्रोत्साहन गर्ने नीतिगत व्यवस्था नै हुन सकेको छैन । सहकारी दर्ता गरेर पनि ति निकायहरूको सहमति नलिई कुनै अन्य व्यवसाय गर्न सम्भवन नै छैन । उद्योग विभागले कलकारखाना दर्ता नगरिदिने वा घरेलुले स-साना घरेलु उद्योगधन्दा सहकारी मोडलमा सञ्चालन गर्न नदिने हो भने सहकारीको विकास कसरी सम्भव छ ? कम्पनी ऐन सरह सहकारी ऐनलाई महत्व दिइएको छैन । यो विभेद हटाउन आवश्यक छ ।

चौथो समस्या भनेको वित्तीय सहकारीमा बचत रकमको असुरक्षा हो । विश्वभरी आम बचतकर्ताको बचत रकमको सुरक्षाको व्यवस्था गरिएको हुन्छ । अमेरिकामा क्रेडिट युनीयन वा सहकारी बैंकमा राखिएको बचतमध्ये २ लाख ५० हजार अमेरिकी

डलरको सुरक्षा प्रबन्ध गरिएको छ । यूरोपेली मुलुकहरूमा यो एक लाख युरोको छ । क्यानडामा सबै बचतको सुरक्षण गरिएको छ । भारतमा पनि १९६७ देखि बचत सुरक्षणको प्रयोग भएको छ । हामीले यो व्यवस्था नगर्दा सहकारीमा राखिएको बचत रकमहरू उच्च जोखिममा रहेको छ ।

पाँचौ समस्या साझेदारी सँग सम्बन्धित छ । सहकारीलाई सरकारको सहयोग आवश्यक पर्दछ । कतिपय अवस्थामा लगानीमा साझेदारी आवश्यक हुन्छ भने कहिले सहूलियत कर्जा वा अनुदान । सहकारीको महत्वपूर्ण सिद्धान्तहरू स्वायत्तता र स्वतन्त्रता र सहकारीमा सदस्यहरूको प्रजातान्त्रिक नीयन्त्रण पक्षको रक्षा गर्दै सरकारको लगानी र सहयोग परिचालन गर्न आवश्यक छ । यसका लागि सहकारी विकास बोर्डको भूमिकामाथि पूनरावलोकन आवश्यक छ ।

छैठौ समस्या सहकारी शिक्षा र सहकारीको व्यवस्थापन तालिम हो । विद्यालय तथा विश्वविद्यालयका विभिन्न तहहरूमा सहकारी शिक्षाको व्यवस्था र सहकारी व्यवस्थापन तालिमलाई व्यापकता दिन अत्तिनै आवश्यक छ । सहकारी शिक्षाको अभाव र तालिमको अपर्याप्तताले गर्दा सहकारी क्षेत्रको समग्र व्यवस्थापनमा प्रतिकूलता थपिएको छ ।

## सहकारी अभियानको कार्यभार

### ऐन नियममा तत्काल सुधारको आवश्यकता

संघीय सहकारी ऐन नियम नै प्रदेश र स्थानीय तहको सहकारी ऐन नियम बनाउने आधार हो । यो संबैधानिक बाध्यता पनि हो । संघीय कानूनसँग बाझिएर बनेका स्थानीय वा प्रदेशका कानूनी व्यवस्थाहरू बाझिएको हदसम्म स्वतः अमान्य हुन्छ । अहिलेको कानूनी व्यवस्थाहरू सहकारी क्षेत्रको विकासको लागि सहायक हैन वाधकको रूपमा देखिएको छ । यो ऐन नियम सहकारीको बचत तथा ऋणको कारोबारलाई नियमन गर्नमा बढी केन्द्रित रहेको छ ।

### राष्ट्रिय सहकारी विकास बोर्डको पुनर्संरचना :

सहकारीको प्रवर्द्धन र सहजिकरणका लागि राष्ट्रिय सहकारी विकास बोर्डको स्थापना गरिएको हो । यो बोर्ड छुट्टै कानूनबाट सञ्चालन हुँदै आएको छ । कानूनतः सहकारी विकास बोर्डको भूमिका नीति निर्माण, अध्ययन अनुसन्धान, प्रवर्द्धन र सहकारी उद्योग व्यवसायहरूलाई सरल र सहज पूँजीगत सहयोग उपलब्ध गराउनु हो । यसका लागि संगठन संरचना र जनशक्तिको व्यवस्था पनि भएको छ । अर्कोतिर सहकारी विभागले पनि प्रवर्द्धन र अनुदान वितरणको काम गरिरहेको छ । सहकारी ऐनले सहकारी प्रवर्द्धन र अनुदान वितरणको काममा राष्ट्रिय सहकारी विकास बोर्डलाई जिम्मेवार बनाउने र कार्यक्षेत्रको सिमांकन गर्न पनि त्यत्तिकै आवश्यक छ ।

## निष्कर्ष

सहकारी अभ्यासलाई ठाँउ ठाँउमा अवरोध हुने र कर्मचारीतन्त्रको नीयन्त्रण रहने प्रावधानहरूका कारण सहकारी अभियानको स्वायत्त र स्वतन्त्र चरित्रमाथि प्रतिकूल प्रभाव पर्ने अवस्थाप्रति सहकारी अभियानको सतर्कता आवश्यक छ । वित्तीय सहकारी स्थापनामा सहजता र कमजोर नियमनका कारणले सहकारीमा समस्या आएको हो, अन्य कारणले सहकारीमा समस्या आएको हैन भन्ने कुरामा विदितै छ । बचत र ऋणको कारोबारको सहकारी संस्था दर्ता र इजाजत दिने कार्यलाई नै व्यवस्थित गर्न भने आवश्यक हुन्छ । बाह्य सुपरीवेक्षण (केन्द्रीय संघ मार्फत), बचत सुरक्षण कोष, स्थिरिकरण कोष, गुणस्तरीय लेखा परीक्षण, सहकारी संघसंस्थाका लेखा समितिको भूमिका र जवाफदेहिता एवं ठगी गर्नेलाई कडा कारवाही जस्ता आधारभूत व्यवस्थाहरू कार्यान्वयन भयो भने सबैखोल समस्याहरूको समाधान हुने विश्वास लिन सकिन्छ । सहकारी ऐनले अपराध भई सकेपछिको दण्डात्मक व्यवस्थाहरू पर्याप्त मात्रामा गरेको छ । तर, सहकारीको गभर्नेन्सलाई प्रभावकारी बनाउन ऐनमा पर्याप्त व्यवस्था गर्न ऐन नियम चुकेको छ । स्थिरिकरण कोषको उपयोग अनुगमनको लागि अनिवार्य थियो बचत सुरक्षणको व्यवस्थामा ऐनमा प्रभावकारी व्यवस्थाहरू आवश्यक थियो । बचत तथा ऋण सहकारी संस्थाहरूलाई प्रदेश विषयगत संघ र नेफ्स्कूनको सदस्यता लिन अनिवार्य गर्नु पर्दथ्यो । संघहरूले गरिने अनुगमनलाई पहिलो आधार बनाई नियमन गर्ने व्यवस्था राखिएको भए राम्रो हुने थियो । अति सफल मोडलका रूपमा सञ्चालनमा आईरहेका साना किसान सहकारी संस्थाहरू र यी संस्थाहरूको शेयर स्वामित्व रहेको साना किसान विकास बैंकलाई मध्ये नजर गरेर ऐनमा सन्शोधन आवश्यक छ । नयाँ कानूनबाट सहकारीमा साझेदारीका सम्भावनाहरू पनि समाप्त पारिएको छ । सजायका व्यवस्थाहरूलाई मापदण्डमा आधारित

बनाइएन भने रजिष्ट्रारको अधिकार प्रयोग गर्ने जोकोही सहकारी संघ संस्थाहरूको लागि निरंकुश शासक बन्न पुग्ने छन् र यसले कर्मचारी र सहकारी सञ्चालक/व्यवस्थापकहरूलाई भ्रष्ट बनाउन सघाउन सक्दछ ।

सहकारी सम्बन्धी नीति तथा कानून र नियमन सम्बन्धी व्यवस्था गर्दा सहकारीको सिद्धान्तहरूलाई आधार बनाइनु पर्दछ । कानून बनाउने सबै भन्दा पहिलो आधार नै यही हो । अन्तर्राष्ट्रिय सहकारी महासंघ (International Cooperative Alliance) ले विश्व सहकारी अभियानलाई अभिभावकत्व दिदै आएको छ । यो महासंघले जारी गरेको सहकारीका सिद्धान्तहरूको हालै प्रकाशित व्यवहार उपयोगी व्याख्या (Guidance Note) को अध्ययन पनि ऐन निर्माणको लागि मार्गदर्शक बन्नु पर्दछ । महासंघले जारी गरेको Blueprint for a Cooperative Decade, Vision 2020 ले पनि सहकारीको भावि योजनाको खाका प्रस्ताव गरेको छ जसले कानून निर्माणलाई दिशा निर्देश गरेको छ । खाशगरी सहभागिता, पहिचान, दीगो विकास, कानूनी स्वरूप र पूँजी गरी ५ वटा क्षेत्रमा सहकारी अभियानले ठूलो फड्को मार्न खोजेको छ । यी ५ कार्य योजनाका क्षेत्रहरूलाई सरकारले नीति तथा कार्यक्रम तर्जुमा गर्दा प्रयाप्त ध्यान दिन आवश्यक छ । त्यसैगरी दीगो विकासका लक्ष्यहरू हासिल गर्ने अभियानमा विश्व सहकारी परिवार जोडिएको छ । आ–आफ्नो क्षेत्रबाट दीगो विकासका लक्ष्यहरू प्राप्तिमा योजनावद्ध ढंगले योगदान पुर्‍याउन सहकारी संघसंस्थाहरू संस्थागत रूपमै क्रियाशील रहनु पर्दछ ।

## सन्दर्भसूची


- ढकाल, सुदर्शन प्रसाद, आर्थिक तथा सामाजिक विकासका लागि सहकारी अर्थव्यवस्था, हेरिटेज पब्लिसर्स एण्ड डिस्ट्रिब्यूटर्स प्रा. लि, २०७० बैशाख
- ढकाल, सुदर्शन प्रसाद, सहकारीको सिद्धान्त र व्यवहार, प्रकाशकः लेखक स्वंय, २०७२
- नेपालको संविधान, २०७२
- राष्ट्रिय सहकारी नीति, २०६९
- सहकारी विभागको वेबसाइट
- सहकारी ऐन, २०७२ र नियमावली, २०७५
- चौधौ योजना, राष्ट्रिय योजना आयोग
- पन्द्रौ योजनाको अवधारणा पत्र (मस्यौदा), राष्ट्रिय योजना आयोग
- Blueprint of Co-operative Decade, Vision 2020 ICA
- Guidance Notes to the Co-operative Principles, International Co-operative Alliance, 2015

# दोलखा सहकारीमा उद्यमशीलता: वर्तमान अवस्था र भविष्यको बाटो

**- सुमन उप्रेती**
उद्यम विकास अधिकृत
ग्रामिण उद्यम विकास केन्द्र, दोलखा

**पृष्ठभुमी:**

विश्वको सहकारी आन्दोलनको इतिहासलाई हेर्दा सन् १८४४ मा बेलायतको म्यानचेस्टर सहर नजिक कपडा कारखानामा काम गर्ने मजदुरहरूले प्रथमतः सहकारी संस्थाको सुरूवात गरेको पाइन्छ । नेपाली समुदायमा परापूर्व कालदेखि नै अर्मपर्म, पारस्पारिक सहयोग तथा अनौपचारिक रूपमा बचत तथा कर्जा परिचालन गर्ने गरेको दखिन्छ । सन् १९५३ मा तत्कालिन सरकारले कृषि मन्त्रालय अन्तर्गत सहकारी विभाग स्थापना गरेर यसको सुरूवात गरेको पाइन्छ । त्यसपछि सरकारले यसको उपयोग बाढीग्रस्त क्षेत्रहरूमा सहयोग पुऱ्याउन वि.सं २०१३ चैत्र २० गते चितवनमा सहकारी स्थापना गऱ्यो जसलाई बखान सिंहको ऋण सहकारी संस्था भनेर चिनीयन्छ । नेपाल सरकारले सामाजिक तथा आर्थिक विकासका लागि सहकारी एक उत्तम विकल्प हुने मान्यताका साथ वि.सं. २०४८ मा सहकारी ऐन जारी गऱ्यो । नेपालको संविधान २०७२ ले सहकारी क्षेत्रको परिचालनमार्फत दीगो तथा समतामूलक अर्थतन्त्रको विकास गर्ने लक्ष्यका लागि सहकारी क्षेत्रलाई विशेष भूमिका प्रदान गरेको छ । नेपाल सरकारले सहकारीलाई आर्थिक नीतिका तीन खम्बामध्ये एक मानेको अवस्थामा दोलखा जिल्लाको ग्रामिण भेगको वित्तीय पहुँचमा सहकारी संस्थाको योगदान अतुलनीय छ । तथापी वर्तमान अवस्था जिल्लाको मुख्य आवश्यकता वित्तीय पहुँच मात्र नभई भनेको रोजगारी सिर्जना, उत्पादन तथा उत्पादकत्वमा अभिवृद्धि, उपलब्ध प्राकृतिक स्रोतको उच्चतम सदुपयोग रही आएको छ । जिल्लामा सञ्चालित सहकारी संस्थामा भएको क्षमता तथा सुधार गर्नुपर्ने क्षेत्र, जिल्लाको आर्थिक रूपान्तरणका लागि सहकारी संस्थाको भावी कार्यनीतिहरूको विषय यस कार्यपत्रमा उल्लेख गरिएको छ ।

**दोलखामा सहकारी आन्दोलन तथा वर्तमान अवस्था:**

काठमाडौंदेखि १३२ किलोमिटरको दुरीमा रहेको दोलखा प्रदेस ३ अन्तर्गतको एक हिमाली जिल्ला हो । यहाँ धार्मिक, सांस्कृतिक, जैविक तथा वातावरणीय दृष्टिकोणले विविधतापूर्ण रहेको छ । समुद्री सतहबाट न्यूनतम उचाइ ७३२ मिटरदेखि अधिक्रम ७१३४ मिटर उचाइको नेपालको समय मापन केन्द्रविन्दु गौरीशंकर हिमाल यहीँ पर्दछ । जिल्लामा सहकारी आन्दोलनको इतिहासलाई नीयाल्दा वि.सं. २०३४ मा कालिञ्चोक साझा सहकारी संस्थाको रूपमा चरिकोटमा स्थापना भएको पाइन्छ ।

जिल्लामा हाल विभिन्न प्रकृतिका ५१८ वटा सहकारी संस्थाहरू दर्ता भएका छन् । जिल्ला सहकारी क्षेत्रको उर्वर भूमिको रूपमा देस तथा विदेसमा समेत सुपरिचित बनिसकेको छ । एशियाली ऋण महासंघले विभिन्न सूचकका आधारमा नेपालका २१ वटा सहकारी संस्थालाई Silver र Bronze प्रदान गरेको छ । जसमध्ये दोलखामा मात्र ३ (२ वटा Silver र १ वटा Bronze) वटा ACCESS ब्रान्ड प्राप्त सहकारी रहेका छन् ।

सहकारी संस्थाको दर्तालाई स्थानीय तह अनुसार हेर्दा भीमेश्वर नगरपालिकामा सबैभन्दा बढी २१% (१०८ वटा) छन् भने सबैभन्दा कम बिगु गाउँपालिकामा ७% (३८ वटा) रहेका छन् । सहकारी संस्थाको उद्देश्य अनुरूप हेर्दा बचत तथा ऋण र कृषि सहकारी संस्था कुल सहकारी संस्थाको ७६% (३९७ वटा) रहको छन् भने उपभोक्ता सहकारी, बहुउद्देश्यीय सहकारी, स्वास्थ्य सहकारी, सञ्चार सहकारी, विद्युत् सहकारी, यातायात सहकारी, तरकारी तथा फलफूल सहकारी, मौरीपालन सहकारी, कोसेलीघर सहकारी, चौँरीपालन सहकारी, चिया तथा कफी सहकारी, पर्यटन सहकारी, दुग्ध उत्पादन सहकारीको संख्या तुलनात्मक रूपमा न्यून देखिन्छ । विभिन्न उद्देश्यका साथ सहकारी स्थापना गरिए तापनि केही सहकारी बाहेक अधिकांश सहकारी संस्थाले बचत तथा ऋणलाई नै आफ्नो मुख्य उद्देश्यका साथ संस्था सञ्चालन गरिरहेको अवस्था रहेको छ । जिल्लामा सहकारी जागरण पुस्तिका २०७४ र नेपाल राष्ट्र बैंकको चैत्र मसान्तको प्रतिवेदन हेर्दा सहकारी संस्थाको ऋण लगानी ४३% (लगभग ५ अर्ब) र बैंकको ५७% (६ अर्ब ५५ करोड) रहेको देखिन्छ ।

वर्तमान अवस्थामा शेयर सदस्य वृद्धि गर्ने अस्वस्थ्य प्रतिस्पर्धा सहकारी संस्थामा व्यवसायिकरणभन्दा पनि बचत तथा ऋणको परिचालनमा प्राथमिकीकरण, निक्षेप रकमको दुरूपयोग, पेसागत तथा वित्तीय ज्ञानको अभावका कारण सहकारी संस्थाका वित्तीय सूचकहरू बिग्रिँदै गएको तथा कतिपय संस्थाहरूमा व्यक्तिवादी चरित्र हाबी हुँदा संस्थागत भ्रष्टाचार बढ्दै गइरहेको अवस्था पनि हामी माझ रहेको छ । तथापि ग्रामिण क्षेत्रमा पूँजी परिचालन तथा निर्माण, गरिबी निवारण, सामाजिक परिचालन, लघु कर्जाको सरल र सहज पहुँचका लागि एक शक्तिशाली साधनको रुपमा सहकारी क्षेत्रले आफूलाई प्रमाणित गर्न सफल भएको देखिन्छ ।

**दोलखामा आर्थिक रूपान्तरण (अवसर तथा चुनौती)**:

सामान्य अर्थमा आर्थिक रूपान्तरण भन्नाले कृषि, उत्पादन, श्रम तथा स्रोतको निरन्तर परिचालनमार्फत उत्पादकत्वमा वृद्धि हुनुलाई जनाउँदछ । आर्थिक रूपान्तरणलाई मापन गर्ने मुख्य आधार भनेको उत्पादन, उत्पादकत्व, रोजगारी तथा विभिन्न क्षेत्रको मूल्य श्रृङ्खलामा भएको सकारात्मक परिवर्तनलाई जनाउँदछ ।

दोलखाको आर्थिक वृद्धि अत्यन्तै न्यून तथा अस्थिर रहेको छ । न्यून उत्पादकत्व, तथा कमजोर बजार प्रणालीका कारण अर्थपूर्ण आर्थिक रूपान्तरणमा बाधा सिर्जना भइरहेका छ । उपयुक्त श्रोत तथा साधनको अभावका कारण दक्ष जनशक्तिको उत्पादकत्व वृद्धि हुन नसक्नुको प्रत्यक्ष असर उत्पादनमा पर्ने र जसका कारण उद्योग तथा उद्यमीको पलायन जस्ता समस्या उत्पन्न भइरहेका छन् । जिल्लामा सीमित उद्योग धन्दा सञ्चालन हुनु तथा तिनको अवशेषण क्षमता कम भएका कारण जिल्लाका दक्ष जनशक्ति रोजगारीका लागि विदेशिनु पर्ने बाध्यता रहेको छ । यातायात तथा ऊर्जा क्षेत्रको उच्च लागत, सरकारी नीतिगत समस्या तथा झन्झटिला प्रक्रियाले पनि उद्यम स्थापनामा वितृष्णा पैदा भइरहेको अवस्था देखिन्छ । हाल अव्यवस्थित सहरीकरण, तीव्र भू–खण्डीकरण तथा प्राकृतिक विपत्ति पनि दोलखाको आर्थिक रूपान्तरणमा बाधा पुर्‍याउने कारक तत्वको रूपमा रहेका छन् ।

प्राकृतिक श्रोत तथा जल सम्पदामा धनी तथा प्रचुर सम्भावना बोकेको जिल्लाको कुल क्षेत्रफलमध्ये ४७.३७ प्रतिशत जमिन वन क्षेत्रले ओगटेको छ भने कुल जमिनमध्ये २६.४५ प्रतिशत जमिन खेतीयोग्य जमिन रहेको छ । दीगो आर्थिक विकासका लागि कृषि क्षेत्रको विकास अत्यन्त अपरिहार्य देखिन्छ ।

राष्ट्रिय कृषि गणना, २०६८ अनुसार कृषक परिवारले प्रयोग गरेको क्षेत्रफल हेर्दा दोलखामा कृषक परिवारले उपभोग गर्ने जम्मा क्षेत्रफल २६,८४२.७ हेक्टर देखिन्छ, जुन यसभन्दा अघिको कृषि गणनामा ०.२ प्रतिशतमा कमी हो । त्यसै गरी कृषि चलनको क्षेत्रफलमध्ये खेतीयोग्य जग्गा ८९.५ प्रतिशत रहेको पाइन्छ जुन पहिलाको कृषि गणनाभन्दा २.८७ प्रतिशतले कमी हो । तिब्र भु–खण्डिकरण, शहरीकरण तथा प्राकृतिक प्रकोपका कारण खेतियोग्य जमिनमा कमी आएको पाइएको छ । जिल्लामा कृषीमा आश्रित परिवार मध्ये आफ्नै उत्पादनबाट खान पुग्ने परिवार ४२.५६ प्रतिशत र खान नपुग्ने परिवार ५७.४४ प्रतिशत देखिन्छ । आफ्नो उत्पादनबाट खान नपुग्ने कृषक परिवारमध्ये ४ देखि ६ महिना खान पुग्ने कृषक ३३.०३ प्रतिशत, १ देखि ३ महिना खान पुग्ने ९.६९ प्रतिशत, ७ देखि ९ महिना खान पुग्ने १२.२८ प्रतिशत र १० देखि १२ महिना खान पुग्ने २.४२ प्रतिशत रहेका छन् ।

यसरी वर्षैभरी खान नपुगेको अवस्थामा खाद्यन्न अपर्याप्तताको आपूर्ति सबैभन्दा बढी आफ्नै जिल्ला भित्र उत्पादन गर्ने ५३.४६ प्रतिशत कृषकहरू रहेका छन् । त्यस्तै आफ्नो गैर कृषि व्यवसायबाट ५.२७ तथा नेपाल बाहिरको आयबाट १३.४० प्रतिशत रहेको पाइन्छ ।

सोही गणना अनुसार कृषि ऋण लिने परिवारहरू २६.४७ प्रतिशत रहेका छन् । ऋणको स्रोतको रूपमा सबैभन्दा बढी क्रमशः सहकारीबाट ५९.८१ प्रतिशत, नातेदारबाट १९.६० प्रतिशत, महिला समूहबाट ७.५२ प्रतिशत, बैंकबाट २.६२ प्रतिशत र कृषि समूहबाट ८.८२ प्रतिशत कृषक रहेको पाइन्छ ।

दोलखामा प्रशस्त मात्रामा गैरकाष्ठ वन पैदावारहरू पाइन्छन् । गैरकाष्ठ वन पैदावारहरूको संकलन तथा निकासीबाट यस क्षेत्रको बासिन्दाको आयआर्जनमा महत्तवपूर्ण भूमिका खेल्न सक्ने देखिन्छ । अर्कोतर्फ सामुदायिक वन उपभोक्ता समूहबाट समूहले यसको बिक्री वितरणबाट कोष वृद्धि गरी अन्य क्षेत्रहरूमा समेत लगानी गर्न सकिने सम्भावना देखिन्छ । यस जिल्लाको कुल वन क्षेत्र १,०१,५०० हेक्टरमध्ये ६१,९२५ (६१ प्रतिशत) सामुदायिक वन रहेका छन् । जिल्लाको उत्तरी गाउँपालिका

(कालिञ्चोक, बिगु, गौरीशंकर) अन्तर्गतका विभिन्न वडाहरूमा प्रचुर मात्रामा बहुमूल्य गैरकाष्ठ जन्य वन पैदावार (मच्छिनो, लोक्ता, अल्लो, अर्गेली, मजिठो) खेर गइरहेको तथा सीमित मात्रामा निकासी भएका त्यस्ता वन पैदावार पनि अधिकांश कच्चा पदार्थको रूपमा नै निकासी भइरहेको अवस्था रहेको छ ।

जिल्लामा विगत वर्षदेखि केही सामुदायिक वनबाट गैरकाष्ठ वन पैदावारको सङकलन तथा बिक्री वितरण भैरहेको देखिन्छ । जिल्ला वन कार्यलय अन्तर्गतका सामुदायिक वनहरूमध्ये ३०७ वटा सामुदायिक वनबाट वार्षिक संकलन गर्न सकिने मुख्य वन पैदावरहरूमा मच्छिनो, खोटो, झ्याउ, लोक्ता, अर्गेली, चिराँइतो, अल्लो, मजिठो, नागबेली, लौठ सल्ला, आदि रहेको पाइन्छन् । सामुदायिक वनबाट गैरकाष्ठ वन पैदावार निकासीको विगत १४ वर्षको अवस्था हेर्दा सबैभन्दा बढी आ.व २०६५/०६६ मा २,३८,३३३ केजी निकासी भएको देखिन्छ भने सबैभन्दा कम आ.व २०६७/०६८ मा ५२,३९७ केजी मात्र निकासी भएको पाइन्छ । गैर वन पैदावर निकासीमा सबैभन्दा ठूलो हिस्सा सल्लाको खोटोले ओगटेको छ । यसै गरी ग्रामिण क्षेत्रमा बसोवास गर्ने अधिकांश समुदाय कृषि पेसामा संलग्न भएता पनि कृषिजन्य उत्पादनमा २०७२/०७३ को जिल्लाको उत्पादन हेर्दा १५६९९ मेट्रिक टन तथा १६८५० मेट्रिक टन माग, खाद्यन्नतर्फ (धान, गहुँ, मकै, जौ, कोदो, फापर) को माग ३७४९८ मेंट्रिक टनमा १४४०३ मेंट्रिक टन मात्र उत्पादन भइरहेको छ । यसरी औषतमा दुधको प्रतिलिटर ७० र खाद्यन्नको प्रतिकिलो ४५ ले हिसाब गर्दा वार्षिक रूपमा लगभग १ अर्ब रकम जिल्लाबाट बाहिर गइरहेको देखिन्छ । यस्तै फलफूल, बिउ, विषादी तथा कृषिजन्य सामाग्री, तरकारीमा पनि ठूलो रकम बाहिरिने गरेको पाइन्छ । तथापि जिल्लाबाट वार्षिक रूपमा लगभग २० करोडको आलु, अलैँची, हरियो तरकारी, छुर्पी तथा चीजलगायतका कृषिजन्य उत्पादनहरूको निकासी हुने गरेको देखिन्छ ।

जिल्लामा आ.व. २०६२/०६३ देखि २०७४/०७५ सम्मको घरेलु तथा साना उद्योग विकास समितिको तथ्यांक हेर्दा १७६० वटा व्यवसाय दर्ता भएको पाइन्छ भने ८३१ जना व्यवसायी दोलखा उद्योग वाणिन्य संघमा आवद्ध भएको देखिएको छ । जसमा ९५ प्रतिशत Off Farm व्यवसाय छन् भने ५ प्रतिशत कृषिमा आधारित व्यवसाय देखिन्छन् । विशेष गरी कृषिजन्य व्यवसाय दर्ता गर्नुको प्रमुख उद्देश्य सरकारी तथा अन्य दातृ निकायबाट सहयोग प्राप्त गर्ने हेतुले मात्र भएको देखिन्छ । यसरी विश्लेषण गर्दा कृषिजन्य व्यवसाय अनौपचारिक रूपमा सञ्चालन भएको सजिलै आँकलन गर्न सकिन्छ । प्रचुर सम्भावना, बजार माग, स्रोतको सहज उपलब्धताका बाबजुत कानूनी जटिलताका कारण वनजन्य उद्यमको दर्ता तुलनात्मक रूपमा अत्यन्त न्यून देखिन्छ ।

**दोलखामा उद्यमशीलता विकासका अवसर**ः

यस जिल्ला प्राकृतिक स्रोत तथा जल सम्पदाको उपलब्धताको दृष्टिकोङ्गणले सम्पन्न जिल्ला हो । जिल्लामा प्रशस्त मात्रामा पर्यटकीय स्थलका (शैलुङ्गको सय थुम्का, कालिञ्चोक मन्दिर, च्छो रोल्पा हिमताल, नेपालको स्विटजरल्याण्डबाट सुपरिचित जिरी, हनुमन्तेश्वर, भिमेश्वर मन्दिर तथा दोलखा बजारका ऐतिहासिक तथा पुरातात्विक सम्पदा, प्रस्तावित फिल्म नगरी डाङडुङे डाडा आदी) कारण स्रोतमा आधारीत उत्पादन तथा पर्यटन व्यवसाय प्रचुर सम्भावना भएको जिल्ला हो । जिल्लामा उद्यमशीलता विकासका लागि केही क्षेत्रहरू निम्न छन् ।

- तामाकोशी नदी किनार आसपास बहुवर्षीय फफूल खेती ।
- बजारको पहुँच तथा स्रोतको उपलब्धताको आधारमा जिल्लाको सम्पूर्ण गाउँपालिकाका अधिकांश स्थानमा पशुपालन (गाई तथा बाख्रा) ।
- भीमेश्वर नगरपालिका अन्तर्गत वडा नं. ४, ६, ८ र ९ मा व्यवसायिक तरकारी खेती ।
- शैलुङ्ग, जिरी र भीमेश्वर नगरपालिका, जिल्लाको उच्च पहाडी स्थानमा गैर काष्ठजन्य वन पैदावारको प्रशोधनबाट उत्पादन हुने विभिन्न उत्पादनहरू (नेपाली कागज तथा यसका उत्पादन, धसिङ्गरेको तेल, बेतवासका सामाग्रीहरू, अल्लोको कपडा तथा धागो) तथा चौँरी तथा भेडापालन ।
- शैलुङ्ग, कालिञ्चोक तथा जिरीमा व्यवसायिक आलु खेती तथा यसका विभिन्न उत्पादन ।
- तामाकोसी तथा कालिञ्चोक गाउँपालिकामा न्याफ्टिङ्ग तथा पर्यटन केन्द्रित होटल ।
- च्छो रोल्पा, कालिञ्चोक मन्दिर, शैलुङ्ग लगायतका स्थानमा होम स्टे व्यवसाय ।

साथै अन्य ठुला तथा मझौला उद्यम (इट्टा उद्योग, क्रसर, भेनीयर, स:मिल, फर्निचर, आरन, ब्रिकेट, कुखुरा पालन, मौरी पालन आदीका) लागि जिल्लाका सम्पूर्ण स्थानीय निकायमा प्रचुर सम्भावना रहेको छ । जसको कारणले जिल्लाले हाल झेल्दै गरेको बेरोजगारी, खाद्यन्न अभावलगायतका समस्यालाई सम्बोधन गर्नुका साथै जिल्लाको आर्थिक रूपान्तरणमा टेवा पुग्ने देखिन्छ ।

**दोलखामा उद्यमशीलता विकासका चुनौती**

हिमाली तथा जटिल सडक सञ्जालका कारण ठूल–ठूला उत्पादनमूलक उद्योगको स्थापना तथा सञ्चालनमा चुनौतीपूर्ण रहेको देखिन्छ । वर्तमान समयमा जिल्लामा उत्पादित कृषिजन्य तथा वनजन्य उत्पादनको बिक्री वितरण कम मूल्यमा (Low Value) भइरहेको अवस्थामा यस्ता वस्तुको उच्च मूल्य (high Value) तथा नीर्यातयोग्य बनाउनका लागि निम्न समस्या देखिएका छन् ।

- भण्डारण तथा ढुवानीको समस्या,
- स्थानीय स्तरमा प्रशोधन तथा संरक्षण केन्द्रको अभाव,
- वस्तुको गुणस्तर व्यवस्थापन तथा स्तरीकरणको ज्ञानमा कमी,
- कृषिजन्य सामाग्रीको (बिउ, मल, विषादी, प्रविधिको) सहज उपलब्धतामा कठिनाई,
- स्थानीय स्तरमा प्राविधिक ज्ञान तथा प्राविधिकहरूको कमी,
- बजार तथा बजार माग सम्बन्धी जानाकारीमा कमी र
- गुणस्तरयुक्त पूर्वाधारको कमी ।

**उद्यमशीलता विकासः**

सामान्यतया उद्यमशीलताको बारेमा विभिन्न मत–मतान्तर व्यक्त भएका छन् । आर्थिक अवधारणलाई जस्तै यसलाई पनि विभिन्न दृष्टिकोण तथा तर्कहरूबाट परिभाषित गर्ने प्रयास भएको छ । कसैले उद्यमशीलतालाई उद्यमीले जोखिम बहन गर्ने कार्य व्यवहारका रूपमा लिएका छन् भने कसैले उद्यमशीलतामा नवप्रवर्तन रहेका हुन्छ भन्ने बुझाइ छ । तर उद्यमी र उद्यमशीलताई एकै अर्थमा लिइनु ठीक मानिन्न । उद्यमशीलता भन्नाले उद्यमी नभइकन उद्यमहरूको कार्य व्यवहार वा कार्यप्रतिको जाँगर हो भने उद्यमी भन्नाले त्यो कार्य गर्ने र्क्ता हो । कुनै व्यवसायको थालनी, विकास र विस्ताबाट प्राप्त गरिने अपेक्षित परिणामसँग आवद्ध सम्पूर्ण कार्यहरू, प्रयास, लगन तथा समर्पणको संयुक्त व्यवहार नै उद्यमशीलता हो । उद्यमशीलता भनेको उद्यमीहरूले व्यवसाय सुरू वा सञ्चालन गर्ने क्रममा गरिने कार्यहरू, जो व्यावसायिक योजनाबाट सुरू भई त्यसको कार्यान्वयन गर्ने र पृष्ठपोषण लिने सम्मका सम्पूर्ण प्रयासहरूसँग सम्बन्धित विषय हो । उद्यमशीलता विकास आफैंमा निरन्तर गरिने प्रयास हो । यसमा व्यक्तिले कसरी जोखिम बहन गर्न सक्छ ? कसरी विचार तथा अवसर सिर्जना गर्न सक्छ भन्ने आउँछ । उद्यमशीलता विकास हुन त्यस स्थानको वातावरण महत्वपूर्ण हुन्छ । अर्थात् उद्योग व्यवसायसँग सम्वद्ध तमाम आर्थिक तथा गैर–आर्थिक तत्वले उद्यमशील अवसरमा प्रभाव पार्ने हुँदा उद्यमीले व्यवसाय प्रारम्भ गर्दा उद्यमशीलतालाई प्रभाव पार्ने तत्वको अध्ययन गर्नु पर्दछ । बाह्य वातावरणका तत्वहरू (आर्थिक, सामाजिक, सांस्कृतिक, कानूनी, प्राविधिक) ले व्यवसायको स्थापना, वृद्धि तथा विस्तारमा प्रभाव पारेको हुन्छ । त्यसलाई उद्यमी स्वयंले बुझ्नु पर्दछ र सम्बन्धित निकायले उचित ध्यान बनाई दिनेतर्फ आफ्नो ध्यान केन्द्रित गर्नुपर्दछ ।

एक्काइसौं शताब्दीको उद्यमशीलता विकासलाई राष्ट्रले पनि गहिरिएर हेर्न थाल्नु निश्चय पनि उपब्धीका रूपमा लिन सकिन्छ । दोलखाको सन्दर्भमा कुरा गर्ने हो भने आर्थिक तथा सामाजिक रुपमा पिछडिएको जिल्ला भएकाले उद्यमशीलता विकास आर्थिक विकासको ज्यादै महत्वपूर्ण पक्ष बनिसकेको छ । जिल्लाको ग्रामिण भेगमा बसोबास गर्ने बहुसंख्यक जनता अझै पनि गरिबीको रेखामुनी रहेका छन् । ग्रामिण स्तरमा लघु तथा घरेलु उद्यमहरू विकास गर्न सकिएको खण्डमा जिल्लाले समुन्नतिको धार समाउन सक्ने प्रशस्त सम्भावना रहेका छन् । उद्यमशीलताको माध्यमबाट पूँजी सिर्जना, रोजगारी सिर्जना, सन्तुलित क्षेत्रीय विकास, समतामूलक वितरण, खेर गइरहेको पूँजी तथा सिपको सदुपयोग, नीर्यात प्रवर्द्धन, पूर्वाधार विकास जस्ता क्षेत्रमा महत्वपूर्ण भूमिका निर्वाह गर्न सघाउ पुऱ्याउँछ ।

जिल्लामा विगत एक दशक देखि उद्यमशीलताको विकासमा लघु उद्यम विकास कार्यक्रम, नेपाल सरकारद्वारा सञ्चालित गरिबी निवारणका लागि लघु उद्यम विकास कार्यक्रम का साथै जिविकोपार्जन सुधार तथा गरिबी निवारणका लागि काम गर्ने यु.एन.डि.पी, मर्सिकोर, क्रिष्चिएन एड, यु.एस. एड, सिवीन लगागायतका संस्था क्रियाशील रहेका छन् ।

**सहकारीको अवस्था विश्लेषण**:

जिल्लामा सञ्चालन गरिएका अधिकांश सहकारी संस्थामध्ये तामाकोसी गाउँपालिकामा सञ्चालनमा रहेका ८ वटा सहकारी संस्था (२ वटा महिला सहकारी, १ वटा कृषि सहकारी र ५ वटा बचत तथा ऋण सहकारी संस्था) मा २०७५ फाल्गुण मसान्तसम्म गरिएको अध्ययनले सहकारी संस्थाको अवस्था सन्तोषजनक देखिदैन । हकारी संस्थाको मुख्य समस्या लगानीको सुरक्षणमा देखिएको छ । सहकारी संस्थाले भाखा नाघेको ऋणको लागि Provision नगर्नु, आवश्यक सम्पत्ति तथा नगदको बिमा नगर्नु, संस्थागत पूँजी र शेयर पूँजीको अनुपात कम हुनु सहकारी संस्थाको मुख्य चुनौती देखिएको छ । यो तथ्य निम्न तालिकामा रहेको छ ।

**तालिका नं. १: पर्ल्स मुल्यांकन तालिका**

| | सूचक | लक्ष्य | नतिजा |
|---|---|---|---|
| **P = Protection** | | | |
| P1 | १ वर्षभन्दा बढी समय भाखा नाघेको ऋणका लागि व्यवस्था | १००% | ०.०० |
| P2 | १-१२ महिना भाखा नाघेको ऋणका लागि व्यवस्था | ३५% | ६.८३ |
| | भाखा ननाघेको असल ऋणको लागि व्यवस्था | १% | ०.९९ |
| **E = Effective financial qmructure** | | | |
| E1 | लगानीमा रहेको ऋण/कूल सम्पत्ति | ७०-८०% | ७९.८३ |
| E5 | बचत निक्षेप/कूल सम्पत्ति | ७०-८०% | ७३.१३ |
| E6 | बाह्य ऋण/कूल सम्पत्ति | ≦५% | ४.२५ |
| E7 | शेयर पूँजी/कूल सम्पत्ति | १०-२०% | ८.१४ |
| E8 | संस्थागत पूँजी/कुल सम्पत्ति | १०-२०% | ३.४४ |
| **A = Assets quality** | | | |
| A1 | भाखा नाघेको ऋण/लगानीमा रहेको कूल ऋण | ≦५५ | २९.०४ |
| A2 | आयआर्जन नगर्ने सम्पत्ति/कूल सम्पत्ति | ≦५५ | ४.२७ |
| A3 | स्थिर सम्पत्तिमा संस्थागत पूँजीको अनूपात | २००% | ११९.२६ |
| **R = Rate of return** | | | |
| R1 | ब्याज आम्दानी/ औषत ऋण | ब्याजदर | ६.७७ |
| R5 | बचतमा ब्याज खर्च/ औषत बचत निक्षेप | ब्याजदर | १.३० |
| R6 | बाह्य ऋणमा ब्याज खर्च/ औषत बाह्य ऋण | ब्याजदर | ३.७९ |
| R9 | संचालन खर्च/औषत सम्पत्ति | ≦५% | १.८४ |
| R12 | खुद बचत (मुनाफा)/औषत सम्पत्ति | कम्तीमा १०% | ३.२० |
| **L = Liquidity तरलता** | | | |
| L1 | तरलता कोष/कूल बचत | १०-२०% | २१.०० |
| L3 | हातमा रहेको नगद/ कुल सम्पत्ति | <१% | १.३९ |
| **S = Sign of growth वृद्धिको संकेत** | | | |
| S10 | सदस्यता वृद्धि अनुपात | ४०% | ४.८८ |
| S11 | सम्पत्ति वृद्धि अनुपात | ४०% | ३.३१ |
| **SS = Self sufficiency आत्म निर्भरता** | | | |
| Oss | संचालन आत्मनिर्भरता | >१००% | १७२.७५ |
| FSS | वित्तीय आत्मनिर्भरता | >१००% | १५४.४८ |

सहकारी संस्थाको ऋण लागनीको क्षेत्रलाई विश्लेषण गर्दा विशेष गरी सहकारीले सामाजिक तथा व्यक्तिगत ऋणमा अधिक

लगानी गरेको देखिन्छ जुन क्षेत्र लगानी उठतीको हिसाबले जोखिम पूर्ण देखिएको छ । माथि उल्लेख गरिएको ८ वटा सहकारीको कर्जालाई अध्ययन गर्दा सहकारी संस्था भाखा नाघेको ऋण २९ प्रतिशत देखीन्छ । जसमा उत्पादनशील क्षेत्रमा गरिएको लगानीमा भाखा नाघेको ऋण तुलनात्मक रूपमा कम देखिन्छ ।




*स्रोत: सहकारी अनुगमन प्रतिवेदन, २०७५ फाल्गुण, ग्रामिण उद्यम विकास केन्द्र, दोलखा*

माथि उल्लेख गरिएको तथ्यांक प्रतिनिधिमूलक मात्र हो । यसबाट जिल्लामा सञ्चालित सहकारी संस्थाको वास्तविक अवस्थाको विषयमा सजिलै आँकलन गर्न सकिन्छ । सहकारी संस्थाका सञ्चालक, कर्मचारीमा सहकारी व्यवस्थापन, उद्यमशीलता तथा कर्जा नीति सम्बन्धी ज्ञानको अभाव, सहकारी संस्थामा बढ्दै गएको राजनीति, कमजोर विनियम नीति तथा कार्यविधि, कमजोर व्यवस्थापकीय क्षमता तथा प्रणाली, अनुत्पादक क्षेत्रमा बढ्दै गएको प्रशासनिक खर्च, मध्यम तथा तल्लो तहका कर्मचारीको क्षमता अभिवृद्धिमा कमी, सञ्चालक समिति तथा व्यवस्थापकहरूमा सिर्जनशीलताको अभावका साथै शेयर सदस्य बढाउनका लागि होडबाजीका कारण सहकारी संस्थाको अवस्था दिनानुदिन खस्किँदै गएको छ । सहकारी संस्थामा ऋण नीति स्पष्ट तथा त्यसको अनुगमन नहुँदा खराब कर्जाको दर बढ्नुका साथै स्थानीय स्तरमा रोजगारी सिर्जना, बजार विकास तथा सदस्यको आर्थिक अवस्था समुन्नत हुन नसकेको देखिन्छ ।

सहकारी संस्थाका शेयर सदस्यसँग गरिएको छलफलमा सहकारी संस्थाले लगाउँदै आएको बचतमा हर्जना, संस्थाका सञ्चालक तथा उपल्लो दर्जाका कर्मचारीहरूको वैदेशिक तथा अध्ययन भ्रमण, तीर्थ यात्रा, ऋणमा लिइने ब्याजदर लगायतका गतिविधिमा असन्तुष्टी जनाए तापनि ग्रामिण समुदायमा सहकारी संस्थाले पुऱ्याउँदै आएको वित्तीय पहुँचलाई मुक्तकण्ठले प्रशंसा गरेका छन् ।

**घटना अध्ययन (सहकारी उद्यमशीलता):**

सहकारी संस्थाको लगानी तथा व्यवस्थापनमा जिल्लामा विभिन्न उद्यमहरू (कोसेली घर, कृषि तथा पशु फर्म, उपभोक्ता पसल, अस्पताल, रेडीयो, दुग्ध उत्पादन, बिउ विजन भण्डारण तथा बिक्री वितरण) सञ्चालनमा छन् । तीमध्ये उत्पादनमा आधारित व्यवसायहरू बढी सफल देखिएका छन् भने आपुर्ति तथा सेवामा आधारीत उद्यमहरू (उपभोक्ता पसल, अस्पताल) बढी समस्या देखिएका छन् । सफल हुनुको मुख्य कारण भनेको ग्रामिण भेगमा यस्ता उद्यमहरूले बजारीकरण तथा सदस्याहरूद्वारा उत्पादित वस्तुको बजार व्यवस्थामा ध्यान दिनु प्रमुख रहेको देखिएको छ भने असफल हुनुका मुख्य कारण भनेको कमजोर व्यवस्थापकीय तथा लेखा प्रणाली, विषयगत क्षेत्रमा आवश्यक ज्ञानको अभाव देखिएको छ । सञ्चालनमा रहेका केही सहकारी संस्थाले प्रवर्द्धन गरेको सदस्य केन्द्रित उद्यमशीलताका मोडल तथा प्रतिफल बक्स नं. १ मा प्रस्तुत गरिएको छ ।

## बक्स नं. १ः सहकारी उद्यमशीलताका केही नमुनाहरू

**प्रगतिशील बचत तथा ऋण सहकारी संस्था, तामाकोशी गाउँपालीका–६, दोलखा**

आफ्ना सदस्यहरूको क्षमता विकास तथा आर्थिक क्रियाकलापमा सहयोग पुऱ्याउने हेतुले तामाकोसी गाउँपालिका, जनहित दुग्ध सप्लार्यस ग्रामिण उद्यम विकास केन्द्र (REDC) को साझेदारीमा गाई पालन तथा संकलन केन्द्र निर्माण व्यवसायमा सहयोग गरेको हो । सो सहकारीले च्यामा र हावाका ७३ जना सदस्यहरूलाई उन्नत जातको गाई खरिदमा प्रतिसदस्य रू ३५००० हजार सरल ब्याजदरमा कर्जा र रू १५००० बाह्य संस्थासँगको समन्वयमा अनुदान उपलब्ध गराएको थियो । दुध संकलनका लागि सहकारीले आफ्नै संकलन केन्द्र निर्माण (गाउँपालीका, REDC तथा सहकारीको स्वलगानी) गरी जनहित दुग्ध सप्लार्यसलाई दुध संकलन गर्ने जिम्मा दिएको छ । कृषकहरूको सुविधाको लागि संकलन केन्द्रमा एक एग्रोभेट सेन्टर पनि स्थापना गरी सेवा सुविधा प्रदान गरेको छ ।

यो कार्यक्रमबाट उक्त स्थानमा मासिक सरदर २.५ लाख देखि ३ लाखसम्म आम्दानी भित्रने गरेको छ भने गाई पालनबाट सदस्यहरूको आम्दानीमा वृद्धि भई बचतमा समेत वृद्धि भएको छ । सहकारीले प्रत्यक्ष निगरानी तथा अनुगमन गर्ने हुँदा कृषकहरूको ऋण सही ठाउँमा लगानी भएको छ । सदस्यहरूले मासिक रूपमा ब्याज तथा किस्ता नीयमित रूपमा तिर्ने हुँदा सहकारीको भाखा नागेको ऋण समेत उठेको छ । हाल यो क्षेत्रमा लगानी गरेको ऋणमा ९५ प्रतिशत Recovery Rate रहेको छ । यो कार्यक्रमबाट सहयोग प्राप्त गर्ने एक जना सदस्यले समग्रमा मासिक रू २०००० सम्म आम्दानी गरेको पाइएको छ ।

**भिमेश्वर बहुउद्देश्यीय सहकारी संस्था, तामाकोशी गाउँपालिका १ दोलखा**

सहकारी संस्थाको उद्देश्य अनुरूप यस संस्थाले ३ नम्वर प्रदेश सरकार, शेयर सदस्य तथा सहकारी संस्थाको लगानीमा पशु पंछी पेलेट दाना उद्योग सञ्चालनको तयारी गरिरहेको छ । यस परियोजनाको लागि संस्थाका सदस्यहरूले १ हजार देखि ५ लाखसम्म लगानी गरेको छन भने प्रदेश सरकारले कुल लगानीको ५० प्रतिशस अनुदान सहयोग उपलब्ध गराउने प्रतिवद्धता व्यक्त गरेको छ भने अपुग रकम सहकारी संस्थाको संचित कोषबाट लगानी गर्ने गरी वातावरण बनाइएको छ । सुरूमा ४ करोडको लागानीमा यो उद्योग सञ्चालन हुनेछ । यस उद्योगबाट दिनमा १६ टन दाना उत्पादन हुने र स्थानीय स्तरमा पशुपालक कृषकलाई सरल दरमा दाना उपलब्ध गराइने सहकारी संस्थाको योजना रहेको छ । उद्योगबाट आर्जन भएको नाफालाई लगानीको आधारमा मुनाफा उपलब्ध गराईने गरी बनाइएको यो नीतिले सहकारीका सदस्यलाई व्यवसायिक पशुपालन तर्फ प्रेरित गर्नुका साथै स्थानीय स्तरमा रोजगारीका अवसर सिर्जना गर्ने देखिएको छ ।

### सहकारी उद्यमशीलताको भविष्यः

सहकारी केन्द्रित उद्यमशीलता र आर्थिक रूपान्तरणका लागि सहकारीले तपसिल अनुरूप आफ्नो क्रियाकलाप अघि बढाउनु जरूरी छ ।

- औद्योगिक निति २०७३ अनुरूप सहकारी संस्थाको क्षमता अनुरूप MSME Lending (लघु, साना, मझौला तथा ठुला उद्यम लगानी) लाई प्राथमिकीकरण गरिनुपर्ने,

**तालिका नं. २ः तहगत उद्यमशीलताको पूँजी संरचना**

| उद्यम | स्थिर सम्पत्ति | वार्षिक कारोबार | रोजगारी |
|---|---|---|---|
| लघु | ५ लाखसम्म | ५० लाखभन्दा कम | उद्यमी सहित ९ जना |
| साना | ५ लाखदेखि १० करोडसम्म | ५० लाखदेखि १० करोडसम्म | |
| मझौला | १० करोडदेखि २५ करोडसम्म | १० करोडदेखि २५ करोडसम्म | |
| ठूला | २५ करोडभन्दा बढी | २५ करोडभन्दा बढी | |

- सहकारी संस्थामा भएका ऋण तथा अन्य नीतिलाई सशोधन गर्दै उद्यम मैत्री ऋण नीति अवलम्बन गरिनुपर्ने,
- सञ्चालक तथा कर्मचारीलाई उद्यमशीलता तथा व्यावसायिक योजना सम्बन्धी तालिम आयोजना गरिनुपर्ने,
- सदस्यहरूलाई सहकारी शिक्षा नीतिसँगै उद्यमशीलता सम्बन्धी तालिमको व्यवस्था गरिनुपने,
- सदस्यहरूद्वारा उत्पादित वस्तुको बजारीकरणका लागि सहकारी संस्थाले कृषि वस्तुको मूल्य शृंखलामा लगानी (Agriculture Value Chain Financing) अभिवृद्धि गर्नुपर्ने,
- सदस्यहरूको चाहना, स्रोतको उपलब्धता तथा बजार मागको आधारमा कुनै एक सहरक्षेत्रमा लगानीलाई प्राथमिकीकरण गरिनुपर्ने,
- खेतीयोग्य जमिन खण्डीकरण गरी घडेरीको रूपमा खरिद तथा बिक्रीका लागि आउने कार्यक्रम तथा योजनालाई निरूत्साहित गरिनुपर्ने,
- मौद्रिक नीतिको अवलम्बन गर्दै समूह जमानीमा विपन्न वर्गलाई विनाधितो कर्जा उपलब्ध गराउनुपर्ने,

यसरी सहकारी उद्यमशीलता र आर्थिक रूपान्तरणका लागि सहकारी संस्थाले स्थानीय सरकारसँगको सहकार्यमा आफ्ना गतिविधिलाई अघि बढाउन जरूरी छ । विकासका ७ तहको योजना तर्जुमा प्रक्रियामा सहकारी संस्थाको प्रतिनिधित्व हुनु जरूरी छ । जसको कारणले सहकारी संस्थाका सदस्य केन्द्रित जीविकोपार्जन सम्बन्धी क्रियाकलाप सञ्चालनमा सघाउ पुग्छ । यसका लागि सहकारी संस्थाले स्थानीय तहको बजेटलाई सहकारी संस्थाका सदस्यको आर्थिक समृद्धिका लागि मूलप्रवाहीकरण नीति अंगिकार गर्नु जरूरी हुन्छ ।

सहकारी उद्यमशीलताका लागि अबका दिनमा सहकारी संस्थाका अभियानहरू निम्न बमोजिम हुनु जरूरी देखिन्छ ।

**तालिका नं. ३ : सहकारी उद्यम विकासका आगामी रणनीतिहरू**

| क्रियाकलाप | तत्कालिन | दीर्घकालिन | क्रियाकलापको प्रभाव | |
|---|---|---|---|---|
| | | | सहकारी संस्था | सदस्य |
| सहकारी संस्थाले कृषि तथा पशु बीमा र बिप्रेशन सेवा सञ्चालन | विद्यमान नीति संशोधन गर्नुपर्ने | सम्बन्धित निकायबाट स्वीकृति लिनुपर्ने | सहकारी संस्थाको आम्दानीका स्रोत बढ्नुका साथै संस्थाको दीगोपनामा अभिवृद्धि हुनेछ । | व्यावसायिक कृषि तथा पशुपालनमा आकर्षित हुने तथा बजार केन्द्र धाउने समस्याबाट मुक्त हुनेछन् । |
| उद्यमशीलता विकास उपसमिति गठन गर्नुपर्ने | विद्यमान नीति संशोधन गर्नुपर्ने | सञ्चालक, कर्मचारी तथा सदस्यलाई क्रमिक रूपमा उद्यमशीलता विकास तालिम सञ्चालन गर्नुपर्ने | सहकारी संस्थामा कार्यरत तथा आवद्ध सम्पूर्णमा संस्थागत उद्यमशीलताको विकास हुनेछ । | उद्यमी बन्नका लागि भोक सिर्जना हुनेछ । |
| १ सहकारी १ पकेट क्षेत्र कार्यक्रम सञ्चालन गर्नुपर्ने | बजार तथा स्रोत सम्भाव्यता अध्ययन प्रारम्भ गर्नुपर्ने | निर्क्यौल भएको पकेट क्षेत्रमा लगानी गर्ने तथा सम्भावित व्यवसायिको छनौट गर्ने | सहकारी संस्थाको आर्थिक कारोबार वृद्धि हुनुका साथै खराब कर्जाको दर घट्नेछ । | उत्पादन, उत्पादकत्व तथा प्रतिव्यक्ति आयमा सुधार हुनेछ । |
| १ वडा १ एग्रोभेट स्थापना गर्नुपर्ने | सम्भाव्यता अध्ययन प्रारम्भ गर्ने | सम्भावित उद्यमीलाई सरल दरमा कर्जा प्रवाह गर्ने | | कृषि सामाग्रीको आपूर्ति सहज हुनेछ जसका कारणले कृषकको उत्पादन लागत घट्नेछ । |

| क्रियाकलाप | तत्कालिन | दीर्घकालिन | क्रियाकलापको प्रभाव | |
|---|---|---|---|---|
| | | | सहकारी संस्था | सदस्य |
| १ वडा १ संकलन केन्द्र स्थापनाको पहल गर्ने | स्थानीय निकायमा प्रस्तावना पेश गर्ने | संकलन केन्द्र निर्माणका लागि अन्य दातृ निकायसँग सहकार्य गर्ने | सहकारीका विस्तार हुनुका साथै आम्दानीका स्रोतमा विविधिकरण हुनेछ । | बजारको सरल तथा सहज पहुँचमा अभिवृद्धि हुनेछ । |
| पालिका स्तरीय बहुउद्देश्यीय कृषि संकलन केन्द्र स्थापनामा पहल गर्ने | स्थानीय निकायमा प्रस्तावना पेश गर्ने, पालीका सहकारी संघ गठन गर्ने | संकलन केन्द्र निर्माणका लागि अन्य दातृ निकायसँग सहकार्य गर्ने | पालिका सहकारी संघले वडा तहमा संकलित उत्पादनको बजारीकरणमा सहयोग गर्ने | |
| जिल्ला सहकारी संघले जिल्ला तथा क्षेत्रीय व्यापारी, संकलक, निजी क्षेत्रसँग समन्वय तथा सहकार्य गर्ने | क्षेत्रीय व्यापारी, संकलक, निजी क्षेत्रसँग समन्वय तथा सम्झौता गर्ने | पालिका स्तरमा समय–समयमा मूल्य शृङ्खला कार्यशाला गोष्ठी सञ्चालन गर्ने | पालिका स्तरमा संकलित सामाग्रीको बजारीकरणमा समन्वयकारी भूमिका निर्वाह गर्ने । | |

**निष्कर्ष**:

माथिका अध्ययन तथा विश्लेषणले सहकारीको महत्व विश्वमा उपल्लो दर्जामा पुगेको देखिन्छ । बचतले सहकारीलाई मजबुत बनाउँदै लगेकाले यो अवस्था देखिएको हो । नेपाल सरकारले सहकारीलाई आर्थिक नीतिका तीन खम्बामध्ये एक मानिसकेको छ । यो विश्वासलाई बचाइ राख्न सहकारीले अब बचत तथा ऋणसँगै शेयर सदस्यहरूको जीवन उकास्ने सीपमूलक आयआम्दानीका बाटाहरू खोज्नु आवश्यक भइसकेको छ । शेयर सदस्यहरू दरिला भए मात्र सहकारी पनि दरिलो हुने यथार्थलाई भुल्न सकिन्न । शेयर सदस्यहरूलाई मजबुत पार्नसक्ने तर न्यून रहेका उपभोक्ता सहकारी, बहुउद्देश्यीय सहकारी, स्वास्थ्य सहकारी, सञ्चार सहकारी, विद्युत सहकारी, यातायात सहकारी, तरकारी तथा फलफूल सहकारी, मौरीपालन सहकारी, कोसेलीघर सहकारी, चौँरीपालन सहकारी, चिया तथा कफी सहकारी, पर्यटन सहकारी, दुग्ध उत्पादन सहकारी समतेलाई विकास तथा विस्तृत गर्नुपर्ने टडकारो आवश्यकता खटकिएको देखिन्छ ।

**स्रोत तथा सन्दर्भ सामाग्री**:


- वार्षिक कृषि विकास कार्यक्रम तथा तथ्यांक पुस्तिका २०७२/०७३
- चरण विकास र पशुपन्छी प्रवर्द्धन कार्यक्रम सम्बन्धी पुस्तिका २०७३/०७४
- दोलखा जिल्लाको वस्तुगत विवरण २०७२
- घरेलु तथा साना उद्योग विकास समितीको प्रतिवेदन २०७४/०७५
- जनसेवा मितेरी बचत तथा ऋण सहकारी संस्था प्रतिवेदन फाल्गुण मसान्त २०७५
- प्रगतिशील बचत तथा ऋण सहकारी संस्था प्रतिवेदन फाल्गुण मसान्त २०७५
- संखेस्वर जनमुखी बचत तथा ऋण सहकारी संस्था प्रतिवेदन फाल्गुण मसान्त २०७५
- महिला साक्षरता बचत तथा ऋण सहकारी संस्था प्रतिवेदन फाल्गुण मसान्त २०७५
- गढीमाई बचत तथा ऋण सहकारी संस्था प्रतिवेदन फाल्गुण मसान्त २०७५
- भिजन बचत तथा ऋण सहकारी संस्था प्रतिवेदन फाल्गुण मसान्त २०७५
- संकल्प साना किसान कृषि सहकारी संस्था फाल्गुण मसान्त २०७५
- शिद्धेश्वरी महिला बचत तथा ऋण सहकारी संस्था प्रतिवेदन फाल्गुण मसान्त २०७५
- सहकारी जागरण पुस्तिका २०७४

# आर्थिक रूपान्तरण र उद्यमशीलताका लागि सहकारी नेतृत्व

- नवराज सिम्खडा
लघुवित्त तथा सहकारी विज्ञ

## १. सहकारी संस्थाको सुशासन कुशल व्यवस्थापन र सफलताका लागि नेतृत्वमा हुनुपर्ने गुणहरू

### १.१. परिचय

मानव इतिहाससलाई नीयाल्ने हो भने संघ-संस्थाको प्रगति र समुदायको समृद्धिको लागि नेतृत्वको अहम भूमिका रहेको पाइन्छ ।[1] डुब्न लागेको कम्पनीलाई बचाउने कार्य वा देश र समुदायलाई समृद्धितिर डोऱ्याउने कार्यमा नेतृत्वको महत्वपूर्ण भूमिका रहेको पाइन्छ ।[2] समुदायमा नेतृत्वको भुमीका अहम रहेता पनि सफल नेतृत्व बन्न के कस्ता विशेषताहरू हुनुपर्दछ भन्ने सम्बन्धमा धेरै जिज्ञासहरू रहेका छन् जस्तो सफल नेतृत्वमा के कस्ता विशेषताहरू हुन्छन् ? नेतृत्वका गुणहरू जन्म सिद्धरूपमा आएका हुन्छन् वा त्यस्ता गुणहरू अध्ययन, लगन र अनुभवबाट हासिल गरिन्छ ? के नेतृत्वकर्तासँग अन्य व्यक्तिहरूसँग भन्दा विशेष प्रकारका गुणहरू हुन्छन् ? नेतृत्वका वा टिमका सदस्यका गुण, ज्ञान तथा विशेषताहरूले वा संस्थाको विशेष अवस्थाको कारण सफलता र प्रभावकारिता हासिल गर्न सकिन्छ ? यदि टिमका सदस्यका गुण तथा क्षमताका कारणले गर्दा संस्थाको प्रभावकारितामा वृद्धि भएको भए टिमका सदस्यहरूका क्षमता वृद्धिका लागि नेतृत्वले के कस्ता भूमिका निभाउनु पर्दछ ? नेतृत्वका गुण तथा क्षमताहरूको कसरी मापन गर्ने वा संस्थाको प्रगतिमा नेतृत्वको भूमिका कति प्रतिशत हुन्छ र बाँकी पक्षहरूको भूमिका कति प्रतिशत रहन्छ ? कुन कुन तत्वहरूले नेतृत्वलाई सफल बनाउछ, संस्थाको सफलताको पछाडी कुन कुन पक्षहरूका के कति भूमिका रहन्छ र सो को मापन कसरी गर्ने भन्ने जस्ता प्रश्नहरूले गर्दा नेतृत्वसँग सम्बन्धी अनुसन्धान निकै लोकप्रिय भएको छ ।[3]

त्यस्तै गरेर नेतृत्वको गुणहरू र संस्थाको प्रगति वा समुदायको समृद्धि बिचको सम्बन्ध के छ भन्ने विषयले धेरै अनुसन्धानकर्ताहरूको ध्यान आकर्षित गरेको छ । विभिन्न जिज्ञाशा वा प्रश्नहरू जस्तै, संस्थाको सुशासन, व्यवस्थापन, प्रगति, विस्तार र वृद्धिमा नेतृत्वको के भूमिका रहन्छ ? के नेतृत्व र संस्थाको प्रगति बिचमा सम्बन्ध छ ? के नेतृत्वको कारण सदस्यहरूको उद्यमशीलताको विकास र आर्थिक रूपान्तरण हुन सक्छ ? के संस्थाको वा देशको भविष्य नेतृत्वको हातमा निर्भर रहन्छ ? यदि रहन्छ भने संस्था र देशको उन्नति-प्रगति र नेतृत्वको गुण बिचमा के सम्बन्ध छ ? यस्ता अनगिन्ती प्रश्नहरूले गर्दा नेतृत्व सम्बन्धी अनुसन्धानले धेरैको ध्यान आकर्षित गरेको छ र यस क्षेत्रमा धेरै अध्ययनहरू भएका छन् ।

संसारभर यस्ता धेरै उदाहरणहरू छन् जहाँ कुनै देश वा संस्था प्रगतिको पथमा सधै अगाडि छन् भने कुनै देश वा संस्थाले उल्लेख्य प्रगति हासिल गर्न सकेका हुँदैनन ।[4] अझ भन्ने हो भने त कुनै संस्थाको प्रगति दिनानुदिन खस्कदै गई बन्द हुने अवस्थामा पुग्न गएको छ । किन कुनै संस्था प्रगतिको पथमा अगाडि छन् भने अन्य संस्थाहरू बन्द हुने अवस्थामा छन् र यसमा नेतृत्वको के भूमिका छ भन्ने कुराले धेरै अनुसन्धनकर्ताहरूको मस्तिष्कमा जिज्ञासा उत्पन्न गरेको छ । फलस्वरूप नेतृत्वको क्षेत्रमा धेरै अध्ययनहरू भएका छन् ।[5] सहकारीको सन्दर्भमा हेर्ने हो भने पनि कुनै सहकारी संस्थाहरू सफल, प्रभावकारी र प्रगतिको पथमा लम्किरहेका छन् भने अन्य संस्थाहरू बन्द हुने अवस्थामा छन् । तर नेपालको सहकारीको क्षेत्रमा के कारणले गर्दा कुनै संस्था सफल र प्रभावकारी छन् र अन्य संस्थाहरू बन्द हुने अवस्थामा छन् र यसमा नेतृत्वको के भूमिका छ भन्ने भनेर अध्ययन भएका छैनन् ।

---

*1 Bass, 2008*
*2 Bass & Riggio, 2006*
*3 Bass, 2008*
*4 Yukl, 2006*
*5 Bass & Riggio, 2006*

नेतृत्व सम्बन्धी अनुसन्धानको थालनी विश्वमा सन १९२० तिर बाट भएको हो । सुरूका अध्ययनहरूले प्रभावकारी र अप्रभावकारी वा सफल र असफल संस्थाका नेतृत्वका गुणहरू तुलना गर्दै सफल नेतृत्वका विशेषताहरू पहिचान गर्ने प्रयास भएको थियो ।[6] अनुसन्धानहरूले के देखायो भने नेतृत्वका सफलता र असफलता विभिन्न अवस्था र परिस्थितिमा निर्भर गर्दछ[7] र नेतृत्वको कुनै गुणले सफल हुन मद्दत पुर्‍याउँछ तर त्यतिले मात्र प्रभावकारी नेता बन्न प्रर्याप्त छैन । सफल नेता बन्न नेतृत्वको गुण, ब्यवहार, शैली र परिस्थति सबैको भूमिका उतिकै महत्व हुन्छ ।[8] कुनै अवस्थामा प्रजातान्त्रिक र कुनै अवस्था अप्रजातान्त्रिक वा कडा स्वभावको नेतृत्व सफल हुन्छन् । नेतृत्वका सफलता र असफलता टिम सदस्य वा कर्मचारीहरूको प्रकार विभिन्न अवस्था र परिस्थितिमा निर्भर गर्दछ । एउटा अवस्थामा सफल नेतृत्व अर्को अवस्थामा सफलै हुन्छ भन्ने छैन । संस्थाको नेतृत्वको गुणहरू, सुशासन, व्यवस्थापन र संस्थाको प्रगति बिचको सम्बन्ध पहिचान गर्ने सम्बन्धमा संसारमा धेरै अध्ययनहरू भएका छन् । नेपालको सम्बन्धमा भन्ने हो भने नेतृत्वको क्षेत्रमा धेरै कम मात्र अध्ययन भएको छ भने सहकारी संस्थाको नेतृत्वको गुणहरूको अध्ययन त भएकै छैन भन्दा पनि हुन्छ । तसर्थ यस लेखमा मैले २१० वटा सहकारी संस्थाहरूमा गरेको अध्ययनको आधारमा संस्थाको नेतृत्वको गुणहरूका विविध पक्षहरू र नेतृत्व मापनका सूचकहरूको बारेमा उल्लेख गरेको छु ।

### १.२. सहकारी संस्थामा नेतृत्व

सहकारिता एउटा यस्तो सामुदायिक संगठन हो जसमा समुदायका ब्यक्तिहरू एक जुट भई आफ्ना आर्थिक, सामाजिक तथा सांस्कृतिक आवश्यकताहरू र आकांक्षाहरूको परिपूर्ति प्रजातान्त्रिक नीयन्त्रित ब्यवसाय मार्फत गर्न चाहन्छन् । अन्तर्राष्ट्रिय सहकारी महासंघको अनुसार सहकारी त्यस्ता व्यक्तिहरूको स्वायत्त संगठन हो, जो स्वेच्छिक रूपमा एकजुट भइ आफ्ना समान आर्थिक, सामाजिक तथा सांस्कृतिक आवश्यकताहरू र आकांक्षाहरूको परिपूर्ति संयुक्त स्वामित्व तथा प्रजातान्त्रिक रूपमा नीयन्त्रित व्यवसाय मार्फत गर्न चाहन्छन् ।[9] समुदायमा आधारित सहकारी संस्थाहरूमा मात्र अन्तर्राष्ट्रिय सहकारी महासंघले परिभाषित गरेको विशेषताहरू पाइन्छ र यस्ता संस्थाहरू नाफामुखी भन्दा सेवामुखी हुन्छन् ।[10] तसर्थ यस लेखमा समुदायमा आधारित सहकारी संस्थाहरूलाई मात्र समेटिएको छ ।

सहकारी व्यवस्थापनमा सहकारी ऐन २०४८ ले साधारण सभा, संचालक समिति, लेखा समिति, अन्य उपसमितिहरू र कर्मचारीहरूको काम कर्तव्य स्पष्ट पारेको छ । जसअनुसार साधारण सभाले संचालक समिति र लेखा समितिको चयन गर्दछ भने अन्य उपसमितिहरू गठन र कर्मचारीहरूको छनौट संचालक समितिले गर्दछ । संचालक समितिको नेतृत्व अध्यक्षले गर्दछ भने कर्मचारीहरूको नेतृत्व व्यवस्थापकले गर्दछ । प्रभावकारी नेतृत्व भएको सहकारी संस्थाको समिति, उपसमिति र कर्मचारीहरू सक्रिय तथा कामप्रति लगनशील हुन्छन् र संस्था आफ्नो लक्ष्य प्राप्तिमा सफल हुन्छ । अन्तर्राष्ट्रिय विकास र सहयोगका लागि क्यानाडेलि संस्था (CECI) ले गरेको अध्ययन अनुसार दीगो तथा सफल संस्थाको रूपमा स्थापना हुने परिकल्पना राखी समुदायको विश्वसनीय र आदरणीय ब्यक्तिले नेतृत्व गरेको सहकारीहरू अन्य सहकारी संस्थाको दाजोमा प्रभावकारी र सफल हुन्छन् । कुशल नेतृत्वले संस्थाको परिकल्पना (Vision) तयार गरी उक्त परिकल्पना प्राप्तिका लागि टिमलाई उत्प्रेरित गर्दछ । लघुवित्त केन्द्रले सन २००३ मा गरेको अध्ययनले पनि यसै कुरालाई पुष्टि गरेको थियो । तसर्थ प्रष्ट परिकल्पना भएको, सक्रिय र समुदायको विश्वसनीय व्यक्तिले सुरू गरेको संस्था सफल भएको पाइएको थियो ।[11] मेरो आफ्नो अनुभवमा समेत समुदायको विश्वसनीय व्यक्तिले नेतृत्व गरेको संस्थाहरू अन्य संस्थाहरूको दाजोमा सफल छन् ।

### १.३. अध्ययनको विधि

नेतृत्वको विशेषता वा गुणहरू मापन गर्ने नेपाली परिप्रेक्ष्यमा उपयुक्त अध्ययन विधि र सूचकहरूको उपलब्धता थिएन । नेतृत्वका गुणहरू मापन गर्ने सूचकहरू निर्माण गर्ने क्रममा मैले डेल्फाई विधि अन्तर्गत विभिन्न तरिकाहरू जस्तो सहकारी क्षेत्रका विधानहरू तथा नेतृत्व वर्गहरूसँग व्यक्तिगत अन्तर्वार्ता तथा सामुहिक छलफल गरेको थिएँ । अन्तर्वार्ता र छलफलबाट आएका

---

*6 GofFee and Jones, 2000; Yukl, 2006*
*7 Badaracco and Ellsworth, 1989; Bolden, Gosling, Marturano, & Dennison, 2003*
*8. Daft, 2014*
*9. International Cooperative Alliance*
*10. GIZ, 2014; Sharma, Simkhada &Sherqmha, 2006; Department of Cooperatives, 2015)*
*11. Zhang and Yuan, 2010 as cited in Garnevska et al., 2011*

सूचकहरूलाई अन्तर्राष्ट्रिय सूचकहरूसँग भिडाई अन्तिम रूप दिइएको थियो । यसरी अन्तिम रूप दिइएका सूचकहरू सहकारी क्षेत्रका विधान तथा नेतृत्व वर्गहरू समक्ष मापनका लागि पठाइएको थियो र मापनमा ७०% भन्दा बढी अंक भएका सूचकहरू राखि अरू हटाइएको थियो ।[12] छलफल तथा मापन विधिबाट कुशल नेतृत्वका दश विविध पक्षहरू अन्तर्गत ५६ वटा सूचकहरू निर्माण गरिएको थियो । यी सूचकहरूलाई समेटी प्रश्नावली/बुँदाहरू (statements) बनाइएको थियो । हरेक बुँदालाई १ देखि ५ सम्मका अंक (१. पूर्ण असहमत २. असहमत ३. ठीकै ठीकै ४. सहमत ५. पूर्ण सहमत) मा मापन गरिएको थियो । प्रश्नावलीहरू २५ वटा विभिन्न सहकारी संस्थामा गई परिक्षण गरिएको थियो । उक्त परिक्षणमा प्रष्ट नभएका शब्द र वाक्यहरूलाई प्रष्ट पारिएको थियो । प्रश्नावलीहरूलाई परिक्षण पश्चात सुधार गरी अन्तिम रूप दिइएको थियो र सूचना संकलनका लागि २१० वटा सहकारी संस्थाहरूमा पठाइएको थियो । प्रत्येक संस्थाबाट ६ जना सूचना दाताहरू (अध्यक्ष १, व्यवस्थापक १, संचालक २ र कर्मचारी २) छानिएका थिए । अध्यक्ष र व्यवस्थापकले आफ्नो नेतृत्वको गुणहरूको आफैले मापन गरेका थिए भने अध्यक्षको नेतृत्वको गुणहरूको मापन दुई जना संचालकले गरेका थिए भने व्यवस्थापको नेतृत्वको गुणहरूको मापन दुई जना कर्मचारीले गरेका थिए । नेतृत्वको गुणहरूको यसरी मापन गर्दा सन्तुलित बिचार आउने आशा गरिएको थियो ।

### १.४. सूचनाहरूको विश्लेषण र नतिजा

अध्ययनबाट संकलित सूचनाहरूलाई समाजिक विज्ञानका लागि तथ्याङ्क विधि (SPSS)[13] सफ्टवेयरको सहायताबाट विश्लेषण गरिएको थियो । संकलित सूचनाको विश्वसनीयता परिक्षण गर्न अल्फा कोफिसियन्ट (alpha coefficient) को विधि अपनाइएको थियो । कोफिसियन्ट सूचक ०.६७ भन्दा बढी आएमा त्यस्तो सूचनालाई भरपर्दो मानिन्छ ।[14] मेरो अध्ययनमा नेतृत्वका विभिन्न पक्षहरूको कोफिसियन्ट सूचक ०.७२ देखि ०.८९ सम्म थियो, जस्ले प्राप्त भएका सूचनाहरू भरपर्दा थिए भन्ने देखाउँछ । प्राप्त भएका सूचनाहरू भरपर्दा थिए भन्ने भए पश्चात, नेतृत्वका पक्षहरूको फ्याक्टर विश्लेषण (Factor analysis) विधि प्रयोग गरी सूचनाहरूको विश्लेषण गरिएको थियो । यस विधि अन्तर्गत कोफिसियन्ट सूचक ०.४० भन्दा बढी भएका र नेतृत्वका कुनै एक पक्षसँग मात्र सम्बन्धित सूचकहरूलाई मात्र सामाजिक विज्ञानका मान्यता वा अवधारणा मापन गर्ने उपयुक्त सूचकको रूपमा लिइन्छ ।[15] यस आधारमा नेतृत्वका गुणहरू मापन गर्ने सूचकहरूको विश्लेषण गर्दा जम्मा ४८ वटा सूचकहरू मध्य ४३ वटा मात्र स्पष्ट सूचकको रूपमा देखिएको थियो । फ्याक्टर विश्लेषण विधिबाट पत्ता लगाइएका नेतृत्वका गुणहरू मापन गर्ने पक्षहरूलाई त्यस अन्तर्गत रहेका सूचकहरूको आधारमा कूशल नेतृत्वका मुख्य चार पक्षहरूको नामाकरण गरिएको थियो[16] जस्मा (१) अनुकरणीय गुणहरू (role model) (२) टिमको सशक्तिकरण (Empowering the Team) (३) कामको आधारमा पुरस्कार (Performance based Rewards) (४) सहकारीको बारेमा ज्ञान (Knowledge Abou Cooperative) । कुशल नेतृत्वका यी चार गुणहरू तल चित्रमा देखाइएको छ ।

### कुशल नेतृत्वका चार गुणहरू




---

*12. Linqmone & Turoff, 2002;  Keeney, Hasson & McKenna, 2011*
*13. Statistical Package for the Social Science*
*14. Cohen, Manion & Morrison, 2007*
*15. Foster, Barkus & Yavorsky, 2006; Osborne & Costello, 2009*
*16. Yong & Pearce, 2013: Foster, Barkus and Yavorsky, 2006*

**१.४.१. अनुकरणीय (Role Model)**

नेतृत्वको गुणहरू मापन गरी संकलित सूचनालाई विश्लेषण गर्दा अनुकरणीय गुण प्रभावकारी नेतृत्वको महत्वपूर्ण गुणको रूपमा देखिएको थियो ।[17] अर्थात नेतृत्व प्रभावकारी बन्न ऊसँग अनुकरणीय गुणहरू हुनुपर्दछ वा उ समाजको उदारणिय व्यक्ति बन्नु पर्दछ । निम्न विशेषताहरूले नेतृत्वलाई अनुकरणीय बन्न सहयोग पुर्‍याउछ ।

१. सदस्यहरूमा संस्था प्रति अपनत्वको भावना बढाउन जोड दिने
२. व्यक्तिगत स्वार्थ त्यागी सस्थाको हितको लागि समर्पित हुने
३. संस्थामा भेदभाव रहित संस्कार स्थापना गर्ने
४. टिमका सदस्यहरू समक्ष आत्मविश्वासका साथ प्रस्तुत हुने
५. सस्थाको सरोकारवालाहरूसँग विस्वसनीय कायम राख्ने
६. संस्था संचालनमा एकलभन्दा टिमकार्यमा जोड दिने
७. निर्णय गर्दा नैतिक मूल्यमान्यताहरू तथा दीर्घकालमा पर्न जाने असर प्रति सदैव सचेत रहने
८. सस्थाको स्पष्ट परिकल्पना (Vision) तय गर्ने र सोको बारेमा टिममा जानकारी गराउने
९. सस्थाको साझा लक्ष्य प्राप्त गर्न सामुहिक भावनामा जोड दिने
१०. सस्थाको आचारसंहिताको पालना गर्ने र गराउने
११. आफना व्यवहार र कर्मबाट समाजको आदरणीय व्यक्ति बन्न अग्रसर रहने
१२. सदस्यहरूलाई नेतृत्वसँग सम्बन्धित हुदा गौरवान्वित महशुस हुने वातावरण सिर्जना गर्ने

अनुकरणीय गुण भएको नेतृत्व रूपान्तरणीय (Transformational) र दुर दृष्टि भएका हुन्छन् जसले आफ्ना असल गुणहरूबाट संस्थामा सकारात्मक परिवर्तन ल्याउन सफल हुन्छन् । यस्ता गुण भएका नेतृत्वले आफू उदाहरणीय बनी संस्थाले तय गरेका लक्ष्यहरू प्राप्तिका लागि वा देशको उन्नतीका लागि टिमका सदस्यहरूलाई उत्पेरित गर्दछन् ।[18] यस्ता नेतृत्व अरूलाई अर्ति दिने भन्दा पनि आफै उदाहरणीय बनेर देखाउने हुन्छन् ।[19] अनुकरणीय नेतृत्वले आफ्ना असल गुणहरू र व्यवहारहरूबाट सबैको मन जित्छन् । सबै मानिस यस्ता नेतृत्वसँग नजिक हुन चाहन्छन्, यस्ता नेतृत्व प्रेरणादायक हुन्छन् र यस्ता नेतृत्वले भनेको सबैले मान्छन् । शिक्षा, संस्कार आदि कुराहरूले कस्ता गुणहरू असल र अनुकरणीय हुन् र कस्ता होइनन् भन्ने निर्धारण गर्दछ ।[20] एउटा समाजमा अनुकरणीय गुण अर्को समाजका लागि अनुकरणीय नहुन सक्छ ।

**१.४.२. टिमको सशक्तिकरण (Empowering the Team)**

संस्थाले तय गरेका लक्ष्यहरू प्राप्ति गर्न नेतृत्व आफू मात्र उदाहरणीय बनेर पुग्दैन, उसलाई योग्य, सशक्त र उत्प्रेरित टिमको पूर्ण सहयोग चाहिन्छ ।[21] सफल नेतृत्व त्यो हो जसले सदैव टिमको क्षमता अभिवृद्धि र सशक्तिकरणका लागि कार्य गर्दछ । टिमको क्षमता अभिवृद्धि र सशक्तिकरण गर्ने नेतृत्वमा निम्न लिखित गुणहरू हुन्छन् ।

१. टिमका सदस्यहरूसँग सौहार्द सम्बन्ध कायम गर्ने
२. पुरागर्नु पर्ने लक्ष्यहरूको बारेमा उत्साहजनक तथा प्रेरक ढंगले टिममा छलफल गर्ने
३. टिमको क्षमता अभिवृद्धि र सक्तिकरणमा जोड दिने
४. टिमका प्रत्येक सदस्यहरूको विशेष क्षमता विकासमा जोड दिने
५. नविन र फरक विचारहरू व्यक्त गर्न टिमलाई प्रेरित गर्ने

---

*17. Northhouse, 2013*
*18. Zachariev, 2002, Pillai & Sivanandhan, 2015*
*19. Yukl, 2006; Pillai & Sivanandhan, 2015; Stephen Zaccaro , 2001*
*20. Green, 2018*
*21. Stone, Russell & Patterson, 2003*

६. वर्तमान मान्यता तथा काम गर्ने तौरतरिकाको बारेमा समालोचात्मक विश्लेषण गर्न टिमलाई उत्साहित गर्ने
७. नयाँ दृष्टिकोणहरूबाट समस्याहरूको विश्लेषण गर्न तथा नयाँ तौरतरिका र प्रविधि अवलम्बन गरी समस्याहरू हल गर्न प्रोत्साहित गर्ने
८. निर्णय कार्यमा टिमको सक्रिय सहभागिताको लागि प्रोत्साहित गर्ने
९. दोस्रो पुस्ताको नेतृत्व विकासको लागि पूर्बतयारीका साथ काम गर्न जोड दिने
१०. टिमको विचारहरू ध्यानपूर्वक सुनेर आफनो तर्कहरू साथ निर्णय दिने
११. समय र परिवेश सुहाउँदो नेतृत्व शैली अवलम्बन गर्ने

टिमको क्षमता अभिवृद्धि र सशक्तिकरण गर्ने नेतृत्वले नयाँ विचार र सोचलाई जोड दिने हुनाले नयाँ तौरतरिका र प्रविधि विकासमा मद्दत पुग्दछ । जुन प्रविधि र तरिकाले काममा प्रभावकारिता ल्याउन र उत्पादकत्व बढाउन मद्दत पुग्दछ । जुन संस्थामा एक्लो व्यक्ति हाभी हुन्छ वा सबै काम एक्लैले गर्ने प्रयास गरिन्छ, त्यस्तो संस्थामा नेतृत्वले प्रत्येक मुद्दामा पर्याप्त समय दिन नसक्दा संस्था असफल हुन सक्छ । तसर्थ सफल नेतृत्वले संस्थाको समिति उपसमिति का पदाधिकारी तथा हरेक तहमा कार्यरत कर्मचारीहरूको क्षमता अभिवृद्धि, सशक्तिकरण र नेतृत्व विकासका लागि प्रयाप्त स्रोत र साधन खर्चिनु पर्दछ ।[22] संस्थाको लक्ष्य प्राप्तिका लागि हरेक तहमा कार्यरत पदाधिकारी तथा कर्मचारीहरूले सक्रियतासाथ आ-आफ्नो भूमिका निर्वाह गरे मात्र सफलता हासिल गर्न सकिन्छ ।

टिमको सशक्तिकरण गर्ने र टिमका सदस्यहरूलाई उत्प्रेरित गर्ने एकै खाले तरिका सबैका लागि उत्तिकै प्रभावकारी नहुन सक्छ । कुनै पदाधिकारी र कर्मचारी हरू काम प्रति आफै लगनशील र जिम्मेवार हुन्छन् भने कसैलाई पटक पटक निर्देशन दिइरहनु पर्ने हुन्छ ।[23] आर्थिक सुविधा बढाएर कोही उत्प्रेरीत हुन्छन् भने कोही राम्रो व्यवहार बाट उत्प्रेरित हुने हुन्छन् । तसर्थ नेतृत्वले संस्था भित्र कसलाई कसरी सशक्तिकरण र उत्प्रेरित गर्ने भन्ने बुझ्नु पर्दछ र सोही अनुसार नेतृत्वको शैली अवलम्बन गर्नुपर्दछ ।

### १.४.३. कामको आधारमा पुरस्कार (Performance based Reward)

कामको आधारमा पुरस्कार वा राम्रो काम गर्नेलाई उचित पुरस्कार र नराम्रो काम गर्नेलाई दण्ड दिई मानव संसाधनको उचित परिचालन गर्ने प्रचलन धेरै पहिले देखिनै नेतृत्व र व्यवस्थापनमा प्रयोग हुँदै आएको हो । कामको आधारमा पुरस्कार वा दण्ड दिइ लक्ष्य प्राप्तिका लागि मानव संसाधन परिचालन गर्ने नेतृत्वको तरिकालाई बास (Bass) ले लेनदेनमा आधारित नेतृत्व (Transactional Leadership) भनी नामाकरण गरेका छन् । French & Raven (1959) ले प्रतिपादन गरेको नेतृत्व पावर सिद्धान्त (Power Theory of Leadership), नेतृत्व र टिमका सदस्य बिचको लेनदेन सिद्धान्त (Leader Member Exchange Theory) पनि कामको आधारमा पुरस्कार प्रदान गरी लक्ष्य प्राप्ति गर्ने नेतृत्वको सिद्धान्तसँग आधारित छ । कामको आधारमा पुरस्कार प्रदान गर्ने नेतृत्वमा निम्न विशेषताहरू हुनुपर्दछ वा त्यस्ता नेतृत्वले निम्न कार्यहरू गर्नु पर्दछ ।

१. सस्थाको लक्ष्य प्राप्त हुने गरी कर्मचारीहरूका सेवाका सर्तहरू (ToR) तोक्ने
२. कर्मचारी र पदाधिकारीहरूमा जिम्मेवारी र अधिकार प्रत्यायोजन
३. नीयमित अनुगमन गरी लक्ष्य र प्रगति को तुलना गर्ने
४. अनुगमनको सिलसिलामा गल्ती कमजोरीहरूका बारेमा ध्यान दिने
५. भए गरेका गल्ती कमजोरीहरूका अभिलेख राख्ने व्यवस्था मिलाउने
६. गल्ती सुधारका लागि समयमा नै सुझाव दिने
७. बजारको दर भन्दा कम नहुने गरी कर्मचारीहरूलाई सेवा सुविधा प्रदान गर्न प्रयासरत रहने
८. कामको आधारमा उचित सुविधा/ पुरस्कार दिने व्यवस्था गर्ने

---

*22. Bass & Riggio (2006)*
*23. Tichy, 2007; Yukl, 2006*

९.	तोकिएको लक्ष्य हासिल गर्न सफल कर्मचारी र पदाधिकारी प्रति सन्तुष्टि जाहेर गर्ने
१०.	सस्थाको लक्ष्य प्राप्तिका लागि बेलाबेलामा टिमको ध्यानाकर्षण गर्ने

राम्रो काम गर्ने कर्मचारीलाई उचित पुरस्कार र नराम्रो काम गर्ने लाई दण्ड दिने रणनीति सधैं प्रभावकारी नहुन पनि सक्छ । आफ्नो वृत्ति विकासको लागि मेहनत साथ काम गर्नेका लागि पुरस्कार र दण्ड भन्दा पनि दिर्घकालिन लक्ष्य प्राप्ति उत्पेरणाको महत्वपूर्ण स्रोत हुन्छ । त्यस्ता कर्मचारीका लागि नेतृत्वले पुरस्कार र दण्ड भन्दा पनि हौसला प्रदान गर्नु पर्दछ ।

**१.४.४. सम्बन्धित क्षेत्रको ज्ञान (Leadership skills)**

कुशल नेता बन्न प्राविधिक रूपमा दक्ष हुनु जरूरी छैन तर उसलाई सम्बन्धित क्षेत्रको वा आफूले नेतृत्व गर्ने क्षेत्रको बारेमा ज्ञान हुनु पर्दछ । अर्थात आफूले नेतृत्व गर्ने क्षेत्रमा आन्तरीक र बाह्य रूपमा के कस्ता चुनौती र अवसरहरू छन्, आगामी ५-१० वर्षमा संस्थाको दृष्टिकोण के हुने र सफलताको लागि के कस्ता रणनीति लिनुपर्दछ भन्ने वरेमा नेतृत्व स्पष्ट हुनु पर्दछ । सहकारी संस्थाको नेतृत्वमा निम्न लिखित ज्ञानहरू हुनु पर्दछ ।

१.	सहकारी सिद्धान्त, ऐन, नियम, विनियम र असल अभ्यासहरूको बारेमा ज्ञान
२.	समय सापेक्ष नीति, नियम, पद्धति, सेवाहरूमा सुधारगरी सदस्यहरूको आवश्यकताहरू पुरा गराउने क्षमता
३.	संस्थाको प्रगति मापन गर्ने वित्तीय र गैर वित्तीय सूचकहरू बारे जानकारी
४.	सम्बन्धित निकायहरूसँग सम्बन्ध कायम गरी स्रोत परिचालन गर्ने क्षमता
५.	समयमा नै द्वन्द्व व्यवस्थापन गर्न सक्षम

संस्थालाई प्रभावकारी रूपका अगाडि बढाउन प्रविधि, वित्त, मानव सं-साधन, व्यवस्थापन, बजार आदिमा दक्ष भएका कर्मचारी हरूको अवश्यक्रा पर्दछ । एउटै व्यक्ति वा नेतृत्व सबै कुरामा दक्ष हुनु सम्भव छैन । उसले दक्ष व्यक्तिहरू पहिचान गरी उनीहरूको सेवा प्राप्त गर्ने वतावरण बनाउनु पर्दछ । Certo & Certo (2006) ले प्रतिपादन गरेको सिद्धान्त अनुसार तल्लो तहको नेतृत्व प्रविधिक ज्ञानमा दक्ष हुनु पर्दछ भने बिचको तहको नेतृत्वमा (Middle-level Leadership) मानव सं-साधन, व्यवस्थापन बारेमा ज्ञान हुनु पर्दछ भने माथिल्लो तहको नेतृत्वमा (Top-level Leadership) संस्थाको अवधारणात्मक (Conceptual clarity) जस्तो ऐन, नियम, दृष्टिकोण, रणनीति, सम्बन्धित र सहयोगी निकायको बारेमा ज्ञान हुनु पर्दछ ।

**१.५. नेतृत्वको गुणहरू बिचको सम्बन्ध विश्लेषण (Correlations Analysis) र छलफल**

कुशल नेतृत्वको चार वटा गुणहरू बिचको सम्बन्ध विश्लेषण (Correlations Analysis) गर्दा एक आर्का बिचमा बलियो सम्बन्ध रहेको पाइयो (तालिका १)

**तालिका १**

**नेतृत्वको गुणहरू बिचको सम्बन्ध विश्लेषण (Correlations Analysis)**

| नेतृत्वको गुणहरू | नेतृत्वको गुणहरू र एक अर्काबिचको सम्बन्ध | | | |
|---|---|---|---|---|
| | अनुकरणीय | टिमको सशक्तिकरण | कामको आधारमा पुरस्कार | सम्बन्धित क्षेत्रको ज्ञान |
| अनुकरणीय | १ | | | |
| टिमको सशक्तिकरण | ०.८५८** | १ | | |
| कामको आधारमा पुरस्कार | ०.७३९** | ०.८३७** | १ | |
| सम्बन्धित क्षेत्रको ज्ञान | ०.६८७** | ०.७५८** | ०.७७२** | १ |

*** Correlation is signloicant at the 0.01 level (2-tailed)*

सम्बन्ध विश्लेषणको (Correlations Analysis) कोफिसियन्ट अंक ०.६ भन्दा बढी भएमा दुई तत्व बिचमा बलियो सम्बन्ध रहेको जनाउछ । तालिका १ मा देखाए अनुसार नेतृत्वका सबै गुणहरू बिचका सम्बन्ध ०.६ भन्दा बढी छ, यसर्थ एउटा गुण र अर्को गुण बिच बलियो सम्बन्ध छ एउटा गुणले अर्को गुण बढाउन मद्दत गर्दछ भन्ने जनउँदछ ।

नेतृत्वका चार विशेषताहरूः अनुकरणीय गुण, टिमका सदस्यहरूको सशक्तिकरण, कामको आधारमा पुरस्कार र सम्बन्धित क्षेत्रको ज्ञानको बारेमा परापूर्वक कालिन विधान तथा पौराणिक ग्रन्थहरूले समेत प्रकास पारेका छन् । नेतृत्वका चार गुण वा विशेषताहरू मध्य अनुकरणीय गुण पौराणिक ग्रन्थहरू र हालसालै प्रकाशित पुस्तक तथा अध्ययनहरूले समेत कुशल वा सफल नेतृत्वमा हुनुपर्ने महत्वपूर्ण गुणको रूपमा चित्रण गरेको छ । राजा ऋतेन विवाविर्धे भनेर वेदले भनेको छ । अर्थात राजा न्याय, सत्य र सत्मार्गमा हिडे मात्र सफल र लोकप्रिय बन्न सक्दछ ।  गीताले भनेको छः

*यद्यदाचरति श्रेष्ठस्तत्तदेवेतरो जनः ।*
*स यत्प्रमाणं कुरूते लोकस्तदनुवर्तते ।। ३.२१*

अर्थात, ठुलाले जे काम गर्छन् सर्वसाधारणले त्यही अनुसरण गर्छन् । यदि ठुला व्यक्ति वा नेतृत्व विश्वासनीय छन्, जे बोल्छन् त्यही पुऱ्याउछन् र उदाहरणीय छन् भने  नेतृत्वको यस्ता व्यवहारले सबैलाई असल काम गर्न प्रेरित गर्छ । संस्थामा अनुकरणीय गुण भएका नेतृत्वले आफ्ना असल व्यवहार र गुणहरूबाट टिमका सदस्यलाई तोकिएको लक्ष्य भन्दा बढी प्रगति हासिल गर्न उत्प्ररित गर्दछ ।[24] तसर्थ जुन संस्थामा अनुकरणीय नेतृत्व हुन्छ त्यस्तो संस्था प्रतिस्पर्धामा सँधै अगाडि हुन्छ र लक्ष्य प्राप्तिमा सदैव अगाडि हुन्छ ।

परापूर्व कालका प्रख्यात विधान चाणक्यद्वारा लिखित कौटिल्य अर्थशास्त्रले पनि नेतृत्व उदाहरणिय र अनुकरणीय हुनुपर्नेमा जोड दिइएको छ । उनको अनुसार राजा अर्थात नेतृत्व आफ्ना नैतिक, निस्वार्थ, विश्वसनीय जस्ता गुणहरूले जनता वा आफ्ना सदस्य प्रति उदाहरणीय वन्नु पर्दछ ।[25] चाणक्य जस्तै कन्फुसियसले नैतिक, निस्वार्थ, अनुकरणीय व्यक्ति देशको राजा भए मात्र देशको सम्पूर्ण जनता असल बन्दछन् भनेर भनेका छन् ।[26] उनको अनुसार सबैभन्दा असल र उदाहरणीय व्यक्ति देशको राजा हुनुपर्दछ । पूर्विय शास्त्रमा जस्तै पश्चिमा विधानहरू जस्तै म्यकिभेलियन (Machiavellin), शेक्सपियर (Shakespeare), ल्पेटो (Plato), भोल्तेयर (Voltaire), कार्ल मार्क (Karl Marx) जस्ता विधानहरूले पनि उदाहरणीय र अनुकरणीय व्यक्ति देशको राजा वा नेता वन्नु पर्ने कुरामा जोड दिएका छन् ।

नेतृत्व उदाहरणीय र  अनुकरणीय भए पनि यदि उसलाई सक्षम र उत्प्रेरित टिमको पूर्ण सहयोग छैन भने ऊ सफल हुन सक्दैन । तसर्थ नेतृत्वले आफ्नो टिमलाई तालिम भ्रमण आदिको माध्यमबाट सशक्त बनाए मात्र सफल बन्न सक्छ । सशक्त टिमले नयाँ नयाँ ढंगबाट समस्याहरूको समाधान गर्ने तरिकाहरू खोज्ने हुनाले यसले नयाँ तथा प्रभावकारी तौरतरिका आविश्कार गर्न समेत मद्दत गर्दछ ।[27] ज्ञान तथा प्रविधिमा छिटो छिटो परिवर्तन भइरहने वैज्ञानिक युगमा नेतृत्वले आफ्ना टिमलाई सधै सशक्त र सक्षम बनाई राख्नु पर्दछ ।[28] सहकारी संस्थाको सम्बन्धमा भन्ने हो भने, धेरै जसो संस्थामा तालिम प्राप्त र सक्षम संचालक, समिति र उपसमितिका पदाधिकारीहरू र कर्मचारीहरू नहुन सक्छ । यसर्थ सहकारी संस्थाका सम्पूर्ण टिमको क्षमता अभिवृद्धि गर्नुपर्ने हुन्छ ।  त्यस्तै गरेर सहकारी संस्थाको मुख्य उद्देश्य सदश्यहरूको समृद्धि हो । सो प्राप्तिका  लागि पनि सदश्यहरूको क्षमता अभिवृद्धि गर्नुपर्दछ । टिमको सशक्तिकरणको महत्व बारेमा गीतामा पनि महत्व दिइएको छ ।

*यस्मान्नोद्विजते लोको लोकान्नोद्विजते च यः ।*
*हर्षामर्षभयोद्वेगैर्मुक्तो यः स च मे प्रियः ।। १२.१५*

गीताको माथि उल्लेखित श्लोकमा भनिएको छ कि यदि संस्थाको सम्पूर्ण पदाधिकारीहरू र कर्मचारीहरू सशक्त र सक्षम भएमा जस्तोसुकै कठिन परिस्थिति पनि डटेर समाधान गर्न सकिन्छ । किनकि सशक्त र सक्षम व्यक्ति सुख दुखमा नआत्तिई सोच पुऱ्याएर काम गर्छ र सत्य कुरा बोल्न डराउदैनन् । जसले गर्दा संस्थाका कमी कमजोरीका बारेमा समयमा नै छलफल भई यसले संभावित दुर्धटना हुनबाट संस्थालाई बचाउन मद्दत गर्दछ । कन्फुसियसको अनुसार सच्चा नेतृत्वले आफ्ना टिम सदस्यलाई सधै उत्प्रेति र सशक्तिकरण गरी काम प्रति जिम्मेवार बनाई राख्छ जसले गर्दा नेतृत्व अनुपस्थिति हुँदा पनि उनीहरू मेहनत साथ काम गर्दछ ।

---

*24. Bass, 2008*
*25. Shamasastry, 2013; Pillai & Sivanandhan, 2015*
*26. Low & Zain, 2012*
*27. Baker, 2018*
*28. Thomas, 2006*

कामको आधारमा पुरस्कार प्रदान गर्न नेतृत्वले विधिको शासन र पारदर्शिता कायम गरी संस्थामा हरेक व्यक्तिले गरेको कामको लेखाजोखा र मूल्यांकन गर्ने परिपाटी बसाल्दछ ।[29] कामको सही मूल्यांकन हुन सकेन र गलत व्यक्तिलाई पुरस्कार दिइएमा यसको असर झन प्रत्यूपादक हुन्छ । त्यसको लागि हरेक कर्मचारीहरूलाई सेवाका सर्तहरू तोकि जिम्मेवारी पुरा गर्न अधिकार प्रत्यायोजन गर्नुपर्दछ र सम्पादन भएको कामको सही मूल्यांकन हुनु पर्दछ । कामको सही मूल्यांकन भए मात्र कर्मचारीहरू उत्पेरीत भई काममा दत्तचित्त हुन्छन् र सो को नतिजा पनि सही निस्कन्छ । कामको आधारमा पुरस्कार र असल नतिजाका लागि नेतृत्व र टिम सदस्य बिचको पारस्पारिक सम्बन्धको महत्व बारेमा गीताको श्लोक ३.११ भनिएको छः

*देवान्भावयतानेन ते देवा भावयन्तु वः ।*
*परस्परं भावयन्तः श्रेयः परमवाप्स्यथ ।। ३.११*

अर्थात देवता र मुनुष्य एक अर्काका सत्कर्मबाट लाभान्वित हुन्छन् । जसरी देवता र मुनुष्य एक अर्काका सत्कर्मबाट लाभान्वित हुन्छन् त्यसरीनै नेतृत्व वा संस्था र टिम सदस्य एक अर्काका असल कामबाट फाइदा लिन सक्छन् । कामको सही मूल्यांकन गरी पुरस्कार दिँदा कर्मचारीहरू उत्पेरित भई काममा लगनशील हुन्छन् जसले गर्दा संस्थाको अझ राम्रो नतिजा आउन सक्छ ।

सम्बन्धित क्षेत्रको ज्ञानले नेतृत्वलाई आफूले नेतृत्व गर्ने क्षेत्रमा के कस्ता समस्या, चुनौती र अवसरहरू विद्यमान छन् र आगामी दिनहरूमा केकस्ता रणनीति अबलम्वन गरेमा सफलता हासिल हुन्छ भन्ने जानकारी लिन मद्दत गर्दछ । सम्बन्धित क्षेत्रको नीति, नियम बारे जानकारीले सुशासनमा सहयोग पुऱ्याउछ साथै संस्थाको प्रगति मापन गर्ने सूचकहरू वारको जानकारीले संस्था सही गतिमा अगि बढे नबढेको थाहा हुन्छ । यसले सही निर्णय लिने कार्यमा सहयोग पुऱ्याउछ । मेहनत साथ असल काम गरेमा सम्बन्धित क्षेत्रको सही तथा भित्रि ज्ञान हासिल हुने कुरा गीताको श्लोक ३.८ मा भनिएको छः

*नीयतं कुरु कर्म त्वं कर्म ज्यायो ह्यकर्मणः।*
*शरीरयात्रापि च ते न प्रसिद्ध्येदकर्मणः ।। ३.८*

अर्थात कुशल नेतृत्वले मेहनत साथ सही कर्म गरी अरूको मन जित्छन् । असल कर्म र मेहनत मानिसको साथी हो भने अल्छी मानिसको शत्रु हो । असल कर्म र मेहनत साथ हासिल गरिएको ज्ञानको दुरगामी असर रहन्छ र त्यस्तो ज्ञान चिर काल सम्म रहिरहन्छ । गीताले जस्तै कौटिल्य अर्थशास्त्रले पनि असल कर्महरूबाट ज्ञान हासिल गरेका सीपयुक्त र चरित्रवान शिक्षकले अध्यापन गराएमा त्यस्तो देश सम्पन्न बन्छ भनेर भनेको छ ।

### १.६. सहकारी संस्थामा नेतृत्व विकासका लागि आगामी कार्यदिशा

यस अध्ययनले देखाए अनुसार सहकारी संस्थाको सफलताको लागि नेतृत्वकर्तामा चार विशेषता वा गुणहरूः अनुकरणीय वा उदाहरणिय, टिमका सदस्यहरूको क्षमता विकास रसशक्तिकरण, कामको आधारमा पुरस्कार र सम्बन्धित क्षेत्रको ज्ञान हुनु पर्दछ । सहकारी संस्थाको मुख्य उद्देश्य भनेको सदस्यहरूका आर्थिक, सामाजिक तथा सांस्कृतिक आवश्यकताहरू पुरा गरी उनीहरूको सामाजिक तथा आर्थिक रूपान्तरण हो । सहकारी आन्दोलन आजका दिनसम्म आईपुग्दा सहकारीको महत्व सम्बन्धी जनचेतना, संस्थागत विकास र वित्तीय दीगोपनका क्षेत्रमा उल्लेखनीय उपनब्धि हासिल गर्न सकेता पनि सदस्यहरूका आर्थिक तथा सामाजिक रूपान्तरणका लागि उल्लेखनीय प्रगति हासिल गर्न सकेको छैन । तसर्थ सहकारी संस्थाको नेतृत्व लिएका सम्पुण टिमले (अध्यक्ष, व्यवस्थापक, संचालक र कर्मचारीहरू) संस्थाको उद्देश्य प्राप्तिका लागि नेतृत्वका यी चार गुणहरूको विकास गर्दै सदस्यहरूका सामाजिक तथा आर्थिक रूपान्तरणका लागि कार्य गर्नुपर्दछ । त्यसो गर्न सकेमा मात्र अर्थतन्त्रको ३ खम्बे नीति र राज्यको निर्देशक सिद्धान्तको परिकल्पना अनुसार सहकारीलाई गरिबीमूखि र सदस्यहरूको आर्थिक र सामाजिक रूपान्तरण को एक भरपर्दो सहयात्रीको रूपमा लिन सकिन्छ ।

नीजि तथा सरकारी क्षेत्रले मात्र गरिबी निबारण तथा सदस्यहरूको आवश्यकता पुरा हुन सक्ने नदेखिएको हुनाले सहकारी आन्दोलनको बिजारोपण भएको हो । सहकारी आन्दोलनको सफलताको लागि सहकारी संस्था तथा संघहरूले सहकारी सिद्धान्तहरूको साथसाथै सहकारीका आधारभुत मूल्य र मान्यताहरू जस्तै निश्पक्षता, समानता, इमान्दारिता, स्वावलम्बन, सामाजिक दायित्व आदिको पालना गर्नु पर्दछ । सहकारीका सिद्धान्त, मूल्य र मान्यताहरूको पालना गर्नु गराउनु नेतृत्वको दायित्व हो । सदस्यहरू तथा सर्वसाधरण जनतालाई सहकारीका सिद्धान्त, मूल्य र मान्यताहरूको पाठ पढाउनु भन्दा पहिले

---

*29. Thomas, 2006*

नेतृत्वकर्ताले आफ्नो व्यवहारमा यी मूल्य र मान्यताहरूको पालना गर्नु पर्दछ । अनि मात्र नेतृत्वकर्ता प्रति वा नेतृत्वकर्ताले व्यक्त गरेको बिचार प्रति सदस्यहरूले सहमति जनाउदछन् । यसका लागि नेतृत्वकर्तासँग माथि उल्लेखित नेतृत्वका चार गुणहरू हुनुपर्दछ । तसर्थ सहकारी संस्थाको नेतृत्व लिएका सम्पुण टिमले माथि उल्लेखित नेतृत्वका चार गुणहरू र प्रत्येक गुणहरू अन्तर्गतका सूचकहरूको पालना भए नभएको समिक्षा गरी नेतृत्व विकासका लागि तालिम, सेमिनार, भ्रमण जस्ता कार्यहरू संचालन गर्नु पर्दछ ।

## २. उद्यमशीलता र आर्थिक रूपान्तरणका लागि नेतृत्वको भूमिका

### २.१. गरिबी निवारणमा विगतमा भएका प्रयास तथा उपलब्धीहरु

सरकारी तथा गैह्र सरकारी क्षेत्रहरूबाट तथा र सरकार र दाताहरूको सहकार्यमा गरिबी निवारणका लागि थुप्रै कार्यक्रमहरू सञ्चालन हुँदै आएका छन् । सरकारी क्षेत्र बाट महीला विकास कार्यक्रम, गरिबसँग विश्वेश्वर, विकेन्द्रिकृत स्थानीय साशन कार्यक्रम, गरिबी निवारण कोष, युवा स्वरोजागर कोष, ग्रामिण स्वावलम्बन कोष, प्रधानमन्त्री स्वरोजगार कार्यक्रम, अति गरिब परिवारका लागि सामाजिक सुरक्षा तथा स्वरोजगार कार्यक्रम संचालित छन् भने गैह्र सरकारी क्षेत्रहरू (NGOs/INGOs) बाट साना ठुला गरी अनगिन्ति कार्यक्रमहरू सञ्चालित छन् । त्यस्तै सहकारी संस्थाहरूको सेवा हरेक स्थानीय निकायसम्म पुगेको छ । राष्ट्रिय योजना आयोगले तयार पारेको पन्ध्रौं योजनाको आधार पत्र अनुसार गरिबीको संख्या घटेर १८.७ प्रतिशतमा झरेको छ । गरिबीको संख्या घट्नुमा कुन कार्यक्रमको कति योगदान छ, गरिबी घटाउन कुन कार्यक्रमहरू प्रभावकारी थिए र यसमा बिप्रेषणको कति योगदान छ भन्ने यकिन नभएता पनि गरिबी घट्नुमा सबैको केहीन केही योगदान अवश्य रहेको छ । गरिबी निवारणका लागि सरकार, सहकारी, निजी तथा गैरसरकारी संस्थाहरूबाट यति धेरै कार्यक्रम सञ्चालन हुँदा पनि गरिबीको संख्या भने उल्लेखनीय रूपमा घट्न सकेको छैन ।

संयुक्त राष्ट्र संघको दीगो विकास लक्ष्यले सन् २०३० सम्ममा गरिबीको अन्त्य गर्ने उद्देश्य लिएको छ । दीगो विकास लक्ष्यलाई समेटदै राष्ट्रिय योजना आयोगले पन्ध्रौं योजनाको आधारपत्र तयार गरेको छ जसमा दीगो विकास लक्ष्य हासिल गर्ने र मध्यम आय भएको मुलुकमा पुग्ने प्रतिवद्धता व्यक्त गरिएको छ । यो लक्ष्य भेट्टाउन गरिबी निवारणविना सम्भव छैन । गरिबीको संख्या सुगम स्थानहरूमा भन्दा दुर्गम क्षेत्रहरूमा धेरै रहेको पुष्टयाई अध्ययनहरूले देखाएको छ । सरकारी र गैह्र सरकारी निकायहरूबाट संचालित कार्यक्रमहरू एकातर्फ प्रभावकारी ढंगबाट दुर दराज सम्म पुग्न सकेको छैन भने अर्को तर्फ यस्ता कार्यक्रमहरू दीगो रूपमा संचालन हुन पनि सकेका छैनन् । यस्ता कार्यक्रमहरूमा समुदायको सहभागिता र संस्थागत विकास नहुनाले दीगो रूपमा संचालन हुन सकेनन् । अर्कोतर्फ नेपालको सहकारी अभियानको हालसम्मको अनुभवलाई नीयाल्ने हो भने यस क्षेत्रले दुर दराज सम्म सेवा पुऱ्याउनुका साथसाथै सहकारी संस्थाहरू आफ्नै स्रोत परिचालन गरी दीगो रूपमा संचालन भएका छन् । तर नेपालको सहकारी अभियानलाई मध्यम वर्गसँग मात्र काम गरेको र सदश्यहरूको रोजगारी प्रवर्द्धन र आर्थिक रूपान्तरण भन्दा पनि नाफा मुखि भएको आरोप लाग्ने गरेको छ । यदि सहकारी संघ संस्थाहरूले आफुलाई अर्थतन्त्रको ३ खम्बा मध्य महत्वपूर्ण खम्बाको रूपमा स्थापित बनाउने हो भने गरिबीको रेखामुनि रहेको समुदायलाई सेवा पुऱ्याउनुका साथसाथै रोजगारी प्रवर्द्धन र सदश्यहरूको आर्थिक रूपान्तरणमा योगदान पुग्ने खालको कार्यक्रम संचालन गर्नुपर्ने हुन्छ ।

### २.२. सहकारी मार्फत सदस्यहरुको उद्यमशीलता विकास र आर्थिक रुपान्तरण

राष्ट्रिय रूपमा सहकारी अभियानको योगदान लाई केलाउने हो भने (३४,५०० प्रारम्भिक संस्थाहरू र संघहरू) यस्ले राष्ट्रिय रूपमा ग्रामिण पूँजी निर्माणमा उल्लेख्य योगदान पुऱ्याउनुको साथसाथै वित्तीय र सांगठनिक रूपमा दीगो संस्थाको विकास समेत गरेको छ । दोलखा जिल्लाको सहकारी अभियान नीयाल्ने हो भने यसले जिल्लाको ग्रामिण लगायत अन्य भेगमा वित्तीय पहुँच पुऱ्याउनमा अतुलनीय योगदान गरेको छ । तथापी वर्तमान अवस्था जिल्लाको मुख्य आवश्यकता वित्तीय पहुँच मात्र नभई रोजगारी सिर्जना, उत्पादन तथा उत्पादकत्वमा अभिवृद्धि, उपलब्ध प्राकृतिक स्रोतको उच्चतम सदुपयोग गर्नु हो । विभिन्न उद्देश्यका साथ सहकारी स्थापना गरिए तापनि केही सहकारी बाहेक अधिकांश सहकारी संस्थाले बचत तथा ऋणलाई नै आफ्नो मुख्य उद्देश्यका साथ संस्था सञ्चालन गरिरहेको अवस्था रहेको छ ।

प्रभावकारी तथा गरिबीमुखि सहकारी अभियान मार्फत दीगो विकास लक्ष्य प्राप्तिका लागि नेतृत्वले तीन पक्षहरूलाई साथसाथै लैजानु पर्दछः (१) वित्तीय र सांगठनिक रूपमा दीगो संस्थाको विकास (२) सहकारी सेवामा गरीबहरूको पहुँच (३)

सदस्यहरूको जीवनमा सकरात्मक परिवर्तन अर्थात सदस्यहरूको आर्थिक र समाजिक रूपान्तरणका लागि वित्तीय तथा गैह्र वित्तीय सेवाहरू प्रदान । यसका लागि सहकारी संस्थाहरूले एकातिर कार्यक्षेत्रका सम्पूर्ण घर धुरीलाई संस्थामा आवद्ध गरी सेवाको पहुँच विस्तार गर्नु पर्दछ भने अर्को तर्फ अति गरिबी समुदायलाई गरिबी रेखा माथि उठाउन वित्तीय तथा गैह्र वित्तीय सेवाहरू प्रदान गर्नुका साथसाथै विशिष्ट खालको कार्यक्रम हरू संचालन गर्नु पर्दछ । जस्सलाई चित्रमा निम्न अनुसार देखाइएको छ ।




माथि चित्रमा देखाए अनुसार समुदायमा वा सहकारीको कार्यक्षेत्र भित्र सामन्यतया तीन प्रकारका व्यक्तिहरू हुन्छन् । सहकारी संस्थाले चरम गरिबीको रेखामुनि रहेको समुदायलाई (विन्डो–१) समेट्न विशिष्ट खालको कार्यक्रमहरू जस्तो वित्तीय साक्षरता, सीप विकास, अनुदान सहयोग बनाई कार्यान्वयन गर्नु आवश्यक छ । यसका लागि सहकारी संस्था सँग भएको स्रोत अपुग हुन सक्छ र संस्थाले स्थानीय, प्रदेश र केन्द्रिय सरकार सँग सहकार्य गरी गरिबी घटाउने अभियानलाई अगाडी बढाउनु पर्दछ ।

सहकारी अभियानले सांगठनिक विस्तार र बचत परिचालनको क्षेत्रमा उल्लेखनीय योगदान पुऱ्याए पनि गरिबी निवारण तथा आर्थिक सामाजिक समृद्धिमा अपेक्षाकृत नतीजा हासिल गर्न सकेको छैन ।[30] सहकारी अभियानलाई मध्यम वर्गसँग मात्र काम गरेको आरोप लाग्ने गरेको छ । सहकारीका क्रियाकलापहरूको सघनता उत्पादन तथा स्वरोजगारको क्षेत्रमा नभई बचत तथा ऋणको कारोबारमा बढी देखिएको छ ।[31] सहकारी मार्फत निर्माण भएको पूँजीलाई उत्पादनमूलक उद्योगमा लगानी गरी रोजगारी र स्वरोजगारीको सिर्जना, आयात प्रतिस्थापन र नीर्यात वृद्धि गरी दीगो आर्थिक विकासमा योगदान पुऱ्याउनु आजको आवश्यकता हो । तसर्थ मध्यम वर्गिय सदस्यलाई उद्यम विकासका तालिम तथा सहयोग प्रदान गरी यस्ता सदस्यलाई क्रमसः उद्यमी सदस्यमा रूपान्तरण गर्नु पर्दछ । यसर्थ नेतृत्वले माथि उल्लेखित तीनै प्रकारका सदश्यहरूलाई साथसाथै लगे मात्र सहकारीको दीगो विकास हुनुको साथै संस्थाले सहकारीको सिद्वान्त अनुरूप सदस्यहरूको आर्थिक विकास र सामाजिक सशक्तिकरण लागि योगदान पुऱ्याउन सक्छ ।

सहकारी क्षेत्रले विशेषतः गरीब तथा मध्यम वर्गीय जनताको आर्थिक विकास र सामाजिक सशक्तिकरणका क्षेत्रमा पुऱ्याउन सक्ने योगदानलाई मध्यनजर गर्दै नेपालको राष्ट्रिय अर्थतन्त्रको ३ खम्बे नीति (सार्वजनिक, निजी, सहकारी) र राज्यको निर्देशक सिद्धान्तमा सहकारीलाई महत्वपूर्ण स्थान दिएको छ । यदि सहकारी अभियानलाई गरिबीमूखि र सदस्यहरूको आर्थिक र सामाजिक रूपान्तरण को सहयात्रीको रूपमा अघि नबढाउने हो भने अर्थतन्त्रको ३ खम्बे नीति र राज्यको निर्देशक सिद्धान्तको परिकल्पना पुरा नहुन सक्छ । तसर्थ सहकारीलाई ग्रामिण विपन्न समुदायसम्म विस्तार तथा उद्यमशीलता विकास गरी संविधानले निर्दिष्ट गरेअनुसार मुलुकको समृद्धिको आधारको रूपमा सहकारीलाई स्थापित गराउनु आजको आवश्यकता हो ।

### २.३. उद्यमशीलता विकास र आर्थिक रुपान्तरणका रणनीति र क्रियाकलापहरु

सहकारी मार्फत उद्यमशीलता विकास र आर्थिक रूपान्तरणका लागि तालिका–२ मा उल्लेखित रणनीति र क्रियाकलापहरू तय गरी कार्यान्यन गर्नु पर्दछ ।

*30. Concept note of cooperative summit of Dolakha, 2019*
*31. National Planning Commission, 2019*

तालिका– २

## उद्यम विकासका रणनीति र क्रियाकलापहरू

| रणनीति | क्रियाकलाप |
|---|---|
| विपन्न वर्गको आर्थिक तथा सामाजिक सशक्तीकरण | १. सहकारीका कार्यक्षत्र भित्र बसोबास गर्ने विपन्न वर्गको सम्पूर्ण घर परिवारलाई संस्थामा आवद्ध गराउन सहकारी शिक्षा तथा अन्य विविध कार्यक्रमहरू संचालन गर्ने ।<br>२. सहकारी संस्थाका सदस्यको रूपमा आवद्ध भए पश्चात वित्तीय साक्षरता र सीप विकास तालिम प्रदान गर्ने ।<br>३. अति विपन्न परिवारलाई आयआर्जन कार्यक्रम संचालन गर्न बीऊ पुंजी वा पुंजीगत अनुदान उपलब्ध गराउने ।<br>४. उत्पादित वस्तुको बजारीकरण गर्ने ।<br>५. आम्दानी र खर्चको सही व्यवस्थापन गरी नीयमित बचत भए नभएको अनुगमन गर्ने र वित्तीय साक्षरता सम्बन्धी पुनर्ताजकी तालिम दिने । |
| सहकारी व्यवसाय मार्फत कृषिको रूपान्तरण<br><br>व्यवसायिक कृषि प्रवर्द्धन | १. सहकारीको माध्यमबाट ठूलो आकारको एकीकृत खेती गरी कृषिलाई आधुनिकीकरण गर्ने र व्यवसायिक रूपमा कृषि उत्पादन, प्रशोधन गर्ने ।<br>२. सहकारी मार्फत सञ्चालन हुने कृषि उत्पादन, प्रशोधन, भण्डारण, आदि आयोजनाका लागि तीनै तहका सरकार मार्फत वित्तीय तथा प्राविधिक सहयोग उपलब्ध गराउने ।<br>३. सहकारी उद्मम र कृषि मूल्य श्रृखला विकास तथा नीर्यातमूलक वस्तु उत्पादन सम्बन्धी अन्तर्राष्ट्रिय असल अभ्यासहरू अवलम्बन गर्ने ।<br>४. एक सहकारी/एक वडा एक उद्मम को कार्यक्रम हरेक स्थानीय तहमा लागु गर्ने ।<br>५. युवा तथा नमुना कृषकहरूलाई व्यवसायिक रूपमा कृषि तथा पशुपालनमा संलग्न गराउन बैंकहरू सँग साझेदारी गरी सहुलियत कर्जा र आवश्यक तालिम उपलब्ध गराउने र उक्त सहुलियत कर्जा सहकारी उद्यमहरूमा समेत उपलब्ध गराउन पहल गर्ने ।<br>६. सहकारी, व्यवसायिक कृषक र प्राइभेट फर्म/डिपार्टमेन्टल स्टोर बिच सम्झौता गरी कन्ट्र्याक्ट फार्मिङको अवधारणालाई अगावड बढाउने ।<br>७. सहकारी र व्यक्तिगत उद्मममहरू बाट उत्पादित वस्तुहरूको सहकारी मार्फत बजारीकरण गर्ने । |

## २.४. उद्यम विकासका संभावित नमूनाहरु




गाई फार्म (व्यवसायिक कृषक वा पशुपालन समुह)

**नमूनाहरू**

१. जिल्ला सहकारी संघबाट संचालित व्यवसाय
२. सहकारी संस्थाबाट संचालित व्यवसाय
३. दुई वा सो भन्दा बढी सहकारी संस्थाहरू मिलि संचालित व्यवसाय
४. संघ, संस्था र सदस्य मिली संचालित व्यवसाय
५. उद्यमी कृषक सदस्य वा सदस्यहरू मिलि संचालित व्यवसाय
६. सहकारी र निजी क्षेत्र बिच साझेदारी व्यवसाय, कन्ट्र्याक्ट फार्मिङ वा अन्य सहकार्य

## २.५. दोलखा जिल्लाको संभावित उद्यमहरु

प्राकृतिक श्रोत तथा जल सम्पदामा धनी तथा प्रचुर सम्भावना बोकेको जिल्लाको कुल क्षेत्रफलमध्ये ४७.३७ प्रतिशत जमिन वन क्षेत्रले ओगटेको छ भने कुल जमिनमध्ये २६.४५ प्रतिशत जमिन खेतीयोग्य जमिन रहेको छ ।[32] कुल वन क्षेत्र १,०१,५०० हेक्टर मध्ये ६१,९२५ हेक्टर (६१ प्रतिशत) सामुदायिक वन रहेका छन् । दोलखामा गैरकाष्ठ वन पैदावारहरूको संकलन तथा प्रशोधन बाट उद्यम विकास र आयआर्जनमा महत्वपूर्ण भूमिका खेल्न सक्ने देखिन्छ । जिल्लाको उत्तरी गाउँपालीका (कालीञ्चोक, बिगु, गौरीशंकर) हरूमा प्रचुर मात्रामा बहुमूल्य गैरकाष्ठ जन्य वन पैदावार (मच्छिनो, खोटो, झ्याउ, लोक्ता, चिराँइतो, अल्लो, अर्गेली, नागबेली, लौठ सल्ला, मजिठो) खेर गइरहेको तथा सीमित मात्रामा निकासी भएका त्यस्ता वन पैदावार पनि अधिकांश कच्चा पदार्थको रूपमा नै निकासी भइरहेको अवस्था रहेको छ । यी वन पैदावारहरूको संकलन तथा प्रशोधन बाट रोजगारी र आयआर्जनमा महत्तवपूर्ण भूमिका पुग्न जान सक्छ । जिल्ला वन कार्यालयको तथ्यांक अनुसार यस्ता वन पैदावार वार्षिक २,३८,३३३ केजीसम्म निकासी भएको देखिन्छ । जिल्लाबाट वार्षिक रूपमा लगभग २० करोडको आलु, अलैंची, हरियो तरकारी, छुर्पी तथा चीजलगायतका कृषिजन्य उत्पादनहरूको निकासी हुने गरेको देखिन्छ ।

जिल्लामा फलफूल खेती, गाई तथा बाख्रापालन, चौंरी पालन तथा छुर्पी र चीज लगायतका उत्पादनहरू, नेपाली कागज तथा यसका उत्पादन, बेतवासका सामाग्रीहरू, अल्लोको कपडा तथा धागो, भेडापालन, र्‍याफ्टीङ्, पर्यटन केन्द्रित होटल, आलु खेति सम्बन्धी उत्पादनहरू प्रवर्धन गरे जिल्लाले झेल्दै गरेको बेरोजगारी, खाद्यन्न अभावलगायतका समस्यालाई सम्बोधन गर्नुका साथै जिल्लाको आर्थिक रूपान्तरणमा टेवा पुग्ने देखिन्छ । घरेलु तथा साना उद्योग सम्बन्धमा आ.व. २०७४/०७५ सम्म १७६० वटा व्यवसाय दर्ता भएको पाइन्छ । जसमा ९५ प्रतिशत Off Farm व्यवसाय छन् भने ५ प्रतिशत कृषिमा आधारित व्यवसाय देखिन्छन् । जिल्लामा विभिन्न उद्यमहरू (कोसेली घर, कृषि तथा पशु फर्म, उपभोक्ता पसल, दुग्ध उत्पादन, बिउ विजन भण्डारण तथा बिक्री वितरण) सञ्चालनमा छन् ।

कृषिमा आधारित व्यवसायहरू बढी असफल देखिएका छन् । विशेष गरी कृषिजन्य व्यवसाय दर्ता गर्नुको प्रमुख उद्देश्य सरकारी तथा अन्य दातृ निकायबाट सहयोग प्राप्त गर्ने हेतुले मात्र भएको देखिन्छ । यसका अलावा कृषिमा आधारित व्यवसायमा भण्डारण तथा ढुवानी, स्थानीय स्तरमा प्रशोधन तथा संरक्षण, वस्तुको गुणस्तर व्यवस्थापन तथा स्तरीकणको ज्ञानमा कमी, कृषिजन्य सामाग्रीको (बिउ, मल, विषादी, प्रविधिको) सहज उपलब्धतामा कठिनाइ, प्राविधिक ज्ञान तथा प्राविधिकहरूको कमी, बजार तथा बजार माग सम्बन्धी जानाकारीमा कमी जस्ता समस्याहरू देखिन्छन् । असफल हुनुका मुख्य कारण भनेको कमजोर व्यवस्थापकीय तथा लेखा प्रणाली, विषयगत क्षेत्रमा आवश्यक ज्ञानको अभाव देखिएको छ ।

## २.६. उद्यम विकासका आगामी कार्यदिशा

### २.६.१. सहकारी वा दुई वा सो भन्दा बढी सहकारी संस्थाहरूको साझेदारीमा संचालित उद्यम

सहकारी उद्यम संचालनका लागि सर्व प्रथक संभाव्यता अध्ययन गर्नु पर्दछ । संभाव्यता अध्ययन अन्तर्गत प्राधिधिक पक्ष, व्यवस्थापन पक्ष, वित्तीय पक्ष, बजार व्यवस्थापन आदि पक्षहरूको बारेमा गहिरो अध्ययन गर्नु पर्दछ । प्राधिधिक पक्ष अन्तर्गत कच्चा सामाग्री तथा सीपयुक्त जनशक्तिको उपलब्धता प्रयाप्त छ छैन ? उपयुक्त प्रविधिको उपलब्धता छ छैन ? उत्पादनको

32 दोलखामा सहकारी उद्यमशीलताः वर्तमान अवस्था र भविष्यको बाटो, सुमन

गुणस्तर कस्तो हुन्छ ? हालको वस्तुको माग, भविष्यमा माग वृद्धिको संभाबना के छ ? हावापानी वा मौसमको हिसाबले उपयुक्र छ छैन ? वातावरणमा के प्रभाव पर्दछ ? कारखाना सञ्चालन स्थान र अन्य जोखिमको लेखाजोखा गरिएको छ छैन ? (प्रतिकूल मौसम, प्रविधिमा परिवर्तन, ग्राहकको आवश्यकता परिवर्तन, रोग लाग्नु, बजार भाउ घट्ने, सरकारको नीति परिवर्तन) स्थानीय समुदाय तथा अति विपन्न वर्गलाई सहयोग पुग्छ पुग्दैन ? समुदायलाई फाइदा छ छैन ? (कच्चा सामान बिक्रीर्क्रा र त्यसको मूल्य अहिले रोजगारी पाइरहेका व्यक्ति संख्या र भविश्यमा रोजगारी पाउने संख्या) आदि बारे अध्ययन गर्नु पर्दछ । व्यवस्थापन पक्ष अन्तर्गत सञ्चालकको सीप र प्रतिवद्धता, कर्मचारीको सीप र प्रतिवद्धता आदि बारे अध्ययन गर्नु पर्दछ । वित्तीय पक्ष अन्तर्गत लगानीको खर्चका हिसाबले संभाव्य छ छैन ? खर्चको प्रभावकारीता र मूल्य, वित्तीय सक्षमता, गुणस्तर सुधारको संभावना र मूल्य वृद्धि आदि बारे अध्ययन गर्नु पर्दछ । बजार व्यवस्थापन अन्तर्गत माग र आपूर्तिको अवस्था र बजार विस्तार र वृद्धिको संभावना, अहिलेका र पछि हुनसक्ने प्रतिस्पर्धीहरू, ग्राहकहरूसँगको सम्बन्ध र इमान्दार ग्राहकको संख्या, नियमन निकायहरूसँगको सम्बन्ध र सहयोगी संस्थाहरू, बिक्री व्यवस्थापन, विज्ञापन-वितरण प्रणाली बिक्रेताहरू (थोक तथा खुद्रा), विज्ञापन - टि.भी., पत्रपत्रिका, बजार प्रतिनिधिहरू, व्यक्तिगत बिक्री, बजार प्रतिनिधिहरू आदि बारे अध्ययन गर्नु पर्दछ ।

माथि उल्लेख भए अनुसार प्राधिधिक, व्यवस्थापन, वित्तीय, बजार व्यवस्थापन आदि पक्षहरूको बारेमा गहिरो अध्ययन गरी सके पश्चात सबलपक्षहरू, अवसरहरू, कमजोरहरू अर्थात् सुधार गर्नुपर्ने पक्षहरू र बाधाहरू अथवा अवाकस विश्लेषण गर्नु पर्दछ । अवाकस विश्लेषणको आधारमा उद्यम संचालनका लागि तालिका ३ उल्लेखित क्रियाकलापहरू तर्जुमा गरी कार्यान्वयनका लागि कार्ययोजना बनाउनु पर्दछ जुन तल दिइएको छ ।

**तालिका-३ः सहकारी उद्यम विकासका कार्ययोजना**

| क्रियाकलाप | समयतालिका | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| | २ | ३ | ४ | ५ | ६ | ७ | ८ | ९ | १० |
| संभाव्यता अध्ययन र व्यवसायिक योजना तर्जुमा | | | | | | | | | |
| पूँजी व्यवस्थापन | | | | | | | | | |
| कर्मचारहरूको व्यवस्थापन | | | | | | | | | |
| उत्पादन | | | | | | | | | |
| बजार व्यवस्थापन | | | | | | | | | |
| वित्तीय विश्लेषण | | | | | | | | | |
| अनुसन्धान र सुधार | | | | | | | | | |

### २.६.२. व्यक्तिगत उद्यम

व्यक्तिगत उद्यम प्रवर्द्धन गर्न सहकारी संस्थाको ऋण तथा अन्य नीतिलाई सशोधन गर्दै उद्यम मैत्री ऋण नीति अवलम्बन गर्नुका साथसाथै सञ्चालक, कर्मचारी तथा सदस्यहरूलाई उद्यमशीलता तथा व्यावसायिक योजना सम्बन्धी तालिम आयोजना गर्नु पर्दछ । साथै सदस्यहरूद्वारा उत्पादित वस्तुको बजारीकरणका लागि सहकारी संस्थाले कृषि वस्तुको मूल्य शृंखलामा लगानी अभिवृद्धि तथा बजार व्यवस्थापन गर्नु पर्दछ । सहकारी संस्थाको सहकारी सदस्यहरूको उद्यमशीलता विकास लागि तालिका ४ मा उल्लेखित कार्यहरू गर्नु पर्ने देखिन्छ ।

**तालिका- ४ः सदस्यहरूद्वारा व्यक्तिगत रूपमा संचालन हुने उद्यम विकासका कार्ययोजना**

| क्रियाकलाप | समयतालिका | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| | २ | ३ | ४ | ५ | ६ | ७ | ८ | ९ | १० |
| संभाव्यता अध्ययन (१ सहकारी १ पकेट क्षेत्र कार्यक्रम सञ्चालन) | | | | | | | | | |
| सम्भावित व्यवसायीको सदस्यहरूको छनौट | | | | | | | | | |

| क्रियाकलाप | समयतालिका | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| | २ | ३ | ४ | ५ | ६ | ७ | ८ | ९ | १० |
| व्यवसायिक योजना तर्जुमा तालिम | | | | | | | | | |
| ऋण लगानी | | | | | | | | | |
| कृषि तथा पशु बीमा, एग्रोभेट र उन्नत बिउ बिजन, प्राविधिक सेवा प्रदान | | | | | | | | | |
| उत्पादन | | | | | | | | | |
| बजार व्यवस्थापन (पालिका स्तरीय संकलन केन्द्र स्थापना) | | | | | | | | | |
| समन्वय तथा सहकार्य (जिल्ला तथा केन्द्रीय संघ, निजी क्षेत्र, गैसस) | | | | | | | | | |
| वित्तीय विश्लेषण | | | | | | | | | |
| अनुसन्धान र सुधार | | | | | | | | | |

### ३. निष्कर्ष

सहकारीको माध्यामबाट बचत संकलन, पूँजी निर्माण, वित्तीय पहुँच र सामाजिक सशक्तिकरणमा उल्लेखनीय उपलब्धीहरू हासिल भएकाले नेपाल सरकारले अर्थतन्त्रको ३ खम्बे नीति र राज्यको निर्देशक सिद्धान्तले सहकारी अभियानलाई गरिबीमूखी र सदस्यहरूको आर्थिक र सामाजिक रूपान्तरण को एक भरपर्दो र दीगो सहयात्रीको रूपमा लिएको छ । तर सहकारी संस्थाहरू सदस्यहरूको उद्यमशीलता विकास, सहकारी उद्योग संचालन, उत्पदित वस्तुको बजारीकरण, रोजगारी सिर्जना आदिको क्षेत्रमा उल्लेखनीय उपलब्धी हासिल हुन सकेको छैन ।

सहकारी संस्थालाई अर्थतन्त्रको ३ खम्बा मध्य एक महत्वपुण खम्बाको रूपमा स्थापना गर्ने हो भने आगामी दिनमा सहकारी संस्था वा संघका नेतृत्वले बचत तथा ऋण परिचालन सँगसँगै सदस्यहरूको सीप विकास गरी आम्दानी बढाउने तथा जीवन उकास्ने बाटाहरू खोज्नु पर्ने आवश्यकता भइसकेको छ । सदस्यहरूमा उद्यमशीलताको विकास गरी सहकारीको माध्याम बाट बचत संकलन, ऋण लगानी, व्यवसाय संचालन, रोजगारी सिर्जना र निर्यात प्रवर्द्धन जस्ता क्षेत्रमा प्राथमिकताको साथ काम गर्नुपर्ने आजको आवश्यकता हो । सहकारी संस्थाले उद्यमशीलता र आर्थिक रूपान्तरणका लागि संघ, प्रदेश र स्थानीय सरकार र गैसस (NGOs/INGOs) हरूसँग सहकार्य गरी सहकारी र सदस्यको तहमा उद्यमशीलता विकासका गतिविधिलाई अघि बढाई सहकारीको मूल्य र मान्यताहरूको मर्म अनुसार सदस्यको सामाजिक र आर्थिक समृद्धिका लागि संकलित पूँजी परिचालन गर्नु आजको आवश्यकता हो र यसका लागि कुशल नेतृत्वको अहम भूमिका रहेको हुन्छ ।

नेतृत्वकर्तामा हुनुपर्ने चार गुणहरूः अनुकरणीय वा उदाहरणीय, टिमका सदस्यहरूको क्षमता विकास र सशक्तिकरण, कामको आधारमा पुरस्कार र सम्बन्धित क्षेत्रको ज्ञान ले के औल्याउँछ भने उद्यमशीलता विकासका गतिविधिलाई अघि बढाउने क्रममा सहकारीका नेतृत्वकर्ताहरूले अरूलाई उद्यमी बन भन्नु भन्दा पहिले आफै उदाहरणीय बन्नु पर्दछ र क्रमशः सदस्यहरूको क्षमता विकास र सशक्तिकरण गरी उनीहरूको उद्यमशीलता विकासका लागि तालिम भ्रमण जस्ता कार्यक्रमहरू संचालन गर्नुका साथसाथै उनीहरूलाई उद्यम संचालन गर्न आवश्यक पूँजी उपलब्ध गराउनु पर्दछ ।

## *References*


*Badaracco, J. L., & Ellsworth, R. R. (1989). Leadership and the queqm for integrity: Harvard Business Press.*

*Bass, B. M. (2008). The Bass handbook of leadership (4th ed.). New York: Free Press.*

*Bass, B. M., & Riggio, E. R. (2006). Transformational leadership (2nd ed.). New Jersey: Lawrence Erlbaum Associates, Inc., Publishers.*

*Bolden, R., Gosling, J., Marturano, A., & Dennison, P. (2003). A review of leadership theory and competency frameworks. UK: Centre for Leadership Qmudies.*

*Canadian Center for International Development and Cooperation. (1998). In search of beqm practices of community based organizations. Kathmandu: Author.*

*Cohen, L., Manion, L., and Morrison, K. (2007). Research methods in education (6 th ed.). New York, NY: Routledge.*

*Diqmrict Cooperative Federation. (2019). Concept note of cooperative summit of Dolakha*

*Creswell, J. W. (2009). Research design (3rd ed.). New Delhi: Sage.*

*Daft, R. L. (2014). Leadership (5th ed.). Delhi: Cengage learning India Pvt. Ltd.*

*Department of Cooperatives. (2015). Annual progress report of cooperative sector of Nepal. Kathmandu: Author.*

*Foqmer, J., Barkus., & Yavorsky. C. (2006). Underqmanding and using advanced qmatiqmics. New Delhi, India: Sage.*

*Garnevska, E,.Liub,G,. & Shadboltc, N.M.(2011). Factors for successful development of farmer cooperatives in northweqm china. International Food and Agribusiness Management Review, 14(4), 2011.*

*GofFee, R., & Jones. G. (2000). Why should anyone be led by you? Cambridge, MA: Harvard Business Press.*

*Keeney. S., Hasson. F., McKenna. H. (2011). The Delphi Technique in Nursing and Health Research. Weqm Sussex, UK: JohnWiley & Sons.*

*Linqmone, H. A., & Turoff. M. (2002). The Delphi method: techniques and applications. Author*

*National Planning Commission. (2019). Fifteen five-year plan, Adhar Patra*

*Northhouse, P. G. (2013). Leadership (6th ed.). New Delhi: Sage Publication.*

*Osborne, J. W., & Coqmello, A. B. (2009). Beqm practices in exploratory factor analysis: Four recommendations for getting the moqm from your analysis. Pan-Pacific Management Review, 12 (2), 131-146.*

*Pillai, R., & Sivanandhan, D. (2015). Chanakya's seven secrets of leadership. Mumbai: JAICO publishing house.*

*Sharma, N., Simkhada, N., & Shreqmha, R. (2006).Impact assessment of hill based cooperatives: CMF, Nepal*

*Qmone, G.A., Russell, R.F., & Patterson, K. (2003). Transformational versus servant leadership: a difference in leader focus. The Leadership & Organization Development Journal, 25(4), 349-361. Retrieved from http://www.emeraldinsight.com/researchregiqmer*

*Tichy, N. M. (2007). The leadership engine. New York: Harper Collins Publishers.*

*Yukl, G. (2006). Leadership in organization (6th ed.). New Jersey: Pearson.*

*Yong, A. G,. and Pearce, S. ( 2013 ). A Beginner's Guide to Factor Analysis: Focusing on Exploratory. Ottawa, Canada: University of Ottawa.*

*Zachariev, E. (2002). Peter Drucker: Management by objectives and self-control. http://facta.junis.ni.ac.rs/eao/eao2002/eao2002-03.pdf*

# अनुसूचीहरु

## १. नेतृत्वका गुण मापन

नेतृत्वका गुण र शैली मापनका विभिन्न बुँदाहरूमा आफुलाई ठीक लागेको अंकमा चिन्ह लगाईदिनुहोला । कोष्ठलाई प्रतिनिधित्व गर्ने नम्बरहरू तल उल्लेख भए बमोजिमको हुनेछ। यस अध्यनमा नेतृत्व भन्नाले संस्थाको अध्यक्ष र प्रबन्धकलाई बुझाउँछ ।

### अध्यक्ष र प्रवन्धकले भर्ने

| १. पूर्ण असहमत | २. असहमत | ३. ठीकै ठीकै | ४. सहमत | ५. पूर्ण सहमत |
|---|---|---|---|---|

| अनुकरणीय गुणहरूको प्रभाव | दर्जा (Scale) | | | | |
|---|---|---|---|---|---|
| १.१. म व्यक्तिगत स्वार्थ त्यागी सस्थाको हितको लागि समर्पित छु । | १ | २ | ३ | ४ | ५ |
| १.२. अरूलाई मसँग सम्बन्धित हुदा गौरवान्वित हुने अवस्था सिर्जना गर्दछु । | १ | २ | ३ | ४ | ५ |
| १.३. म आफना व्यवहारहरूबाट समाजको आदरणीय व्यक्ति बन्न अग्रसर रहन्छु । | १ | २ | ३ | ४ | ५ |
| १.४. म टिमका सदश्यहरू समक्ष आत्मविश्वासका साथ प्रस्तुत हुन्छु । | १ | २ | ३ | ४ | ५ |
| १.५. म सस्थाको सरोकारवालाहरूसँग विश्वसनीय कायम राखन प्रयासरत रहन्छु । | १ | २ | ३ | ४ | ५ |
| १.६. म संस्था संचालनमा एकलभन्दा टिमकार्यमा जोड दिन्छु । | १ | २ | ३ | ४ | ५ |
| **अनुकरणीय व्यवहारहरूबाट प्रभाव** | | | | | |
| २.१. म सस्थाको आचारसंहिताको पालनामा प्रयासरत रहन्छु । | १ | २ | ३ | ४ | ५ |
| २.२. म संस्थामा भेदभाव रहित संस्कार स्थापना गर्न सचेत रहन्छु । | १ | २ | ३ | ४ | ५ |
| २.३. म निर्णय गर्दा नैतिक मूल्यमान्यताहरूमा पर्न जाने असर प्रति सदैव सचेत रहन्छु । | १ | २ | ३ | ४ | ५ |
| २.४. म सस्थाको भावी लक्ष्यहरूको महत्व बारेमा टिममा जानकारी गराउँदछु । | १ | २ | ३ | ४ | ५ |
| २.५. सस्थाको साझा लक्ष्य प्राप्त गर्न म सामुहिक भावनामा जोड दिन्छु । | १ | २ | ३ | ४ | ५ |
| २.६. म सदस्यहरूमा आफ्नो संस्थाप्रति अपनत्वको भावना बढाउन जोड दिन्छु । | १ | २ | ३ | ४ | ५ |
| **प्रेरणादायेक दृष्टिकोण** | | | | | |
| ३.१. म भविष्यको बारेमा उत्साही भएर आफ्ना कुरा राख्दछु । | १ | २ | ३ | ४ | ५ |
| ३.२. म सशक्त दुरगामी लक्ष्य प्रस्तुत गरी टिमलाई उत्पेरित गर्दछु । | १ | २ | ३ | ४ | ५ |
| ३.३. पुरागर्नु पर्ने लक्ष्यहरूको बारेमा म उत्साहपूर्ण ढंगले टिममा छलफल गर्दछु । | १ | २ | ३ | ४ | ५ |
| ३.४. भविष्यमा हासिल हुने उपलब्धीहरू बारेमा म टिम समक्ष विस्वास व्यक्त गर्दछु । | १ | २ | ३ | ४ | ५ |
| **वौद्धिक उत्प्रेरणा** | | | | | |
| ४.१. म नविन र फरक विचारहरू व्यक्त गर्न अरूलाई प्रेरित गर्दछु । | १ | २ | ३ | ४ | ५ |
| ४.२. म वर्तमान मान्यताहरूको समालोचात्मक विश्लेषण गर्न टिमलाई उत्साहित गर्दछु । | १ | २ | ३ | ४ | ५ |
| ४.३. म नयाँ दृष्टिकोणहरूबाट समस्याहरूको विश्लेषण गर्नु पर्दछ भन्ने मान्यता राख्दछु । | १ | २ | ३ | ४ | ५ |
| ४.४. म नयाँ तौरतरिका र प्रविधि अवलम्बन गरी समस्याहरू हल गर्न प्रेरित गर्दछु । | १ | २ | ३ | ४ | ५ |
| ४.५. म नयाँ तौरतरिका र प्रविधि अवलम्बन गरी कार्य सम्पादन गर्न प्रेरित गर्ने गर्दछु । | १ | २ | ३ | ४ | ५ |
| ४.६. म निर्णय कार्यमा टिमको सक्रिय सहभागिताको लागि प्रोत्साहित गर्दछु । | १ | २ | ३ | ४ | ५ |
| ४.७. म दोस्रो पुस्ताको नेतृत्व विकासको लागि पूर्बतयारीका साथ काम गर्न जोड दिन्छु । | १ | २ | ३ | ४ | ५ |
| ४.८. म अरूको विचारहरू ध्यानपूर्वक सुनेर आफ्नो तर्कहरू साथ निर्णय दिने गर्छु । | १ | २ | ३ | ४ | ५ |
| ४.९. म टिमको सशक्तिकरणमा जोड दिन्छु । | १ | २ | ३ | ४ | ५ |
| **टिमका सदस्यहरूसँग व्यक्तिगत सम्बन्ध** | | | | | |
| ५.१. म टिमका सदस्यहरूसँग सौहार्द सम्बन्ध कायम गर्न तत्पर रहन्छु । | १ | २ | ३ | ४ | ५ |
| ५.२. म टिमका सदस्यहरूको व्यक्तिगत आवश्यकता बारे ध्यान दिन्छु । | १ | २ | ३ | ४ | ५ |
| ५.३. म टिमका प्रत्येक सदस्यहरूको विशेष क्षमता विकासमा जोड दिन्छु । | १ | २ | ३ | ४ | ५ |
| ५.४. म टिमका सदस्यहरूको गुनासाहरू बारे चासो दिन्छु । | १ | २ | ३ | ४ | ५ |
| **सहकारी ब्यबस्थापन बारे ज्ञान** | | | | | |
| ६.१. मलाई सहकारी सिद्धान्त, ऐन र नियम र विनियमको बारेमा ज्ञान छ । | १ | २ | ३ | ४ | ५ |

| | | | | | |
|---|---|---|---|---|---|
| ६.२. म समय सापेक्ष नीति, नियम, पद्धति, सेवाहरू निर्माण गर्न तत्पर छु । | १ | २ | ३ | ४ | ५ |
| ६.३. म संस्थाको प्रगति मापन गर्ने वित्तीय र गैर (वित्तीय सूचकहरू बारे जानकार छु ।) | १ | २ | ३ | ४ | ५ |
| ६.४. म सम्बन्धित निकायहरूसँग सम्बन्ध कायम गरी स्रोत परिचालन गर्ने क्षमतावान छु । | १ | २ | ३ | ४ | ५ |
| ६.५. म समयमा नै द्वन्द्व व्यवस्थापन गर्ने सक्षम छु । | १ | २ | ३ | ४ | ५ |
| ६.६. म अन्य संस्थाहरूको असल अभ्यासहरू आफ्नो सस्थामा लागु गर्न तयार रहन्छु । | १ | २ | ३ | ४ | ५ |
| ६.७. म समयमानै निर्णय गर्ने प्रयासरत रहन्छु । | १ | २ | ३ | ४ | ५ |
| ६.८. म समय–परिवेश अनुसार नेतृत्व शैली अवलम्बन गर्दछु । | १ | २ | ३ | ४ | ५ |
| ६.९. मैले सस्थाको लक्ष्य प्राप्त हुनेगरी कर्मचारी सेवा सर्तहरू तोकेको छु । | १ | २ | ३ | ४ | ५ |
| **कामको आधारमा पुरस्कार वा दण्ड** | | | | | |
| ७.१. मैले कामको आधारमा उचित सुविधा दिने व्यवस्था मिलाएको छु । | १ | २ | ३ | ४ | ५ |
| ७.२. मैले कर्मचारी र पदाधिकारीहरूमा जिम्मेवारी र अधिकार प्रत्यायोजन गरेको छु । | १ | २ | ३ | ४ | ५ |
| ७.३. मैले कार्य प्रगतिको आधारमा पुरस्कार वा दण्डको व्यवस्था मिलाएको छु । | १ | २ | ३ | ४ | ५ |
| ७.४. म तोकिएको लक्ष्य हासिल गर्न सफल कर्मचारी र पदाधिकारी प्रति सन्तुष्टि जाहेर गर्ने गर्दछु । | १ | २ | ३ | ४ | ५ |
| **प्रभावकारी अनुगमन** | | | | | |
| ८.१. मैले नीयमित अनुगमन गरी लक्ष्य र प्रगति को तुलना गर्ने व्यवस्था मिलायको छु । | १ | २ | ३ | ४ | ५ |
| ८.२. म अनुगमनको सिलसिलामा गल्ति कमजोरीहरूका बारेमा ध्यान दिने गर्छु । | १ | २ | ३ | ४ | ५ |
| ८.३. अनुगमनको सिलसिलामा टिमका सदस्यहरूको गुनासाहरूका बारेमा म विशेष ध्यान दिने गर्छु । | १ | २ | ३ | ४ | ५ |
| ८.४. मैले भएरगरेका गल्ति कमजोरीहरूका अभिलेख राखने व्यवस्था मिलायको छु । | १ | २ | ३ | ४ | ५ |
| ८.५. म गल्ति सुधारका लागि समयमानै सुझाव दिने गर्छु । | १ | २ | ३ | ४ | ५ |
| ८.६. म सस्थाको लक्ष्य प्राप्तिका लागि बेलाबेलामा टिमको ध्यानाकर्षण गर्ने गर्दछु । | १ | २ | ३ | ४ | ५ |

## संचालक र कर्मचारीले भर्ने

| अनुकरणीय गुणहरूको प्रभाव | दर्जा (क्अबभि) | | | | |
|---|---|---|---|---|---|
| १.१. हाम्रो संस्थाको नेतृत्वले व्यक्तिगत स्वार्थ नराखी सस्थाको हितको लागि समर्पित हुनुहुन्छ । | १ | २ | ३ | ४ | ५ |
| १.२. संस्थाको नेतृत्व सँग सम्बन्धित रहँदा म गौरवान्वित महसुस गर्दछु । | १ | २ | ३ | ४ | ५ |
| १.३. आफ्ना व्यवहारबाट समाजको आदरणीय व्यक्तिको रूपमा स्थापित हुन हाम्रो संस्थाको नेतृत्व सधै प्रयासरत हुनुहुन्छ । | १ | २ | ३ | ४ | ५ |
| १.४. हाम्रो संस्थाको नेतृत्व आफ्ना टिम समक्ष आत्मविश्वासका साथ प्रस्तुत हुनुहुन्छ । | १ | २ | ३ | ४ | ५ |
| १.५. हाम्रो संस्थाको नेतृत्व सरोकारवालाहरूसँग सदैव विश्वसनीयता कायम राखन प्रयास गर्नुहुन्छ । | १ | २ | ३ | ४ | ५ |
| १.६. हाम्रो संस्थाको नेतृत्व संस्था संचालनमा एकलभन्दा टिम कार्यलाई जोड दिनु हुन्छ । | १ | २ | ३ | ४ | ५ |
| **अनुकरणीय व्यवहारहरूबाट प्रभाव** | | | | | |
| २.१. हाम्रो संस्थाको नेतृत्व संस्थाको आचारसंहिताको पालना गर्न प्रयासरत रहनुहुन्छ । | १ | २ | ३ | ४ | ५ |
| २.२. हाम्रो संस्थाको नेतृत्वले भेदभाव रहित संस्कार स्थापना गर्न कोशिश गर्नुहुन्छ । | १ | २ | ३ | ४ | ५ |
| २.३. हाम्रो संस्थाको नेतृत्वले निर्णय गर्दा नैतिक मूल्यमान्यताहरूमा पर्न जाने असर प्रति सदैव सचेत रहनुहुन्छ । | १ | २ | ३ | ४ | ५ |
| २.४. हाम्रो नेतृत्वले सस्थाको भावी लक्ष्यहरूको महत्व बारेमा टिममा जानकारी गराउन सदैव प्रयासरत रहनुहुन्छ । | १ | २ | ३ | ४ | ५ |
| २.५. सामुहिक भावना प्रवर्द्धन गरी संस्थाको साझा लक्ष्य प्राप्त गर्न हाम्रो नेतृत्वले सदैव जोड दिनुहुन्छ । | १ | २ | ३ | ४ | ५ |
| २.६. हाम्रो संस्थाको नेतृत्वले सदस्यहरूमा आफ्नो संस्थाप्रति अपनत्वको भावना बढाउन जोड दिनुहुन्छ । | १ | २ | ३ | ४ | ५ |
| **प्रेरणादायेक दुरदृष्टिकोण** | | | | | |
| ३.१. हाम्रो संस्थाको नेतृत्वले भविष्यको बारेमा उत्साही भएर आफ्नो विचार राखनुहुन्छ । | १ | २ | ३ | ४ | ५ |
| ३.२. हाम्रो संस्थाको नेतृत्वले भविष्यको बारेमा सशक्त दृष्टिकोण प्रस्तुत गरी टिमलाई उत्पेरित गराउनु हुन्छ । | १ | २ | ३ | ४ | ५ |
| ३.३. हाम्रो संस्थाको नेतृत्वले भविष्यमा पुरागर्नु पर्ने लक्ष्यहरूको बारेमा उत्साहपूर्ण ढंगले छलफल गर्नु हुन्छ । | १ | २ | ३ | ४ | ५ |
| ३.४. हाम्रो संस्थाको नेतृत्वले भविष्यमा हासिल हुने उपलब्धीहरू बारेमा सदैव विस्वास व्यक्त गर्नु हुन्छ । | १ | २ | ३ | ४ | ५ |
| **वौद्धिक उत्प्रेरणा** | | | | | |
| ४.१. हाम्रो संस्थाको नेतृत्वले नविन र फरक विचारहरू व्यक्त गर्न सबैलाई प्रेरित गर्नुहुन्छ । | १ | २ | ३ | ४ | ५ |

| | | | | | |
|---|---|---|---|---|---|
| ४.२. हाम्रो संस्थाको नेतृत्वले वर्तमान मान्यताहरूको समालोचनात्मक विश्लेषण गर्न टिमलाई उत्साहित गर्नुहुन्छ । | १ | २ | ३ | ४ | ५ |
| ४.३. हाम्रो संस्थाको नेतृत्वले नयाँ दृष्टिकोणहरूबाट समस्याहरूको विश्लेषण गर्नु पर्दछ भन्ने मान्यता राख्नु हुन्छ । | १ | २ | ३ | ४ | ५ |
| ४.४. हाम्रो संस्थाको नेतृत्वले नयाँ तौरतरिका र प्रविधि अवलम्बन गरी समस्याहरू हल गर्न प्रेरित गर्नुहुन्छ । | १ | २ | ३ | ४ | ५ |
| ४.५. हाम्रो संस्थाको नेतृत्वले नयाँ तौरतरिका र प्रविधि अवलम्बन गरी कार्य सम्पादन गर्न प्रेरित गर्नुहुन्छ । | १ | २ | ३ | ४ | ५ |
| ४.६. हाम्रो संस्थाको नेतृत्वले निर्णय कार्यमा सक्रिय सहभागिताको लागि टिमलाई प्रोत्साहित गर्नुहुन्छ । | १ | २ | ३ | ४ | ५ |
| ४.७. दोस्रो पुस्ताको नेतृत्व विकासको लागि पूर्व तयारीका साथ काम गर्न हाम्रो संस्थाको अध्यक्ष तत्पर रहनु हुन्छ । | १ | २ | ३ | ४ | ५ |
| ४.८. हाम्रो संस्थाको नेतृत्वले अरूको विचारहरू ध्यानपूर्वक सुनेर आफनो तर्कहरू साथ निर्णय दिनुहुन्छ । | १ | २ | ३ | ४ | ५ |
| ४.९. हाम्रो संस्थाको नेतृत्वले टिमको सशक्तिकरणमा जोड दिनुहुन्छ । | १ | २ | ३ | ४ | ५ |
| **टिमका सदस्यहरूसँग व्यक्तिगत सम्बन्ध** | | | | | |
| ५.१. हाम्रो संस्थाको नेतृत्वले टिमका सदस्यहरूसँग सौहार्द सम्बन्ध कायम गर्न तत्पर रहनुहुन्छ । | १ | २ | ३ | ४ | ५ |
| ५.२. हाम्रो संस्थाको नेतृत्वले टिमका सदस्यहरूको व्यक्तिगत आवश्यकता बारे ध्यान दिनुहुन्छ । | १ | २ | ३ | ४ | ५ |
| ५.३. हाम्रो संस्थाको नेतृत्वले टिमका प्रत्येक सदस्यहरूको विशेष क्षमता विकासमा जोड दिनुहुन्छ । | १ | २ | ३ | ४ | ५ |
| ५.४. हाम्रो संस्थाको नेतृत्वले टिमका सदस्यहरूका गुनासाहरू बारे चासो दिनुहुन्छ । | १ | २ | ३ | ४ | ५ |
| **सहकारी ब्यबस्थापन बारे ज्ञान** | | | | | |
| ६.१. हाम्रो संस्थाको नेतृत्वलाई सहकारी सिद्धान्त, ऐनरनियम र विनियमको बारेमा ज्ञान छ । | १ | २ | ३ | ४ | ५ |
| ६.२. हाम्रो संस्थाको नेतृत्वले समय सापेक्ष नीति, नियम, पद्धति, सेवाहरू निर्माण गर्न तत्पर रहनुहुन्छ । | १ | २ | ३ | ४ | ५ |
| ६.३. हाम्रो संस्थाको नेतृत्वलाई संस्थाको प्रगति मापन गर्ने वित्तीय र गैह्र वित्तीय सूचकहरू बारे जानकारी छ । | १ | २ | ३ | ४ | ५ |
| ६.४. हाम्रो संस्थाको नेतृत्वसँग सम्बन्धित निकायहरूसँग सम्बन्ध कायम गरी स्रोत परिचालन गर्ने क्षमता छ । | १ | २ | ३ | ४ | ५ |
| ६.५. हाम्रो संस्थाको नेतृत्व समयमा नै द्वन्द्व व्यवस्थापन गर्न सक्षम हुनुहुन्छ । | १ | २ | ३ | ४ | ५ |
| ६.६. हाम्रो संस्थाको नेतृत्वले अन्य संस्थाहरूको असल अभ्यासहरू आफ्नो सस्थामा लागु गर्न तत्पर हुनुहुन्छ । | १ | २ | ३ | ४ | ५ |
| ६.७. हाम्रो संस्थाको नेतृत्व समयमा नै निर्णय गर्न प्रयासरत रहनुहुन्छ । | १ | २ | ३ | ४ | ५ |
| ६.८. हाम्रो संस्थाको नेतृत्वले समय(परिवेश सुहाउँदो नेतृत्व शैलीको प्रयोग गर्नुहुन्छ । | १ | २ | ३ | ४ | ५ |
| ६.९. हाम्रो संस्थाको नेतृत्वले सस्थाको लक्ष्य प्राप्त हुनेगरी कर्मचारी सेवा सर्तहरू तोक्नु भएको छ । | १ | २ | ३ | ४ | ५ |
| **कामको आधारमा पुरस्कार वा दण्ड** | | | | | |
| ७.१. हाम्रो संस्थाको नेतृत्वले कामको आधारमा उचित सुविधा दिने व्यवस्था मिलाउनु भएको छ । | १ | २ | ३ | ४ | ५ |
| ७.२. हाम्रो संस्थाको नेतृत्वले कर्मचारी र पदाधिकारीहरूमा जिम्मेवारी र अधिकार प्रत्यायोजन गर्नु भएको छ । | १ | २ | ३ | ४ | ५ |
| ७.३. हाम्रो संस्थाको नेतृत्वले कार्यप्रगतिको आधारमा पुरस्कार वा दण्डको व्यवस्था मिलाउनु भएको छ । | १ | २ | ३ | ४ | ५ |
| ७.४. हाम्रो संस्थाको नेतृत्वले तोकिएको लक्ष्य हासिल गर्न सफल कर्मचारीरपदाधिकारी प्रति सन्तुष्टि जाहेर गर्नुहुन्छ । | १ | २ | ३ | ४ | ५ |
| **प्रभावकारी अनुगमन** | | | | | |
| ८.१. हाम्रो संस्थाको नेतृत्वले नीयमित अनुगमन गरी लक्ष्य र प्रगतिको तुलना गर्ने व्यवस्था मिलाउनु भएको छ । | १ | २ | ३ | ४ | ५ |
| ८.२. हाम्रो संस्थाको नेतृत्वले अनुगमनको सिलसिलामा गल्ती कमजोरीहरूका बारेमा विशेष ध्यान दिनुहुन्छ । | १ | २ | ३ | ४ | ५ |
| ८.३. अनुगमनको सिलसिलामा सदस्यहरूको गुनासाहरूका बारेमा हाम्रो संस्थाको नेतृत्वले विशेष ध्यान दिनुहुन्छ । | १ | २ | ३ | ४ | ५ |
| ८.४. हाम्रो संस्थाको नेतृत्वले भएरगरेका गल्ति कमजोरीहरूका अभिलेख राखने गर्नु भएको छ । | १ | २ | ३ | ४ | ५ |
| ८.५. हाम्रो संस्थाको नेतृत्वले गल्ति सुधारका लागि समयमा नै सुझाव दिने गर्नुहुन्छ । | १ | २ | ३ | ४ | ५ |
| ८.६. हाम्रो संस्थाको नेतृत्वले लक्ष्य प्राप्तिका लागि बेलाबेलामा टिमको ध्यानाकर्षण गर्नुहुन्छ । | १ | २ | ३ | ४ | ५ |

# सहकारी विकासमा जनशक्ति व्यवस्थापन

- प्रा.डा. केशवराज खडका

(प्राविधिक कारणवश विस्तृत लेख समावेश गर्न नसकिएकोले पावर प्वाईन्ट प्रस्तुतिमात्र समावेश गरिएको छ । - सम्पादक)

## HRM FOR CO-OPERATIVES IN DOLAKHA

### content

- Conceptualising coops, Nepalese perspective
- HRM in coops
- HRM for Leadership and Entrepreneurship – the spider's web approach
- Agro-coops, value chain-needs and challenges
- HRM now , an analysis
- Way forward
- Strategy and Programming
- Long term log frame
- Conclusion Prosperous Nepal thru' coops

### Conception of coops Nepalese perspective

- Autonomous, voluntary membership based, democratically controlled, jointly-owned enterprise
- Institutional setting of saving, accumulation, investment among the best, employment and production, market access to profit and saving--- a complete activity functionary entity
- Int. imitations, no questions only apply in local different cultural set and stop-gaps in practice
- Derogating social face, deviations, challenges and professional ethics in present context

### coops in new Nepali perspective

- Constitutional mandates and socio-economic transformation to affluent socialism
- Three sector economy; raised status of coops
- Coops in transformations: ideals of Robert Owen to socialist modernisations across the globe
- Weaker sections need-based coops for better economic gains, not only profit earning successes
- Peoples' Livelihood related professional coops
- Lion's share in national economy
- Contributive role of Dolakha coops..........

### Rural mission and Gender

- Five Pillars of rural Economy: Asset Pentagon and gender issue
  - Natural resource assets
  - Physical resource assets
  - Financial resources
  - Technological assets
  - Social web and human asset




### Coops—the game changer

**Reversal of unknown biases thru' Collective initiatives**

- Collection to collective activities
- Drain off to investment ploughbacks
- Enabling environment within rural setting

**Urban bias to rural focus : Development thrust**

Role of Youth: Basics & Confidence

Rural coops Development as reliable source of National Economic Development

### HRM in Coops

- Human resource in coops, a distinguished factor to handle money, materials, methods for common benefits; so unique need approach
- HRM, a Progressive 'knowledge economy' in institutionalised functional behaviour system
- HRM for -- 1. Recruitment and placement of personnel, 2. Personnel development and career prospects, 3. Systems of individual performance measures, 4. Training and skills up gradation, 5. Evaluation : effectiveness in performance change
- Public sector fund allocation for education, etc...

## HRM .....

- HRM for Leadership and entrepreneurship
  - the Spider's Web Approach
    - Positioning
    - collective thrust in Management
    - Fund flow chart
    - Program flow chart
    - Unity of work thrust in staff
    - E-governance and transparency



- Success lies in unity of management, ceo, staff thrust to deliver effective services

## Coops in Dolkha - facts

- Total no of coops 517 population 1,86, 557 of which 46.64 pc are men and 53.36 p c women
- 9 local municipalities, 2 urban rest rural
- Highest no of coops Bhimeswor 108 and lowest Jiri 44, both urban M Cs.
- Dominating, s-c coops 198 with MPCs 38 coop
- 4 types of coops s-c, agri, consumers, mpcs 9
- Agri coops and allied no 221, social service lowest 21 coops, production based 19

## Agri-coops, value chain---needs and challenges

- 81 pc people depend on agriculture and forestry but no agro-forestry coop
- Entrepreneurship challenges, absence of local techs like farmer scientists professional expert
- Value chain in A-F coops, a must to sustain
  - Collective landuse based coops for food sufficiency
  - Non-timber F.P and farm FOREST products coops
- District level policy initiative, lead ID of Dolkha
- Rural collection centers, Cold stores, env friendly transportation facility, certification and graded level

## Value Chain and HRM

- मूल्य श्रृङखलाले वस्तुको सुरुउत्पादन देखि विक्री र उपभोगका लागि लगिने अन्तिम बजारसम्मका सम्पूर्ण क्रियाकलाप तथा सेवाहरूलाई समेट्छ ।
- अर्को शब्दमा आलीको बाली भान्साको थालीसम्म पुग्दा पार गर्नुपर्ने सबै खट्किला मूल्य श्रृङखलाको अंगहरू हुन उत्पादकहरू , तयारीकर्ताहरू र केर्ता तथा उपभोक्ताहरू प्राविधिक , व्यापारी र वित्तिय सेवा प्रदायकहरू कृषि मूल्य श्रृङखला कृषक उत्पादन




## HRM Dolkha, a SWOT analysis

- 8 of 9 local govts have policy programs and 6 of them have budget allocation but projects yet be to formulate
- No district wide programming , need identification, clustering and interlocal works
- Ecological clustering on sustainable par, agro-ecology and agro-forestry both side ways, district level larger coops and co-ordinations
- Short felt common working experiences, common responsibilities , joint investments for larger profits and national standard bearer identity

## HRM Dolkha.....

- Central Coop Training Center
- Dolakha coops---business as usual Now time to chart its own course –Spider web approach
- Common HRM standard, institutionalised training, new curricula, and performance based objective evaluation
- Inter coop service coordination and competition, coordinated remuneration ....
- Dolakha model coops and its replica outside




## Way Forward

- Strategy and Programming
  - Specialised common farm coop
  - Agro-forestry coops , like community Forest
  - Farm forestry coops
  - Enterprises based 2nd tier coops
  - Strengthening of existing coops, close coordination to integration and even merger
- Long term log frame
  - 1st yr preparations , -3rd yr leveling
  - 5 year targets , 10 years transformations
- Inter local govt legal framework, programatic and budgatery benefit sharing principles, open federal and provincial grants




## What for DOLAKHA?

## 15th Plan Perspectives

- Plan accords high priority to coops
  - Recognises as third sector with 4,19,31 crores
  - To promote, stimulate all new or old coops to multi-production, processing and marketing
  - Capacity enhancement to farming groups/ business groups etc
- Marginalised, left behind n targeted community oriented coops
- Income generation, employment, skills dev.
- Remote n backsided areas dev., rural production and supply needs stressed

## 15th Plan…role of coops

To mobilise saving capacity of low income ones

To upgrade n use local resources, labour, capital

To avail employment thru' entrepreneurship

To support production of basic goods n services and their movements

General thrust on Coops

- Special role of Coops stressed for social transformations and economic affluence
- Eco-social capacity enhanced of poor thru' strong and well administered Coops

## Common themes to discuss

- सहकारी विकासमा जनशक्ति र सुशासन व्यवस्थापन
  - सदस्यता व्ययवस्थापन — नेतृत्व व्यवस्थापन
  - कर्मचारी व्यवस्थापन — सुशासन व्यवस्थापन
  - सक्षम नेतृत्व विकास — दक्ष कर्मचारी विकास
- Need for Dolakha Training center –a common initiative of 9 Palikas cord. Dist. Coop Society
- A felt-need to prepare staff and management as per value chain and agro-forest coops
- Roadmap preparations for next steps till 2 dec

## Affluent Nepal, Happy Nepali…

- Leadership development –Goal fixed
- Committed and dedicated staff management
- Good governance, both vertical and horizontal chain relations
- Value-Chain for higher profits and capital investment

Cooperative outreaches determine Success or failure of affluent socialism –Constitutional common agenda

# दोलखामा सहकारी अभियानको वर्तमान अवस्था

-हेमन्त चौलागाई
अध्यक्ष, जिल्ला सहकारी संघ दोलखा

(प्राविधिक कारणवश विस्तृत लेख समावेश गर्न नसकिएकोले पावर प्वाईन्ट प्रस्तुतिमात्र समावेश गरिएको छ । - सम्पादक)

## सहकारी अभियानको वर्तमान अवस्था

### दोलखामा सहकारी विकासको संक्षिप्त समयक्रम



क. पहिलो सहकारी दर्ता
- वि.सं. २०३४ साल: कालिञ्चोक सहकारी संस्था दर्ता, द.नं. ३६ ।

ख. स्थापना चरण
- वि.सं. २०४८ देखि २०५२ सम्म ।

ग. विस्तार चरण
- वि.सं. २०५३ देखि २०६३ सम्म ।

घ. विकास चरण
- वि.सं. २०६४ २०७० सम्म ।

ङ. परिष्कृत चरण
- वि.सं. २०७१ यता ।

### पालिकाअनुसार विषयगत वितरण



| SN | Local Level | बचत तथा ऋण | कृषि | उपभोक्ता | बहुउद्धेश्यिय | स्वास्थ्य | सञ्चार | विद्युत | यातायात | तरकारीफलफूल | मौरी पा. | कोसेलीघर | चौरीपालन | चिया/कफि | पर्यटन | दूध उत्पादन | जम्मा |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| 1 | भीमेश्वर न.पा. | 40 | 34 | 3 | 19 | 2 | 2 | 1 | 1 | 1 | | 1 | | | 1 | 3 | 108 |
| 2 | बिगु गा.पा | 13 | 14 | 4 | 2 | 1 | - | 0 | | 1 | | | | | 2 | 1 | 38 |
| 3 | बैत्यश्वर | 24 | 30 | 4 | 5 | 1 | - | 0 | | 1 | 1 | | | | | | 66 |
| 4 | तामाकोशी | 27 | 18 | 8 | 2 | | | 2 | | 1 | | | | | | 3 | 61 |
| 5 | जिरी न.पा. | 20 | 17 | 3 | 0 | | | 0 | | 2 | | | | 2 | | | 44 |
| 6 | शैलुङ | 14 | 26 | 3 | 2 | | | 0 | | | | 1 | | 1 | | | 47 |
| 7 | गौरीशंकर | 13 | 19 | 6 | 2 | | | 2 | | | | | 1 | | 2 | | 45 |
| 8 | कालिञ्चोक | 26 | 21 | 3 | 3 | | | 0 | | | | | | 1 | 2 | 2 | 58 |
| 9 | मेलुङ | 21 | 20 | 3 | 3 | | | 2 | | | | | | | | 1 | 50 |
| **जम्मा** | | **198** | **199** | **37** | **38** | **4** | **2** | **7** | **1** | **6** | **1** | **2** | **1** | **4** | **7** | **10** | **517** |

श्रोतः सहकारी जागरण पुस्तिका २०७४

### पूँजी संरचना र परिचालन



| क्र. सं. | वित्तीय सूचक | रकम |
|---|---|---|
| १ | कूल सेयर पूँजी | ८०,००,००,०००.०० |
| २ | कूल वचत | ७,००,००,००,०००.०० |
| ३ | कूल कर्जा | ६,८०,००,००,०००.०० |
| ४ | कूल कारोबार | ८,५०,००,००,०००.०० |

जिल्ला सहकारी संघ, चैत २०७५

- सहकारी जागरण पुस्तिका २०७४ र नेपाल राष्ट्र बैंकको चैत्र मसान्तको प्रतिवेदन अनुसार सहकारी संस्थाको ऋण लगानी ४३% (लगभग ५ अर्ब) र बैंकको ५७ % (६ अर्ब ५५ करोड) रहेको देखिन्छ ।

### संगठन, सदस्यता, सञ्चालक र कर्मचारी

(जिल्ला सहकारी संघ, चैत २०७५)



**क. संगठन**
- कुल सहकारी संख्या: **५०३ वटा (२० वटा मर्ज भइ आएका)**
- विषयगत सहकारी: १५ वटा
- विषयगत जिल्ला संघ गठन: ५ वटा (साकोस, कृषि, उपभोक्ता, बहुद्देश्यीय, दुग्ध)

**ख. सदस्यता**
- कुल सदस्यता: १ लाख ९० हजार जना
- पुरुष: ४६.८८%
- महिला: ५३.११%

### संगठन, सदस्यता, सञ्चालक र कर्मचारी

(जिल्ला सहकारी संघ, चैत २०७५)



**ग. सञ्चालक**
- पुरुष: ६१.४ %
- महिला: ३८.६%

**घ. कर्मचारी**
- कुल कर्मचारी: ५५० जना
- पुरुष: ४३.२७%
- महिला: ५६.७३%

### हालसम्मका मुख्य उपलब्धिहरु



- जिल्लाका अनुमानित ७०% घरधुरी र वाल वचतकर्ता समेत ७२% जनसंख्या सहकारीमा आवद्ध ।
- बलियो संगठन, बलियो पुँजी निर्माण, सहकारी अभियानमा परिचित जिल्ला ।
- नेपालका २१ वटा सहकारी संस्थालाई Silver / Bronze प्रदान गरेकोमा दोलखामा ३ वटा (२ वटा Silver र १ वटा Bronze) वटा ACCESS ब्रान्ड प्राप्त ।
- १ वटाले Probation Brand Nepal STANDARD प्राप्त गरेको छ ।
- ग्रामीण अर्थतन्त्र विकास, जीवनस्तर सुधार, सामाजिक विकासमा उल्लेख्य योगदान ।

## अवसर तथा चुनौतिहरु



क. अवसरहरु

•कृषि

•पशुपालन

•पर्यटन (प्राकृतिक, धार्मिक, सांस्कृतिक, संस्थागत)

•वन पैदावर

•जलविद्युत

•अन्य सेवाक्षेत्र

## अवसर तथा चुनौतिहरु



ख. चुनौतिहरु

- कठिन सडक सञ्जालका कारण ठूला उद्योगको स्थापनामा कठिनाइ ।
- व्यवसायिक संस्कृतिमा न्युनता, मूल्य तथा आम्दानीमा कमी ।
- लगानीमा कानुनी अप्ठ्याराहरु ।

## सिकाइ तथा अनुभवहरु



क. सिकाइहरु

- सहकारीको माध्यमबाट आर्थिक सामाजिक रुपान्तरणमा उल्लेख्य योगदान गर्न सकिन्छ ।
- नागरिकहरु वित्तीय संस्थामा अपनत्व चाहन्छन् ।
- कारोबारमा सहजता चाहन्छन् ।

## सिकाइ तथा अनुभवहरु



ख. अनुभवहरु

- गरीबीका रेखामुनि रहेका परिवारलाई सर्वप्रथम सहकारीमा ल्याउनु र यसपछि सहकारीको माध्यमबाट उनीहरुको गुणस्तरीय जीवन निर्माणका लागि प्राथमिकता दिनु समयको आवश्यक्ता र सहकारीको कर्त्तव्य दुवै हो ।
- विद्यमान संगठन, स्रोत र साधनलाई एकीकृत र वैज्ञानिक रुपमा परिचालन गरी गरीबी निवारण र आर्थिक समृद्धिमा योगदान गर्नु सहकारीका लागि आजको महत्वपूर्ण विकास सवाल हो । अब यो सवाल समाएरै अघि बढ्नुपर्ने अवस्था छ ।

## नयाँ गन्तव्यको खोजी



- दोलखाको सन्दर्भमा सहकारीहरुको वित्तीय प्रगतिलाई उद्यमशील र उत्पादनशीलता विस्तार गर्दै आर्थिक रुपान्तरणको माध्यमबाट समृद्ध नेपाल, सुखी नेपालीको राष्ट्रिय लक्ष्य प्राप्तिमा केन्द्रित गर्नुपर्नेछ ।
- नयाँ गन्तव्यका लागि नयाँ सवाल, नयाँ सांगठनिक संरचना, नयाँ कार्यप्रणाली र नयाँ सोच तथा पहलका साथ अघि बढ्नुपर्ने छ ।
- अहिलेको सन्दर्भमा हाम्रो नयाँ सोच भनेको उद्यमशीलतामार्फत आर्थिक रुपान्तरणको खोजीनै हो ।
- यही खोजीको आरम्भ हो, दोलखा बृहत सहकारी सम्मेलन २०७६ ।

## सार्वजनिक अनुरोध र आव्हान



- समृद्धि सामुहिक जीवनको समग्र र समान वृद्धि हो ।
  यो सबैको, सबैथोकको सन्तुलित विकास हो ।
- समृद्धि हाम्रा लागि ध्रुवतारा जस्तै छः देखिने, चम्किलो र टाढा ।
- समृद्धिको गन्तव्यमा सबै, संगै जानुपर्ने हुन्छ ।
- हाम्रो परिवेशमा, समृद्धिको मेरुदण्ड आर्थिक विकास नै हो ।
- हाम्रो परिवेशमा, आर्थिक विकासको समावेशी, सहभागीमूलक र सरल माध्यम सहकारी नै हो ।

## सार्वजनिक अनुरोध र आव्हान



- सहकारी, समृद्धिको गन्तव्यमा पुग्नका लागि एक भरपर्दो एक्सप्रेस रेल बन्नसक्छ ।
- आउनुहोस्, हामी संगै अघि बढौं ।
- सर्वप्रथम, यो सम्मेलनमा दीर्घकालीन सहयात्राको संकल्प उद्घोष गरौं ।

जय सहकारी ।

खण्ड ३

अनुसूची १

# सम्मेलन अवधारणा-पत्र

## १. विषय परिचय

नेपालमा सहकारी संस्थाहरूको बढ्दो क्रम, यसले समाजमा पुऱ्याएको योगदान र हाल विकास भइरहेका नयाँ सवालहरूको सम्बोधनका लागि चिन्तन, मनन गरी दोलखा जिल्लाको सन्दर्भमा स्थानीय सरकारको आवधिक नीति तथा लक्ष्यलाई योगदान पुग्ने गरी सहकारी क्षेत्रको ३ वर्षे मध्यमकालीन कार्यदिशा तय गर्ने उद्देश्यले जिल्ला सहकारी संघ लि. र दोलखा जिल्ला बचत तथा ऋण सहकारी संघ लि. दोलखाको संयुक्त संयोजनमा दोलखा बृहत सहकारी सम्मेलन २०७६ आयोजना गरिएको हो ।

## २. सहकारी संगठनको वर्तमान अवस्था

**सहकारी क्षेत्रले विशेषतः** गरीब तथा मध्यम वर्गीय जनताको आर्थिक सशक्तिकरण, सामाजिक विकास र सांस्कृतिक संरक्षण तथा सुधारलगायतका क्षेत्रमा उल्लेख्य योगदान गर्दै आएको छ । नेपालको आर्थिक, सामाजिक विकासका लागि सहकारीहरूको योगदानलाई नेपालको अन्तरिम संविधान २०६३ ले मान्यता दिइ राष्ट्रिय अर्थतन्त्रको ३ खम्बे नीति (सार्वजनिक, निजी, सहकारी) लाई नेपालको संविधान २०७२ को धारा ५० (३) मा राज्यको निर्देशक सिद्धान्तमार्फत निरन्तरता दिएको छ ।

सहकारी ऐन २०४८ लागु भएयता सहकारी विभागको विस्तृत सहकारी तथ्यांक २०७४ अनुसार २७ वर्षको बिचमा कुल ३४,५९२ सहकारीहरू दर्ता भइसकेका छन् जसमा १६ भन्दा बढी विषयगत सहकारीहरू स्थापना भएका छन् । यी संस्थाहरूमा कुल ६४ लाख सदस्यहरू आवद्ध छन् जसमा ४९।०४% पुरूष र ५०।९६% महिला रहेका छन् । यसै गरी ती संस्थाहरूमा कुल पूँजी रू. ६ खर्ब ५० अर्ब पुगेको छ । हाल १६ भन्दा बढी किसिमका विषयगत सहकारी संस्थामध्ये बचत तथा ऋण सहकारीहरूको संख्या ३९.४३% पुगेको छ । नेपालको अर्थतन्त्रमा सहकारी क्षेत्रको योगदान २०% भन्दा बढी र कुल ग्राहस्थ्य उत्पादनमा ५% भन्दा बढी योगदान रहेको छ ।

यसैगरी दोलखा जिल्लामा डिभिजन सहकारी कार्यालय दोलखाको सहकारी सचेतना पुस्तिका २०७४ अनुसार कुल ५२४ दर्ता भएको देखिएता पनि केही संस्थाहरू एकीकरण भई हाल ५०३ वटा सहकारीहरू संस्थाहरू क्रियाशील छन् जसमा १५ वटा विषयगत सहकारीहरूमध्ये ५ वटाको जिल्ला संघ (बचत तथा ऋण, कृषि, उपभोक्ता, बहुउद्देश्यीय, दुग्ध) स्थापना भएका छन् । यी संस्थाहरूमा करिव १ लाख ९० हजार सदस्यहरू आवद्ध छन् जसमा ४६.८८% पुरूष र ५३.११% महिला रहेका छन् । यसैगरी ती संस्थाहरूमा कुल पूँजी करिव रू. ८ अर्ब ५० करोड निर्माण भएको छ । ती सहकारीहरूमा विभिन्न तहका कुल कर्मचारी संख्या ५५० रहेको छ, जसमा महिला ५६.२७ र पुरुष ४३.७३ प्रतिशत छन् भने कुल सञ्चालक तर्फ ६१.४% पुरूष र ३८.६% महिला रहेका छन् ।

## ३. सम्मेलनको औचित्य

**निम्न ५ वटा आयामहरूलाई ध्यानमा राखी यो सम्मेलन आयोजना गरिएको छः**

क. **संयुक्त राष्ट्र संघको योजनाः** सदस्य राष्ट्रहरूको दीगो विकासमा योगदान गर्न संयुक्त राष्ट्र संघले सन् २०१६-३० का लागि 'दीगो विकास लक्ष्य २०३०' कार्यान्वयनमा ल्याएको छ । वर्तमान सन्दर्भमा दीगो विकास लक्ष्यअनुसार नेपालले तय गरेका विकास लक्ष्यहरूलाई प्राप्त गर्नका लागि स्थानीय तह र सहकारीहरूको तर्फबाट एकीकृत योगदानका कार्ययोजनाहरू विकास गर्ने उद्देश्यले प्रस्तुत सम्मेलनको आयोजना गरिएको हो ।

ख. **राष्ट्रिय योजना आयोगको दीर्घकालीन सोचः** १५ औं राष्ट्रिय योजनाले भर्खरै आ.व. २०७६/७७ को पञ्चवर्षीय योजना र सं. २१०० सम्मको दीर्घकालीन सोचको खाका तयार गरेको छ । योजनाले २५ वर्षमा 'समृद्ध, नेपाल सुखी नेपाली' को राष्ट्रिय लक्ष्य प्राप्तिका लागि सहकारी क्षेत्रले उद्यमीलता मार्फत रोजगार तथा स्वरोजगारमा उल्लेख्य योगदान गर्ने

भूमिका स्पष्ट किटान गरेको छ । सो लक्ष्यतर्फ प्रारम्भबाटै उन्मुख हुने उद्देश्यका साथ यो सम्मेलन आयोजना गरिएको हो ।

ग. **सहकारी क्षेत्रको प्रतिवद्धताः** अन्तर्राष्ट्रिय तथा राष्ट्रिय लक्ष्यहरूकै बाटो समाउने ध्येयका साथ सहकारीहरूले यस वर्षको सहकारी दिवसको नारा पनि दीगो विकास लक्ष्य प्राप्तिका लागि सहकारी लाई नै निरन्तरता दिएका छन् । सैद्धान्तिक तत्परता देखाए तापनि कार्यक्रमिक रूपमा ठोस् योजनाका साथ अघि बढ्न बाँकी नै रहेको अवस्थालाई मनन गरी अब त्यसतर्फ जान स्थानीयस्तरबाट ठोस् पहल गर्ने लक्ष्यका साथ यो सम्मेलन आयोजना गरिएको हो ।

घ. **स्थानीय सरकारको प्रतिवद्धताः** सहकारी व्यवस्थापनको कानूनी दायित्व र विकास अवधारणाको संस्थागत आवश्यकतालाई महसुस गरी स्थानीय सरकारले सहकारी क्षेत्रको साझेदारी र सहकार्यलाई आफ्ना वार्षिक तथा दीर्घकालीन योजनामा समावेश गरिरहेका छन् । दोलखाको सन्दर्भमा ९ वटा स्थानीय तहमध्ये ७ वटाले सहकारी ऐन, नियम तथा कार्यविधिहरू तयार गरिसकेका छन् भने सबैले सरकार(सहकारी साझेदारीसम्बन्धी नीति, कार्यक्रम तथा बजेटको समेत व्यवस्था गरेका छन् । तर यति हुँदा पनि संक्रमणकालीन संस्थागत व्यवस्थापनको कारण स्थानीय तहमा सहकारी व्यवस्थापन र सहकार्यको ठोस् उपलब्धीहरू हासिल हुन सकेका छैनन् । यो अवस्थालाई चिर्दै अघि बढ्नका लागि जिल्लास्तरमा साझा धारणा र स्पष्ट कार्ययोजनासाथ अघि बढ्ने वातावरण निर्माण गर्ने उद्देश्यले यो सम्मेलन आयोजना गरिएको छ ।

ङ. **सहकारी क्षेत्रको वर्तमान उपलब्धी र आवश्यकताः** सहकारी अभियानले मूलतः ग्रामिण वित्तीय पूँजी निर्माणमा उल्लेख्य योगदान गरेको छ । यसका साथै आर्थिक, सामाजिक विकासमा पनि महत्वपूर्ण योगदान पुऱ्याएको छ । तर यति हुँदा हुँदै पनि वित्तीय वृद्धि र सांगठनिक विस्तारको गतिको तुलनामा यसले दीगो आर्थिक क्रियाकलापहरू विस्तार गरी गरिबी निवारण तथा आर्थिक सामाजिक समृद्धिमा अपेक्षाकृत नतीजा हासिल गर्न सकेको छैन । आर्थिक रूपान्तरणका लागि स्थानीय तथा राष्ट्रिय अनुकुल वातावरण निर्माण भैरहेको विद्यमान अवस्थालाई अवसर भण्डारणको सही समय आँकलन गरी यो सम्मेलन आयोजना गरिएको हो ।

## ४. उद्देश्य

**सम्मेलनले निम्न उद्देश्य लिएको छः**

क. उद्यमशीलतामार्फत आर्थिक समृद्धिमा योगदान गर्न अन्तर सहकारी र स्थानीय तहबिच साझा बुझाई र सहमति विकास गरी आगामी आ.व. बाट ठोस् योजनाका साथ अघि बढ्न पुर्व तयारी गर्ने ।

ख. उद्यमशीलता, आर्थिक समृद्धि, सहकारी सुशासन तथा सहकारी र स्थानीय तह साझेदारीका लागि विद्यमान कानूनी, नीतिगत तथा व्यवस्थापकीय सवालहरू (प्रशासनिक, प्राविधिक आदि) पहिचान गरी सो को प्राथमिकतासाथ सम्बोधन गर्न, गराउन सम्बन्धित सबै पक्ष र तहबिच सिफारिस गर्ने ।

ग. उद्यमशीलता तथा आर्थिक रूपान्तरणसम्बन्धी तत्कालैबाट शुरू गर्न सकिने केही नवीन ढाँचा र परियोजनाहरू पहिचान गरी सो अघि बढाउने कार्ययोजना तयार गर्ने ।

## ५. नारा

वर्तमान सरकारको मूल विकास नारा 'समृद्ध नेपाल, सुखी नेपाली' अभियानलाई सहकारी क्षेत्रबाट उद्यमशीलता प्रवर्द्धनमार्फत गरिबी न्यूनिकरणमा योगदान गर्ने उद्देश्यले सम्मेलनको निम्न नारा तय गरिएको छः

*सहकारी अभियानको आगामी कार्यदिशा,*
*आर्थिक रूपान्तरणका लागि उद्यमशीलता ।*

## ६. अपेक्षित उपलब्धी

**क. तत्कालिन उपलब्धी**

- आर्थिक रूपान्तरणमार्फत समृद्ध नेपाल निर्माणमा योगदान गर्नका लागि अन्तर्राष्ट्रिय मान्यता, राष्ट्रिय लक्ष्य, स्थानीय आवश्यकता र क्षमतासँग संगति हुने गरी सहकारी मोडेलको विकास ढाँचा तथा रणनीति पहिचान हुनेछ ।

- सहकारी मोडेलमा सहकारी र स्थानीय तहको साझेदारीमा आगामी आ.व. बाट शुरू गर्न सकिने तीनवर्षे लक्ष्य तथा नमुना कार्यक्रमहरू तय हुनेछ ।
- सम्मेलनको लक्ष्य र उद्देश्य प्राप्तिका लागि घोषणापत्रमार्फत संयुक्त प्रतिवद्धता सार्वजनिक हुनेछ ।
- उद्यमशीलता, आर्थिक समृद्धि, सहकारी सुशासन तथा सहकारी र स्थानीय तह साझेदारीका लागि पहिचान भएका विद्यमान कानूनी, नीतिगत तथा व्यवस्थापकीय सवालहरूको सम्बोधन गर्न सरकारका तहगत संरचनाहरूमा सम्मेलनको सिफारिस पेश हुनेछ ।
- उद्यमशीलता तथा सहकारी सूचना व्यवस्थापनसम्बन्धी जिल्लास्तरीय डिजिटल प्रविधि विस्तारको काम अघि बढ्नेछ ।
- सम्मेलन प्रतिवेदन प्रकाशन भई सबै सहभागी तथा प्रमुख सरोकारवालाहरूमा वितरण हुनेछ ।
- योजना कार्यान्वयनमा आए नआएको यकिन गर्न र थप रणनीति तय गर्न २०७६ मंसीरको अन्तमा सरोकारवालाहरूको प्रतिनिधिमूलक अनुगमन तथा समीक्षा बैठक आयोजना हुनेछ ।

**ख. दीर्घकालीन योजना**

◆ आ.व. २०७८/०७९ को अन्त्यमाः

  - जिल्लाका सबै पालिका (९) र वडामा (७४) कम्तीमा १२१ वटा सहकारी सञ्चालित तथा व्यवस्थित उद्यमहरू सञ्चालनमा आएका हुनेछन् (१ सहकारी, १ वडा, १ उद्यम) ।
  - सहकारी सञ्चालित तथा व्यवस्थित ती उद्यमहरूमा कम्तीमा १००० निम्न तथा गरीब परिवारका सदस्यहरू प्रत्यक्ष रोजगार तथा स्वरोजगारमा संलग्न हुनेछन् ।
  - प्रत्यक्ष रोजगार तथा स्वरोजगारमा संलग्न व्यक्ति र परिवारको मासिक आम्दानी कम्तीमा रू. २०,००० हुनेछ ।
  - प्रस्तुत नतीजा अनुगमन तथा मापनको प्रभावकारी संयन्त्र र प्रविधि सञ्चालनमा हुनेछ ।

## ७. सम्मेलनको स्वरूप

### ७.१ आयोजक

- आयोजकः जिल्ला सहकारी संघ लि. दोलखा र दोलखा जिल्ला बचत तथा ऋण सहकारी संघ लि. हुनेछन् ।
- सहयोगीः आयोजक समितिले निर्धारण गरेको आर्थिक सहयोग गर्ने संस्थाहरू सम्मेलन सहयोगी बन्नेछन् ।
- सम्मेलन व्यवस्थापनका लागि विभिन्न विषयगत समितिहरू बनाई परिचालन गरिनेछ । जसमा मुख्यतया सहभागी व्यवस्थापन, कार्यक्रम व्यवस्थापन, कार्यपत्र तथा सत्र व्यवस्थापन, आर्थिक व्यवस्थापन समितिहरू हुनेछन् ।

### ७.२ मिति तथा स्थान

- सम्मेलन मिति र स्थानः सम्मेलन २७-२८ बैशाख २०७६ मा ए वान पार्टी प्यालेस चरिघ्याङ्ग चरिकोट, दोलखामा आयोजना हुनेछ ।
- जि.स.स प्रतिनिधि
- प्रदेश तथा संघीय संसदका प्रतिनिधिहरू
- जिल्ला कार्यालयहरू

### ७.३ सहभागी

सम्मेलनमा निम्न क्षेत्रबाट प्रतिनिधित्व हुने गरी जम्मा ३५० जनासम्मको सहभागिता हुनेछः

**क. सहकारी संस्थाः**

- आयोजक समितिका पदाधिकारी तथा कर्मचारीहरू

- विषयगत संघका प्रतिनिधिहरू (जिल्ला,प्रदेश,संघ)
- प्राथमिक संस्थाका प्रतिनिधिहरू

**ख. स्थानीय सरकारः**

- गाउँ र नगरपालिकाका प्रमुख र उपप्रमुख र सहकारी संयोजकहरू

**ग. वित्तीय संस्थाः** बैंकिङ्ग तथा वित्तीय संस्थाका प्रतिनिधिहरू

**घ. राजनीतिक दलः** जिल्लाका राजनीतिक दलका प्रतिनिधिहरू

**ङ. संघ संस्था तथा विज्ञहरूः** उद्यमशीलता सम्वद्ध सरकारी, गैरसरकारी संस्था तथा विज्ञहरू

**च. निजी क्षेत्रः** जिल्लाका उद्योग तथा वाणिज्य संघ प्रतिनिधिहरू

**छ. मिडियाः** स्थानीय तथा राष्ट्रिय मिडियाका सञ्चारकर्मीहरू

**ज. कार्यपत्र प्रस्तोताहरू**

**झ. कलाकारहरू तथा सर्जकहरू**

**ञ. अन्य**

### ७.४ मुख्य क्रियाकलापहरू

**क. पुर्वतयारी**

- रेडियो अन्तर्वार्ताः ०२ देखि १५ बैशाखसम्म (प्रतिनिधिमूलक ४ वटासम्म) ।
- प्रेस मिटः १५ बैशाख २०७६ ।
- बुलेटिन प्रकाशनः सहकारी उद्यमशीलताका उपलब्धीहरू, अन्तर्वार्ता, प्रचार प्रसारः १७ बैशाखभित्र ।
- बाइक न्यालीः २६ बैशाख ।
- प्रेस मिटः २६ बैशाख ।

**ख. सम्मेलन अवधि**

- बजार परिक्रमा
- उद्घाटन सत्रः जिल्लाको स्थितिपत्र र कार्यपत्रको सारांश प्रस्तुती तथा अतिथि मन्तव्य
- कार्यपत्र प्रस्तुति सत्रः ६ वटा कार्यपत्र प्रस्तुति र छलफल ।
- सहभागी स्तरीय तथा पालिकास्तरीय ३ वर्षे कार्ययोजना निर्माण ।
- घोषणासभाः सहकारी उद्यमशीलतामार्फत आर्थिक समृद्धिका लागि दोलखा घोषणापत्र २०७६ जारी ।

**ग. सम्मेलनपछिः**

- सम्मेलन प्रतिवेदन प्रकाशन, सार्वजनिकरण र वितरण ।
- सहकारी उद्यमशीलता विस्तारका लागि कानूनी, नीतिगत तथा व्यस्थापकीय सुधार र व्यवस्थापनका लागि स्थानीय, प्रदेश र संघीय सरकारका प्रतिनिधिहरूलाई सम्मेलनको सिफारिसपत्र पेश ।
- सम्मेलनका उपलब्धीहरूको आरम्भ अनुगमनका लागि २०७६ मंसीरको अन्तमा सरोकारवालाहरूको प्रतिनिधिमूलक अनुगमन तथा समीक्षा बैठक आयोजना हुनेछ ।

### ७.५ अन्य व्यवस्थापन

यस योजनापत्रको आधारमा सम्मेलन आयोजक समिति तथा उपसमितिहरूले आ–आफ्नो कार्यक्षेत्रको आवश्यक निर्णय तथा विस्तृत कार्ययोजनाहरू तयार गरी लागु गर्नेछन् ।

## ८. बजेट व्यवस्थापन

क. कुल बजेट र स्रोतः सम्मेलनको लागि कुल खर्च रू. २१ लाख लाग्ने अनुमान गरिएको छ । उक्त स्रोतको अधिकांश अंश सहकारी क्षेत्रबाट जुटाइने र बाँकी अंश सहकारीका माथिल्लो निकायहरू, स्थानीय सरकार, प्रदेश तथा संघीय सरकार र बुलेटिन विज्ञापनबाट व्यवस्थापन गर्ने लक्ष्य राखिएको छ ।

## ९. स्थितिपत्र तथा कार्यपत्रहरू

### क. उद्घाटन सत्रमा प्रस्तुत गर्ने

- दोलखा जिल्लामा सहकारी विकासको वर्तमान अवस्थाः हेमन्त चौलागाईं, अध्यक्ष, जिल्ला सहकारी संघ लि.
- दोलखा बृहत सहकारी सम्मेलनका कार्यपत्रहरूको सारांशः बिर्ख छेत्री, सम्मेलन सहजकर्ता

### ख. प्राविधिक सत्रमा प्रस्तुत गर्ने

- **दोलखामा सहकारी उद्यमशीलताः** वर्तमान अवस्था र भविष्यको बाटो – सुमन उप्रेती, उद्यम तथा सहकारी विकासकर्मी
- **सहकारी व्यवस्थापन र उद्यमशीलतामा स्थानीय सरकारको भूमिकाः** डबल पाण्डे/प्रेमप्रसाद अधिकारी
- **संघीय संरचनामा सहकारी संगठनः** कानूनी व्यवस्था र विकास नीतिहरू – सुदर्शन प्रसाद ढकाल, पूर्व रजिष्ट्रार, सहकारी विभाग
- **दीगो विकास लक्ष्य प्राप्तिका लागि सहकारी क्षेत्रको कार्ययोजनाः** सरिता भट्टराई, बोर्ड सदस्य, राष्ट्रिय सहकारी बैंक लि., काठमाडौ
- **सहकारी विकासमा जनशक्ति व्यवस्थापनः** सक्षम नेतृत्व, दक्ष कर्मचारी र सुशासनः प्रा.डा. केशव खड्का, पूर्व विभागीय प्रमुख, अर्थशास्त्र विभाग, पाटन क्याम्पस
- **आर्थिक रूपान्तरण र उद्यमशीलताका लागि सहकारी नेतृत्वः** नवराज सिम्खडा, लघुवित्त तथा सहकारीविद

# आयोजक समितिको विवरण

| क्र.सं. | नाम | पद | प्रतिनिधि संस्था | ठेगाना (पालिका) | संस्थामा पद | मोबाईल नं. |
|---|---|---|---|---|---|---|
| क | मूल समारोह समिति (११ जना) | | | | | |
| १ | हेमन्त चौलागाईं | संयोजक | जिल्ला सहकारी संघ लि. | भीमेश्वर नगरपालिका | अध्यक्ष | ९८५१००२११९ |
| २ | जिवसराज खड्का | सह-संयोजक | दोलखा जिल्ला बचत तथा ऋण सहकारी संघ लि. | भीमेश्वर नगरपालिका | अध्यक्ष | ९८५४०४५७७७ |
| ३ | श्यामकाजी कटुवाल | सदस्य | दोलखा जिल्ला बहुउद्देश्यीय सहकारी संघ लि. | भीमेश्वर नगरपालिका | अध्यक्ष | ९७५४२०१४५१ |
| ४ | अम्बिका गोले | सदस्य | दोलखा जिल्ला कृषि सहकारी संघ लि. | भीमेश्वर नगरपालिका | अध्यक्ष | ९८५१०७८९७९ |
| ५ | जगत प्रसाद सुवेदी | सदस्य | दोलखा जिल्ला बचत तथा ऋण सहकारी संघ लि. | भीमेश्वर नगरपालिका | कोषाध्यक्ष | ९८६९१२४३२३ |
| ६ | भीम प्रसाद दहाल | सदस्य | दोलखा जिल्ला बचत तथा ऋण सहकारी संघ लि. | भीमेश्वर नगरपालिका | उपाध्यक्ष | ९८५४०४५१५७ |
| ७ | रत्न बहादुर श्रेष्ठ | सदस्य | जिल्ला सहकारी संघ लि. | भीमेश्वर नगरपालिका | उपाध्यक्ष | ९८५४०४५२७९ |
| ८ | देवी प्रसाद शर्मा | सदस्य | जिल्ला सहकारी संघ लि. | भीमेश्वर नगरपालिका | महासचिव | ९८४४१८५४४४ |
| ९ | अनिल श्रेष्ठ | सदस्य | दोलखा जिल्ला बचत तथा ऋण सहकारी संघ लि. | भीमेश्वर नगरपालिका | महासचिव | ९८५११०१३४६ |
| १० | रूपा भुजेल | सदस्य | जिल्ला सहकारी संघ लि. | भीमेश्वर नगरपालिका | सचिव | ९८४४०६०५४६ |
| ११ | कृष्ण प्रसाद दहाल | सदस्य | जिल्ला सहकारी संघ लि. | भीमेश्वर नगरपालिका | कोषाध्यक्ष | ९८५४०४५५१७ |
| ख | सचिवालय समिति (५) | | | | | |
| १ | हेमन्त चौलागाईं | संयोजक | जिल्ला सहकारी संघ लि. | भीमेश्वर नगरपालिका | अध्यक्ष | ९८५१००२११९ |
| २ | जिवसराज खड्का | सह-संयोजक | दोलखा जिल्ला बचत तथा ऋण सहकारी संघ लि. | भीमेश्वर नगरपालिका | अध्यक्ष | ९८५४०४५७७७ |
| ३ | भीम प्रसाद दहाल | सदस्य | दोलखा जिल्ला बचत तथा ऋण सहकारी संघ लि. | भीमेश्वर नगरपालिका | उपाध्यक्ष | ९८५४०४५१५७ |
| ४ | रूपा भुजेल | सदस्य | जिल्ला सहकारी संघ लि. | भीमेश्वर नगरपालिका | सचिव | ९८४४०६०५४६ |
| ५ | कृष्ण प्रसाद दहाल | सदस्य | जिल्ला सहकारी संघ लि. | भीमेश्वर नगरपालिका | कोषाध्यक्ष | ९८५४०४५५१७ |
| ग | आर्थिक व्यवस्थापन उपसमिति (९) | | | | | |
| १ | कृष्ण प्रसाद दहाल | संयोजक | जिल्ला सहकारी संघ लि. | भीमेश्वर नगरपालिका | कोषाध्यक्ष | ९८५४०४५५१७ |
| २ | जगत प्रसाद सुवेदी | सदस्य | दोलखा जिल्ला बचत तथा ऋण सहकारी संघ लि. | भीमेश्वर नगरपालिका | कोषाध्यक्ष | ९८६९१२४३२३ |
| ३ | नीमा लामा | सदस्य | जिल्ला सहकारी संघ लि. | भीमेश्वर नगरपालिका | संचालक | ९८५१२४३४३९ |
| ४ | ईश्वर प्रसाद न्यौपाने | सदस्य | मिलीजुली साकोस | भीमेश्वर नगरपालिका | प्रमुख कार्यकारी अधिकृत | ९८५४०४५३९७ |
| ५ | मीन कुमार खड्का | सदस्य | आनन्ददायक बहुउद्देश्यीय सहकारी संस्था लि. | कालिञ्चोक गाउँपालिका | अध्यक्ष | ९८६४००४९२४ |
| ६ | राम खत्री | सदस्य | एकीकृत फ्रेन्डसिप साकोस | जिरी नगरपालिका | व्यवस्थापक | ९८४९०९४९२९ |
| ७ | भेष बहादुर मिजार | सदस्य | जनमुखी साकोस | बैतेश्वर गाउँपालिका | व्यवस्थापक | ९८५१२४६८६२ |
| ८ | मेघराज घिमिरे | सदस्य | भीमेश्वर बहुउद्देश्यीय सहकारी संस्था लि. | तामाकोशी गाउँपालिका | व्यवस्थापक | ९८६१०५२१२० |
| ९ | श्रीराज पोखरेल | सदस्य | गाउँघर सानाकिसान कृषि सहकारी संस्था लि. | मेलुङ्ग गाउँपालिका | अध्यक्ष | ९८४३५२९०२१ |

| क्र.सं. | नाम | पद | प्रतिनिधि संस्था | ठेगाना (पालिका) | संस्थामा पद | मोबाईल नं. |
|---|---|---|---|---|---|---|
| घ | प्रतिवेदन, कार्यपत्र तथा सेसन व्यवस्थापन उपसमिति (५ जना) | | | | | |
| १ | हेमन्त चौलागाई | संयोजक | जिल्ला सहकारी संघ लि. | भीमेश्वर नगरपालिका | अध्यक्ष | ९८५१००२११९ |
| २ | गोपालध्वज श्रेष्ठ | सदस्य | शिक्षक कल्याण साकोस | भीमेश्वर नगरपालिका | अध्यक्ष | ९८५४०४५४०० |
| ३ | सोममैयाँ श्रेष्ठ | सदस्य | त्रिपुरा महिला सहकारी संस्था लि. | भीमेश्वर नगरपालिका | अध्यक्ष | ९८४९३८९५९५ |
| ४ | दिपक बस्नेत | सदस्य | हाम्रो जनकल्याण साकोस | भीमेश्वर नगरपालिका | प्रमुख कार्यकारी अधिकृत | ९८५१०७६२५३ |
| ५ | नवराज दहाल | सदस्य | जनसचेतन साकोस | बैतेश्वर गाउँपालिका | प्रमुख कार्यकारी अधिकृत | ९८५४०४५८९६ |
| ङ | कार्यक्रम तथा सहभागी व्यवस्थापन उपसमिति (७) | | | | | |
| १ | जिवसराज खड्का | संयोजक | दोलखा जिल्ला बचत तथा ऋण सहकारी संघ लि. | भीमेश्वर नगरपालिका | अध्यक्ष | ९८५४०४५७७७ |
| २ | भूमिराज खड्का | सदस्य | दोलखा जिल्ला बचत तथा ऋण सहकारी संघ लि. | जिरी नगरपालिका | उपाध्यक्ष | ९८५१२०४८५१ |
| ३ | नारायण बहादुर श्रेष्ठ | सदस्य | मिलीजुली साकोस | भीमेश्वर नगरपालिका | अध्यक्ष | ९८५४०४५९४३ |
| ४ | रामचन्द्र बस्नेत | सदस्य | हाम्रो जनकल्याण साकोस | भीमेश्वर नगरपालिका | अध्यक्ष | ९८४४०१३६२२ |
| ५ | शर्मिला सापकोटा | सदस्य | परोपकार महिला साकोस | भीमेश्वर नगरपालिका | अध्यक्ष | ९८४४२३९५२० |
| ६ | प्रविन श्रेष्ठ | सदस्य | जुनतारा कृषि सहकारी संस्था लि. | भीमेश्वर नगरपालिका | अध्यक्ष | ९८५११५३६७५ |
| ७ | मनकुमार श्रेष्ठ | सदस्य | अर्थभूमी साकोस | भीमेश्वर नगरपालिका | व्यवस्थापक | ९८४५१९२२१० |
| छ | सञ्चार तथा प्रकाशन उपसमिति (७) | | | | | |
| १ | अनिल श्रेष्ठ | संयोजक | दोलखा जिल्ला बचत तथा ऋण सहकारी संघ लि. | भीमेश्वर नगरपालिका | महासचिव | ९८५११०१३४६ |
| २ | दिल बहादुर के.सी | सदस्य | जनउपकार साकोस | गौरीशंकर गाउँपालिका | सचिव | ९८५११७९४४५ |
| ३ | रमेशचन्द्र बस्नेत | सदस्य | जनहित सहकारी संस्था लि. | भीमेश्वर नगरपालिका | व्यवस्थापक | ९८४१५६५५६० |
| ४ | विनिता शिवाकोटी | सदस्य | रेडियो शैलुङ्ग | भीमेश्वर नगरपालिका | स्टेशन म्यानेजर | ९८५४०४५९६३ |
| ५ | श्याम प्रसाद खतिवडा | सदस्य | जिल्ला सहकारी संघ लि. | भीमेश्वर नगरपालिका | लेखा समिति सदस्य | ९८५११५४२५२ |
| ६ | रविन्द्र गौतम | सदस्य | रेडियो भीमेश्वर | भीमेश्वर नगरपालिका | स्टेशन म्यानेजर | ९८५१२११९१९ |
| ७ | प्रतिभा घिमिरे | सदस्य | भविश्य निर्माण महिला साकोस | बैतेश्वर गाउँपालिका | अध्यक्ष | ९८४४४६६४९२ |
| ज | सम्मेलन प्रतिवेदक (२) | | | | | |
| १ | अर्जुन दहाल अपवात | सदस्य | स्वतन्त्र संचारकर्मी | बैतेश्वर गाउँपालिका | सम्मेलन सहयोगी | ९८४४४६६७७५ |
| झ | सम्मेलन सहजकर्ता (१) | | | | | |
| १ | बिर्ख क्रान्ति | प्रमुख परामर्शदाता | दिव्यदृष्टि नेपाल | काठमाडौं | अध्यक्ष | ९८५१२४२४१० |
| ञ | सहकारी संघ कर्मचारी (१) | | | | | |
| १ | अनिल दहाल | व्यवस्थापक | जिल्ला सहकारी संघ लि. | भीमेश्वर नगरपालिका | व्यवस्थापक | ९८५१२४५५१६ |

# सम्मेलनको कार्यविभाजन

| क्र.सं. | विषयगत समिति र जिम्मेवारी | सम्पन्न गर्ने मिति | जिम्मेवार व्यक्ति | सम्पन्न मिति |
|---|---|---|---|---|
| क | मूल समारोह समिति (११ जना) | आवश्यकता अनुसार | हेमन्त चौलागाईं | |
| १ | कार्यक्रमको अवधारणा र कार्ययोजना तयार गर्ने | | | |
| ३ | सम्मेलन आयोजक समिति गठन र परिचालन गर्ने | | | |
| ४ | कर्मचारी, सहयोगी, सहजकर्ता, निर्धारण | | | |
| ५ | सचिवालय परिचालन गर्ने | | | |
| ६ | आवश्यक नीति नियम, निर्णय तथा योजनाहरू तयारी गर्ने | | | |
| ७ | सम्मेलनको समग्र व्यवस्थापन समन्वय तथा संयोजन गर्ने | | | |
| ख | सचिवालय समिति | आवश्यकता अनुसार | हेमन्त चौलागाईं | |
| ७ | कार्यक्रमको प्रस्तावपत्र तथा विस्तृत कार्ययोजना तयारी र कार्यान्वयन | | | |
| ८ | सबै कामहरूको संयोजन गर्ने | | | |
| ९ | सम्मेलन अभिलेख व्यवस्थापन गर्ने तथा गराउने | | | |
| १० | प्रशासनिक कार्य सञ्चालन | | | |
| ११ | कर्मचारी, सहयोगी, सहजकर्ता, परिचालन | | | |
| १२ | स्थानीय तह, प्रदेश तथा केन्द्रीय सरकार र संघसँग समन्वय गर्ने | | | |
| १३ | सहकारी संस्था तथा जिल्लाका सरोकारवालाहरूसँग समन्वय गर्ने | | | |
| १४ | सम्मेलन प्रतिवेदन (नीतिगत सुधारका सिफारिस तथा घोषणापत्र) सरकारका सम्बन्धित तहहरूमा पेश गर्ने | | | |
| १५ | सम्मेलनका उपलब्धीहरू कार्यान्वयन तथा अनुगमनका लागि योजना र संयन्त्र बनाउने | | | |
| १६ | सबै सहभागीहरूलाई प्रतिवेदन वितरण तथा वेभपेजमा अपलोड | | | |
| ग | आर्थिक व्यवस्थापन समिति | २०७६/१/४ | कृष्ण प्रसाद दहाल | |
| १७ | विस्तृत आर्थिक योजना तथा कार्यविधि बनाई कार्यान्वयन गर्ने, गराउने | | | |
| १८ | सम्मेलनको नाममा अलग्गै बैंक खाता सञ्चालन गर्ने | | | |
| १९ | सम्मेलन अगावै खर्च धान्ने गरी आर्थिक संकलन गरिसक्ने | | | |
| २० | प्रचलित नियम तथा मापदण्डअनुसार लेखा व्यवस्थापन गर्ने | | | |
| २१ | सेवा सामाग्री खरीद तथा भुक्तानी गर्ने | | | |
| २२ | आर्थिक योजनाको आधारमा सबै समितिहरूको योजना व्यवस्थित गर्ने | | | |
| २३ | सम्मेलनको आर्थिक विवरण सार्वजनिक गर्ने | | | |
| २४ | सम्मेलनबाट प्राप्त निचोडको कार्यान्वयनका लागि आर्थिक योजना बनाउने | | | |
| घ | प्रतिवेदन, कार्यपत्र तथा सेसन व्यवस्थापन समिति | आवश्यकता अनुसार | हेमन्त चौलागाईं | |
| २५ | कार्यपत्र प्रस्तोता छनौट गरी जिम्मेवारी दिने, समन्वय गर्ने | | | |
| २६ | जिल्लाको सहकारी तथा उद्यमको स्थितिपत्र तयारी गर्ने | | | |
| २७ | सहकारी तथा स्थानीय तहको उद्यमशीलता योजना संकलन गर्ने (चालु र आगामी ३ वर्ष) | | | |
| २८ | सम्मेलन विशेष बुलेटिन प्रकाशन गर्ने | | | |
| २९ | कार्यपत्र संकलन गरी सम्मेलनअगावै सहभागी तथा अतिथिलाई वितरण गर्ने | | | |
| ३० | सम्मेलनको समग्र प्रक्रियाको अभिलेख राख्ने र सम्मेलन प्रतिवेदन तयार गर्ने | | | |
| ३१ | सम्मेलन सत्रको नोट लेखनको व्यवस्थापन गर्ने | | | |
| ३२ | सम्मेलन सत्रको योजना तालिका तयार गर्ने | | | |
| ३३ | सम्मेलन सत्रको अध्यक्षता, अतिथि, सहजकर्ता, प्रतिवेदकको व्यवस्था गर्ने | | | |
| ३४ | कार्यपत्र सत्र सञ्चालन गर्ने | | | |
| ३५ | घोषणापत्र समिति गठन र परिचालन गर्ने | | | |
| ३६ | सम्मेलन स्मारिक (प्रतिवेदन) प्रकाशन गर्ने | | | |

| क्र.सं. | विषयगत समिति र जिम्मेवारी | सम्पन्न गर्ने मिति | जिम्मेवार व्यक्ति | सम्पन्न मिति |
|---|---|---|---|---|
| ङ | **कार्यक्रम तथा सहभागी व्यवस्थापन समिति** | ०७६/१/३ | जिवसराज खड्का | |
| ३७ | सहभागी छनौटको आधार र विस्तृत योजना तयार गर्ने | | | |
| ३८ | सहभागी व्यवस्थापनको विस्तृत योजना बनाई कार्यान्वयन गर्ने | | | |
| ३९ | सहभागी सूची तयार गरी पत्राचार र सहभागिता यकिन गर्ने | | | |
| ४० | सहभागीहरूको विस्तृत विवरण देखिने गरी उपस्थिति रेकड तयार गर्ने | | | |
| ४१ | आवास, खाना, खाजा, पानी, सफाई, यातायात, सुरक्षाको व्यवस्थापन गर्ने | | | |
| ४२ | अतिथि तथा सहभागी स्वागत, दर्ता र विदाइको व्यवस्थापन गर्ने | | | |
| ४३ | अतिथि यातायात तथा स्थानीय पर्यटकीय भ्रमणको प्रबन्ध मिलाउने | | | |
| ४४ | सहभागी स्टेशनरी तथा स्रोत सामाग्री व्यवस्थापन र वितरण गर्ने | | | |
| ४५ | स्वयंसेवक व्यवस्थापन तथा परिचालन गर्ने | | | |
| ४६ | सम्मेलनस्थल व्यवस्थापनः स्टेज, साउण्ड सिस्टम, विद्युत, सरसफाई, फर्निचर | | | |
| ४७ | कार्यक्रम व्यवस्थापेनः र्‍याली, उद्घाटन सत्र, सांस्कृतिक कार्यक्रम, समापन | | | |
| ४८ | सामाग्री व्यवस्थापनः र्‍याली, उद्घाटन तथा स्वागत, प्राविधिक सत्र तथा समापन सत्र सामाग्री | | | |
| ४९ | फोटो, भिडियो, अडियो रेकडको व्यवस्था गर्ने | | | |
| ५० | स्थानीय यातायात | | | |
| ५१ | सफल सम्मेलनका लागि आवश्यक अन्य कामहरू | | | |
| च | **प्रचार प्रसार तथा प्रकाशन समिति** | ०७६/१/४ | अनिल श्रेष्ठ | |
| ५२ | व्यान्नर व्यवस्थापनः व्यान्नरका स्थान, विषय, संख्या, स्वरूप, प्रायोजन, राख्ने, झिक्ने व्यवस्था | | | |
| ५३ | पत्रकार सम्मेलनः आरम्भ, अन्तिम तयारी, सम्पन्न र खर्च सार्वजनिक | | | |
| ५४ | प्रकाशन तथा प्रशारणः रेडियो अन्तर्वार्ता (कम्तीमा ४ वटा), विज्ञ, प्रशासक तथा नेता वार्ता, समाचार, फिचर प्रकाशन | | | |
| ५५ | सम्मेलन विशेष बुलेटिन प्रकाशन | | | |
| ५६ | सम्मेलन स्मारिका प्रकाशन | | | |
| ५७ | सहकारी अनलाइन स्रोतकेन्द्र स्थापना | | | |
| ५८ | वेभपेजमा स्मारिका अपलोड | | | |
| छ | **सम्मेलन प्रतिवेदक** | आवश्यकतानुसार | नविन, अर्जुन | |
| ५९ | कार्य विवरण अनुसारको सम्पूर्ण योजना तथा प्रतिवेदनमा प्राविधिक सहयोग गर्ने | | | |
| ज | **सम्मेलन सहजकर्ता** | आवश्यकतानुसार | बिर्ख क्रान्ति | |
| ६० | सम्मेलनको अवधारणा, योजना, सहजीकरण, प्रतिवेदनमा सहयोग गर्ने | | | |
| ६१ | कार्यपत्र तयारीमा सहयोग तथा संयोजन गर्ने | | | |
| झ | **सहकारी संघ कर्मचारी** | आवश्यकतानुसार | अनिल दहाल | |
| ६२ | रेकड व्यवस्थापन तथा योजना अनुसार अन्य कार्यमा सहयोग गर्ने | | | |
| ६३ | संघको वेबसाइट अपडेट गराउने | | | |
| ६४ | प्रशासनिक कार्यमा सहयोग गर्ने | | | |

### सम्मेलन तयारी प्रेस विज्ञप्ति

# दोलखा बृहत सहकारी सम्मेलन २०७६

### प्रेस विज्ञप्ति

### १५ बैशाख २०७६

दोलखा जिल्लामा विभिन्न सञ्चार माध्यममा कार्यरत पत्रकारज्यू,

हार्दिक अभिवादन,

आज मिति १५ बैशाख २०७६ मा आयोजित यस प्रेस भेटघाट कार्यक्रममा यही बैशाखमा आयोजना हुन लागेको दोलखा बृहत सहकारी सम्मेलन २०७६ निम्न अनुसार सम्पन्न गरिने सार्वजनिक गर्न चाहन्छौ ।

१. **कार्यक्रमः** दोलखा बृहत सहकारी सम्मेलन २०७६ ।

२. **मितिः** २७ र २८ बैशाख २०७६ ।

३. **स्थानः** ए वान पार्टी प्यालेस, चरिकोट, दोलखा ।

४. **आयोजकः** जिल्ला सहकारी संघ दोलखा र दोलखा बचत तथा ऋण सहकारी संघको संयुक्त संरचनाः दोलखा बृहत सहकारी सम्मेलन मूल आयोजक समिति ।

५. **आयोजक समितिः** जिल्ला सहकारी संघ दोलखाका अध्यक्ष श्री हेमन्त चौलागाईंको संयोजक्रव र जिल्ला बचत तथा श्रण सहकारी संघ दोलखाका अध्यक्ष श्री जिवसराज खडकाको सह संयोजकत्वमा मूल समारोह समिति, सचिवालय समिति, आर्थिक व्यवस्थापन समिति, प्रतिवेदन, कार्यपत्र तथा सेसन व्यवस्थापन समिति, कार्यक्रम तथा सहभागी व्यस्थापन समिति, सञ्चार तथा प्रकाशन समिति, सम्मेलन प्रतिवेदक, सहजकर्ता तथा कर्मचारी गरी ४८ सदस्यीय आयोजक समिति गठन ।

६. **सहभागीः** सहकारी संस्था तथा संघहरू, स्थानीय सरकार, प्रदेश तथा संघीय सरकार, वित्तीय संस्था, राजनीतिक दल, सहकारी उद्यमशीलता सम्वद्ध गैरसरकारी तथा निजी संस्थाहरू, मिडिया, कार्यपत्र प्रस्तोता, सहजकर्ता, आयोजक समिति, कलाकारहरू र अन्य सम्बन्धित गरी ४०० जनासम्मको सहभागिता रहनेछ । जिल्लाका कुल ५२३ सहकारी संस्थाहरूमध्ये केही सहकारी संस्थाहरू एकीकरण भई हाल ५०३ वटा विषयगत संघहरू, सबै पालिका, सक्रिय सञ्चालन र पूँजी आकारको आधारमा करिव ५० प्रतिशत सहकारीहरूको सहभागिता रहनेछ ।

नारा : 'समृद्ध नेपाल, सुखी नेपाली' को दीर्घकालीन लक्ष्यलाई योगदान गर्ने गरी सम्मेलनको नारा तय गरिएको छः

**सहकारी अभियानको आगामी कार्यदिशा, आर्थिक रूपान्तरणका लागि उद्यमशीलता ।**

७. **मुख्य उद्देश्य**

समृद्ध नेपाल, सुखी नेपालीको दीर्घकालीन राष्ट्रिय लक्ष्यलाई स्थानीय सहकारीहरूको पहलमा योगदान गर्नका लागि सहकारीको समग्र संस्थागत विकासका साथै उद्यमशीलता मार्फत आर्थिक रूपान्तरणको दीर्घकालीन कार्यदिशा (भिजन २१००) निर्धारण गर्ने । सो कार्यदिशाको आधारमा आगामी ३ वर्षभित्र आम रोजगारी सिर्जनामा ठोस योगदान पुग्नसक्ने कार्यक्रहरूमध्ये सहकारी आफैंले सञ्चालन गर्नसक्ने कम्तीमा १ वटा र स्थानीय तहसँगको संयुक्त पहलमा पालिकास्तरमा सञ्चालन गर्न सकिने कम्तीमा १ वटा नमुना कार्यक्रमहरू पहिचान गरी घोषणा गर्ने ।

सहकारी उद्यमशीलताको माध्यमबाट आर्थिक रूपान्तरणबाट योगदान गर्नका लागि आवश्यक पर्ने सहकारी ऐन, नियम, नीतिहरूका प्रतिकुल पक्षहरू पहिचान गर्ने र सो अनुकुल बनाउनका लागि स्थानीय, प्रदेश तथा संघीय सरकारका सम्बन्धित तहहरूमा अनुरोध गर्ने ।

८. **क्रियाकलापहरू**

सम्मेलन अघि, सम्मेलन अवधि र सम्मेलनपछि गरी ३ चरणमा सम्मेलनमा मुख्य क्रियाकलापहरू निम्न अनुसार सञ्चालन हुनेछन्ः

**क. सम्मेलन अघि**

- प्रेस सम्मेलन
- स्थथीय रेडियोहरूमा सूचना तथा अन्तर्वार्ता
- सम्मेलन विशेष बुलेटिन प्रकाशन
- राष्ट्रिय स्तरमा सञ्चार माध्यमहरूमा आर्थिक रूपान्तरण र सहकारी उद्यमशीलताका सवालहरूमा बहस

**ख. सम्मेलन अवधि**

**२७ बैशाख**

- बजार परिक्रमा ।
- भूमि व्यवस्था, सहकारी तथा गरिबी निवारण मन्त्रीको प्रमुख आतिथ्य र संघ, प्रदेश, जिल्ला, स्थानीय तहका विशिष्ठ अतिथिहको आतिथ्यतमा उद्घाटन सत्र ।
- जिल्लाको सहकारी विकास अवस्था, स्थानीय तहको भूमिका र प्रतिवद्धता, दीगो विकास लक्ष्यमा प्राप्तिमा सहकारी क्षेत्रको कार्यययोजना, सहकारीमा जनशक्ति व्यवस्थापन, सहकारी ऐन नियम र सहकारी उद्यमशीललता विषयमा अनुभवी व्यक्तिहरूबाट ५ वटा कार्यक्रत्रहरू प्रस्तुति ।

**२८ बैशाख**

- बाँकी कार्यपत्र ।
- आर्थिक रूपान्तरण र उद्यमशीलता विकाससम्बन्धी सहकारी तथा स्थानीय तहको ३ वर्षे कार्ययोजना प्रस्तुति
- घोषणासभाः **सहकारी उद्यमशीलता मार्फत आर्थिक समृद्धिका लागि दोलखा घोषणापत्र २०७६** जारी ।

**ग. सम्मेलनपछि**

- सम्मेलन प्रतिवेदन प्रकाशन र वितरण ।
- लेखा प्रतिवेदन सार्वजनिक ।
- नीतिगत व्यवस्थापन तथा सुधारका सम्मेलनको सिफारिसपत्र पेश ।
- जिल्ला स्तरीय सहकारी डाटावेश तथा उद्यम अवस्थिति GIS तयारी ।

९. **बजेट व्यवस्थापनः** सम्मेलन सञ्चालनको मूलस्रोत सहभागी सहकारी संस्थाहरू हुनेछन् जसबाट करीब ७० प्रतिशत स्रोत जुटाउने लक्ष्य रहेको छ । बाँकी स्रोत स्थानीय तह, सम्बन्धित संघ, विभाग, मन्त्रालय र स्थानीय विज्ञापनबाट संकलन गरिने योजना रहेको छ । सम्मेलनको अनुमानित बजेट २१ लाख रहेको छ ।

१०. **अन्तिम तयारीः** सम्मेलनको अन्तिम तयारी २३ बैशाखभित्र सम्पन्न गरी सकिनेछ ।

११. **सार्वजनिक अनुरोधः** सहकारी अभियानको माध्यमबाट आर्थिक सामाजिक रूपान्तरणमा ठोस् कदम चाल्ने दीर्घकालीन सोच र उत्साहका साथ यो सम्मेलनको आयोजना गर्न लागिएकोले यसको उपलब्धीमूलक सफलताका लागि पूर्ण साथसहयोग गर्न सबै सञ्चारकर्मी, सहकारीकर्मी, स्थानीय तहहरू, सम्बन्धित संघ, विभाग, मन्त्रालय, निजीक्षेत्र, सामुदायिक संघसंस्था सबैमा हार्दिक अनुरोध गर्दछौं ।

धन्यवाद ।

संयोजक
हेमन्त चौलागाईं

सह संयोजक
जिवसराज खडका

# सम्मेलन सत्र कार्यतालिका

**क. उद्‌घाटन सत्र**

**पहिलो दिनः शुक्रबार, २७/१/२०७६**

**पुर्वसत्रः (११:००-१२:०० बजेसम्म)**

- सहभागी तथा अतिथि आगमन, दर्ता, स्टेशनरी वितरणः ११:०० देखि १२:०० बजेसम्म ।
- बजार परिक्रमा तयारीः १०:०० देखि ११:०० बजेसम्म ।

**सत्र १ः उद्‌घाटन सत्र (११:१५-२:०० बजेसम्म)**

- **स्थानीय रेडियोहरूः** रेडियो शैलुङ्ग ९२.७ मे.ह, कालिञ्चोक एफ.एम १०६.४ मे.ह, हाम्रो रेडियो १०३.४ मे.ह, रेडियो भीमेश्वर ९०.८ मे.ह, रेडियो वान, ९२.३ मे.ह, जिरी एफ.एम ९४ मे.ह बाट प्रत्यक्ष प्रशारण भइरहेको छ ।

| क्र.सं. | क्रियाकलापहरू | समय (मी.) | विधि | सामाग्री | जिम्मेवारी |
|---|---|---|---|---|---|
| १ | आसन ग्रहण | ३० | आसन तथा माल्यार्पण | नामावली, माला | स्वागत टिम (रूपा भुजेल) |
| २ | राष्ट्रिय गान | २ | अडियो तथा सहभागी गायन | अडियो गान | साउण्ड सिस्टम (प्रवीण श्रेष्ठ) |
| ३ | स्वागत मन्तव्य | ५ | मन्तव्य | नोट | सम्मेलन सहसंयोजक तथा बचत तथा ऋण सहकारी संघ लि. दोलखाका अध्यक्ष |
| ४ | उद्‌घाटन तथा बुलेटिन विमोचन | ५ | - दीप प्रज्वलन<br>- दोलखा बृहत सहकारी सम्मेलन विशेष बुलेटिन विमोचन | दीप सामाग्री, बुलेटिन | प्रमुख अतिथि, सभा अध्यक्ष, प्रतिनिधि सभा सदस्य मा. पार्वत गुरूङ |
| ५ | स्वागत गान | ५ | गायन तथा नृत्य | गायन, नृत्य | सांस्कृतिक टिम (प्रवीण श्रेष्ठ) |
| ६ | सम्मेलनको परिचय प्रस्तुति | १० | स्लाइड प्रस्तुति | प्रस्तुतिपत्र | सम्मेलन अवधारणाका मुख्य सहयोगी तथा कार्यपत्र सहजकर्ता बिर्ख छेत्री |
| ७ | दोलखामा सहकारी विकासको वर्तमान र बृहत सम्मेलनको आवश्यकता | १० | स्लाइड प्रस्तुति | प्रस्तुतिपत्र | सम्मेलन संयोजक, सभाध्यक्ष हेमन्त चौलागाईं |
| ८ | सम्मेलन सफलताको शुभकामना तथा धारणा प्रस्तुति | ९० | संस्थागत मन्तव्य | मन्तव्य सूची | अतिथिगण |
| ९ | सम्झनाको चिनो वितरण | १५ | | वितरण सुची | सभाध्यक्ष र टिम (शर्मिला) |
| १० | धन्यवाद ज्ञापन र सत्र समापन | १० | मन्तव्य | सूची | सभाध्यक्ष |

## आसन ग्रहण

**विनिता शिवाकोटी, सञ्चालक**

१. अध्यक्षता, हेमन्त चौलागाईं संयोजक

२. प्रमुख अतिथिः भूमि व्यवस्था, सहकारी तथा गरिबी निवारण मन्त्री, मा. पद्मा अर्यालज्यू

**अतिथि**

३. प्रतिनिधि सभा सदस्य, मा. पार्वत गुरूङज्यू,

४. प्रतिनिधि सभा सदस्य, मा.शान्ति पाख्रिनज्यू,

५. पूर्व मन्त्री, मा. आनन्द प्रसाद पोखरेलज्यू,
६. पूर्व राज्यमन्त्री, मा. देवी खड्काज्यू,
७. प्रदेश सभा सदस्य प्रदेश ३, मा. पशुपति चौलागाईंज्यू,
८. प्रदेश सभा सदस्य प्रदेश ३, मा. विशाल खड्काज्यू,
९. प्रदेश सभा सदस्य प्रदेश ३, मा. रचना खड्काज्यू,
१०. सरस्वति बस्नेत, प्रदेश सभा सदस्य प्रदेश ३
११. आङदेण्डी शेर्पा, प्रदेश सभा सदस्य प्रदेश ३
१२. हिमाली गोले, प्रदेश सभा सदस्य प्रदेश ३
१३. डबल पाण्डे, जिसस प्रमुख
१४. भरत केसी, भीनपा मेयर, अध्यक्ष नगरपालिका महासंघ प्रदेश ३
१५. टंक जिरेल, जिरी नपा मेयर
१६. इश्वरचन्द्र पोखरेल, अध्यक्ष नेकपा दोलखा, अध्यक्ष गाउँपालिका महासघ प्रदेश ३ एवं तामाकोसी गाउँपालिका
१७. रूद्र खड्का, सभापति नेपाली काग्रेस दोलखा एवं पूर्व जिविस सभापति २०४९
१८. मिनराज कँडेल, बरिष्ठ उपाध्यक्ष राष्ट्रिय सहकारी महासंघ
१९. डी.बी. बस्नेत, अध्यक्ष, नेपाल बचत तथा ऋण केन्द्रीय सहकारी संघ लि (नेफ्स्कून)
२०. डा. टोकराज पाण्डे, रजिष्ट्रार, सहकारी विभाग
२१. नर बहादुर श्रेष्ठ, अध्यक्ष मेलुङ गाउँपालिका दोलखा
२२. भरत दुलाल, अध्यक्ष शैलुङ्ग गाउँपालिका दोलखा
२३. बिनकुमार थामी, अध्यक्ष कालिञ्चोक गाउँपालिका दोलखा
२४. युधिष्ठिर खड्का, अध्यक्ष बिगु गाउँपालिका दोलखा
२५. स्वयम बहादुर खड्का, अध्यक्ष गौरीशंकर गाउँपालिका दोलखा
२६. कमला बस्नेत, उपमेयर भीमेश्वर नगरपालिका दोलखा
२७. कृष्णमाया बुढाथोकी, उपमेयर जिरी नगरपालिका दोलखा
२८. खगेन्द्र प्रसाद रिजाल, प्रमुख जिल्ला अधिकारी दोलखा
२९. लालकुमार केसी, पूर्व जिविस सभापति, दोलखा
३०. शिव भण्डारी, पूर्व जिविस उपसभापति, दोलखा
३१. प्रकाश जोशी, महानिर्देशक नापी विभाग
३२. कलिका पाठक, उपाध्यक्ष कालीञ्चोक गाउँपालिका दोलखा तथा गाउँपालिका केन्द्रीय महासंघ सदस्य
३३. उर्मिला थामी, उपाध्यक्ष गौरीशंकर गाउँपालिका दोलखा
३४. रविचन्द्र आचार्य, उपाध्यक्ष बैतेश्वर गाउँपालिका दोलखा
३५. उर्मिला खड्का, उपाध्यक्ष तामाकोसी गाउँपालिका दोलखा
३६. सञ्जिव ओली, उपाध्यक्ष बिगु गाउँपालिका दोलखा
३७. कल्पना भण्डारी, उपाध्यक्ष मेलुङ गाउँपालिका दोलखा
३८. लालमाया योञ्जन, उपाध्यक्ष शैलुङ्ग गाउँपालिका दोलखा

३९. मान बहादुर खड्का, प्रमुख प्रशासकीय अधिकृत भीमेश्वर नगरपालिका दोलखा

४०. शिव रिजाल, प्रमुख प्रशासकिय अधिकृत जिरी नगरपालिका दोलखा

४१. चन्द्र ढकाल, महासचिव नेफ्स्कून

## कार्यपत्रहरू प्रस्तोता तथा सहजकर्ता

४२. प्राध्यापक डाक्टर केशवराज खड्का (पूर्व विभागीय प्रमुख, अर्थशास्त्र विभाग, त्रि.वि.व, पाटन क्याम्पस), सहकारी विकासमा जनशक्ति व्यवस्थापन

४३. सरिता भट्टराई, (सञ्चालक, राष्ट्रिय सहकारी बैंक लि.), दीगो विकास लक्ष्यमा सहकारी क्षेत्रको कार्ययोजना

४४. सुदर्शन ढकाल (पूर्व रजिष्टार, सहकारी विभाग), संघीय संरचनामा सहकारी एन तथा विकास नीतिहरू

४५. नवराज सिखडा (लघुवित्त तथा सहकारी विज्ञ), सहकारी उद्मशीलताका लागि सहकारी नेतृत्व

४६. प्रेमप्रसाद अधिकारी (स्थानीय तह योजना परामर्शदाता), सहकारी व्यवस्थापन र उद्मशीलता विकासमा स्थानीय तहको भूमिका

४७. सुमन कुमार उप्रेती (कार्यकारी निर्देशक, ग्रामिण उद्यम विकास केन्द्र), दोलखामा सहकारी उद्यमशीलताको अवस्था

४८. बिर्ख छेत्री, सम्मेलन अवधारणाका मूख्य सहयोगी तथा कार्यपत्र सहजकर्ता

४९. गणपति, विदुर अधिकारी रणभीम गण चरिकोट, दोलखा

५०. प्रहरी नायव उपरिक्षक, वासुदेव पाठक जिल्ला प्रहरी कार्यालय, दोलखा

५१. सशस्त्र प्रहरी नायव उपरिक्षक, किरण कुमार कठायत सशस्त्र प्रहरी बल चरिकोट, दोलखा

५२. गोविन्द अधिकारी प्रमुख, मालपोत अधिकृत मालपोत कार्यालय, दोलखा

५३. नारायण कोइराला, प्रमुख घरेलु तथा साना उद्योग विकास समिति दोलखा

५४. राजु पुरी, नापी अधिकृत नापी कार्यालय दोलखा

५५. प्रमुख प्रशासकीय अधिकृत, मेलुङ, शैलुङ्ग, बैतेश्वर, तामाकोसी, कालिञ्चोक, बिगु र गौरीशंकर

५६. उद्धव सापकोटा, सञ्चालक सदस्य नेफ्स्कून

५७. वरिष्ठ सहकारीकर्मी तथा दोलखाका सहकारी अभियन्ताहरूः रामदाश श्रेष्ठ, शिवजी राउत, सुदर्शन कार्की,

५८. प्रमुख/प्रतिनिधि, दोलखा उद्योग वाणिज्य संघ

५९. जीवन लामा, अध्यक्ष पत्रकार महासंघ दोलखा

६०. लक्ष्मण खड्का, कोषाध्यक्ष सामुदायिक रेडियो प्रसारक संघ, नेपाल

६१. खिलानाथ दाहाल, अध्यक्ष नेपाल सहकारी पत्रकार समाज

६२. यादव हुमागाई, संस्थापक अध्यक्ष नेपाल सहकारी पत्रकार समाज पत्रकार एवं कारोबार दैनिक

६३. मुना कुवर, नयाँ पत्रिका दैनिक

६४. तुल्सी सुवेदी, सचिव नेपाल सहकारी पत्रकार समाज, अन्नपूर्ण पोष्ट

६५. सोवित थपलिया, क्लिकमाण्डु अनलाइन

६६. दिपेन्द्र खड्का, नेपाल समाचारपत्र

६७. काजी श्रेष्ठ, ............

६८. दोलखा जिल्लामा कार्यरत सञ्चारकर्मी पत्रकार

६९. अध्यक्ष, गैसस महासंघ दोलखा

७०. अध्यक्ष, सामुदायिक वन उपभोक्ता महासंघ

७१. अध्यक्ष, घरेलु तथा साना उद्योग महासंघ, दोलखा

७२. बालकुमारी श्रेष्ठ, अध्यक्ष सिन्धुली जिल्ला बचत तथा ऋण सहकारी सघ

७३. जगनाथ दाहाल, अध्यक्ष रामेछाप जिल्ला बचत तथा ऋण सहकारी सघ

७४. जिल्लास्थित सरकारी तथा गैरसरकारी संघसंस्थाका प्रमुख तथा प्रतिनिधि

७५. सम्मेलनलाई सहयोग गर्नुहुने गैससहरूः हुराडेक, ग्रामिण विकास टुकी संघ, ग्रामिण उद्मम विकास केन्द्र, सीडीएफ, सिपार्ड, रइसका प्रमुख तथा प्रतिनिधहरू

७६. गाउँपालिका तथा नगरपालिकाबाट सहकारीको प्रतिनिधित्व गर्दै उपस्थित प्रतिनिधिहरूलाई सहज रुपमा आसनग्रहणका लागि अनुरोध

**वक्ता क्रम**

१. खगेन्द्र राज रिजाल, प्रमुख जिल्ला अधिकारी

२. रूद्र बहादुर खड्का, नेपाली कांग्रेस दोलखा सभापति

३. इश्वरचन्द्र पोखरेल, अध्यक्ष नेकपा दोलखा, अधयक्ष गाउँपालिका महासघ प्रदेश ३ एवं तामाकोसी गाउँपालिका

४. भरत के.सी, मेयर भीमेश्वर न.पा.

५. डा. टोकराज पाण्डे, रजिष्ट्रार, सहकारी विभाग

६. डी.बी. बस्नेत, अध्यक्ष, नेपाल बचत तथा ऋण केन्द्रीय सहकारी संघ लि (नेफ्स्कून)

७. मिनराज कँडेल, बरिष्ठ उपाध्यक्ष राष्ट्रिय सहकारी महासंघ

८. माननीय पशुपति चौलागाईं, प्रदेश सभा सदस्य प्रदेश नं ३

९. देवि खड्का, नेकपा नेता एवं पूर्व भौतिक योजना तथा निर्माण राज्यमन्त्री

१०. माननीय पार्वत गुरूङ्, सदस्य प्रतिनिधि सभा

११. माननीय मन्त्री पद्मा अर्याल, भूमि व्यवस्था, सहकारी तथा गरिबि निवारण मन्त्रालय

*अतिथिहरूलाई सम्झनाको चिनो वितरण*

*सभाध्यक्षबाट उद्घाटन सत्र विसर्जन मन्तव्य*

## ख. कार्यपत्र सत्र

| क्र.सं. | कार्यपत्रहरू | लेखक तथा प्रस्तोता | सेसन अध्यक्षता |
|---|---|---|---|
| १ | सहकारी व्यवस्थापन र उद्यमशीलता विकासमा स्थानीय सरकारको भूमिका | - प्रेमप्रसाद अधिकारी (स्थानीय तह योजनाकार)<br>- डबल पाण्डे (प्रमुख, जिसस, दोलखा) | माननीय पशुपित चौलागाईं, प्रदेशसभा सदस्य, प्रदेश न.३ |
| २ | दीगो विकास लक्ष्य प्राप्तिका लागि सहकारी क्षेत्रको कार्ययोजनाः | सरिता भट्टराई, बोर्ड सदस्य, राष्ट्रिय सहकारी बैंक लि. काठमाडौ | केशव बडाल, अध्यक्ष राष्ट्रिय सहकारी महासंघ, नेपाल |
| ३ | सहकारी विकासमा जनशक्ति व्यवस्थापन | प्रा.डा. केशव खडका, पूर्व विभागीय प्रमुख, अर्थशास्त्र विभाग, पाटन क्याम्पस | के.बि उप्रेती अध्यक्ष राष्ट्रिय सहकारी बैंक लि. काठमाडौं |
| ४ | संघीय संरचनामा सहकारी संगठनः कानूनी व्यवस्था र विकास नीतिहरू | सुदर्शन प्रसाद ढकाल, पूर्व रजिष्ट्रार (सह सचिव), सहकारी विभाग | डा. टोकराज पाण्डे, रजिष्टार, सहकारी विभाग |
| ५ | दोलखामा सहकारी उद्यमशीलताः वर्तमान अवस्था र भविष्यको बाटो | सुमन उप्रेती, कार्यकारी निर्देशक, ग्रामिण उद्यम विकास केन्द्र, दोलखा | डी.बी. बस्नेत, अध्यक्ष नेफ्स्कून |
| ६ | आर्थिक रूपान्तरण र उद्यमशीलताका लागि सहकारी नेतृत्व | नवराज सिम्खडा<br>लघुवित्त तथा सहकारी विज्ञ | |

**ग. समापन सत्र**

## कार्यक्रम समापन समारोहको सञ्चालन तालिका

**आसन ग्रहण**

**दिपक बस्नेत, सञ्चालक**

१. अध्यक्षता, हेमन्त चौलागाईं सयोजक

२. प्रमुख अतिथि, केशव बडाल, अध्यक्ष राष्ट्रिय सहकारी महासंघ

३. अतिथि, पशुपति चौलागाईं, प्रदेश सभा सदस्य प्रदेश ३

४. अतिथि, ओमदेवी मल्ल, उपाध्यक्ष राष्ट्रिय सहकारी महासघ र Board Member ICA Global

५. अतिथि, के.वि. उप्रेती, अध्यक्ष राष्ट्रिय सहकारी बैंक लि.

६. अतिथि, परितोष पौडेल, बरिष्ठ उपाध्यक्ष नेफ्स्कून

७. अतिथि, लालकुमार केसी, पूर्व जिविस सभापति

८. अतिथि, टेक प्रसाद चौलागाईं, अध्यक्ष जिल्ला सहकारी संघ लि. काठमाडौं

९. अतिथि, जे एन दहाल, अध्यक्ष जिल्ला सहकारी संघ लि. रामेछाप

१०. बिर्ख क्षत्री सम्मेलन अवधारणाका मूख्य सहयोगी तथा कार्यपत्र सहजकर्ता

११. कार्यपत्रहरू प्रस्तोताहरू

- प्राध्यापक डाक्टर केशवराज खड्का
- सुदर्शन ढकाल
- प्रेमप्रसाद अधिकारी
- सरिता भट्टराई
- नवराज सिंखडा
- सुमन कुमार उप्रेती

**वक्ता क्रम**

१. लालकुमार के.सी., कृषि विज्ञ प्रदेश नं. ३ र पूर्व जिविस सभापति दोलखा

२. परितोष पौडेल, बरिष्ठ उपाध्यक्ष नेफ्स्कून

३. के.वि. उप्रेती, अध्यक्ष राष्ट्रिय सहकारी बैंक लि.

४. पुरस्कार राष्ट्रिय सहकारी बैंक लि. बाट प्रदान गर्ने :

- शाखा स्तर, मिलिजुली साकोस
- नियमित कारोबार, अर्थभूमि साकोस

५. ओमदेवी मल्ल, उपाध्यक्ष राष्ट्रिय सहकारी महासंघ र Board Member ICA Global

६. दोलखा घोषणापत्र सार्वजनिक बिर्ख क्षत्री

७. प्रमुख अतिथि, केशव बडाल अध्यक्ष राष्ट्रिय सहकारी महासघ

***सभाध्यक्षबाट उद्घाटन सत्र विसर्जन मन्तव्य***

## सम्मेलन घोषणापत्र

# सहकारी उद्यमशीलता मार्फत आर्थिक समृद्धिका लागि दोलखा सहकारी घोषणापत्र

**२८ बैशाख २०७६, चरिकोट दोलखा**

**दोलखामा मूलतः** विगत २७ वर्षदेखि विकास हुँदै आएको सहकारी अभियानले संगठन र पूँजी निर्माणमा सशक्त भई आर्थिक, सामाजिक विकासमा उत्साहजनक उपलब्धीरू हासिल भएका छन् । यो अवधिमा प्राप्त भएका उपलब्धीहरू निरन्तर विकासको गतिमा भए तापनि सामर्थ्य र अवसरहरूको तुलनामा गरिबी निवारणको क्षेत्रमा अपेक्षाकृत नतीजा हासिल हुन सकिरहेको छैन । यो अवस्थालाई आत्मसात गर्दै अबका दिनहरूमा सहकारी उद्यमशीलताको माध्यमबाट आर्थिक समृद्धि हासिल गर्न सहकारी पुनर्जागरणका साथ अघि बढ्ने उद्देश्यसहित मिति २७-२८ बैशाख, २०७६ मा दोलखा जिल्लाको भीमेश्वर नगरपालिकाको केन्द्र चरिकोट बजारमा आयोजित दोलखा बृहत सम्मेलनमा आयोजक संस्था जिल्ला सहकारी संघ लि. दोलखा, बचत तथा ऋण सहकारी संघ लि. दोलखा, जिल्लाका १०० भन्दा बढी सहकारी संस्था, ९ वटा स्थानीय पालिकासहित जिल्ला समन्वय समिति, राजनीतिक दल, संघीय संसदका माननीय सदस्यहरू, प्रदेश सभाका सदस्यहरू, जिल्लामा कार्यरत गैरसरकारी संस्थाहरू, स्रोत व्यवस्थापन सम्वद्ध सामुदायिक संस्थाहरू, उद्योग वाणिज्य संघ लगायतका निजी क्षेत्रहरू, केन्द्रीय बचत तथा ऋण सहकारी संघ, राष्ट्रिय सहकारी महासंघ, राष्ट्रिय सहकारी बैंक, सहकारी विभाग, विभिन्न मिडियाका सञ्चारकर्मीहरूसहित भूमि व्यवस्था, सहकारी तथा गरिबी निवारण मन्त्री माननीय पद्मा अर्यालज्यूको प्रमुख आतिथ्यमा ३५० भन्दा बढी संस्थागत प्रमुख तथा प्रतिनिधिहरूको सहभागितामा सम्पन्न दोलखा बृहत सहकारी सम्मेलनबाट सहकारी उद्यमशीलता मार्फत आर्थिक समृद्धिका लागि दोलखा सहकारी घोषणापत्र, २८ बैशाख, २०७६ जारी गर्दछौं ।

१. आर्थिक समृद्धिका प्रयत्नहरूलाई **'समृद्ध नेपाल, सुखी नेपाली'** को राष्ट्रिय लक्ष्य हासिल गर्न केन्द्रित गर्नेछौं । यसका लागि सहकारी क्षेत्रका अन्तर्राष्ट्रिय सिद्धान्त र मूल्य मान्यता, दीगो विकास लक्ष्य, राष्ट्रिय दीर्घकालीन सोच, सहकारी ऐन, नीति, नियमावली तथा मापदण्डहरू, स्थानीय आवश्यकता, अवसर र सामर्थ्यको आधारमा रहेर काम गर्न सोही अनुसारको संस्थागत संरचना, दक्ष जनशक्ति र योजना प्रणाली विकासका लागि तत्कालै योजना बनाई अघि बढ्नेछौं ।

२. संस्थाको संगठन, प्रशासन तथा आर्थिक प्रणालीलाई सुशासन, पारदर्शी, प्रतिस्पर्धी र प्रभावकारी बनाउनका लागि सहकारीको आधारभूत मापदण्डलाई एकरूपता र प्रविधियुक्त बनाउने छौं ।

३. उद्यम विकासको माध्यमबाट आर्थिक रूपान्तरणमा योगदान गर्ने ठोस् कदम अघि चाल्न आगामी आर्थिक वर्षको आरम्भमै सहकारी र स्थानीय तहबिचको संयुक्त योजना तथा रणनीति तयार गर्नेछौं ।

४. सहकारी उद्यमशीलता विकास र आर्थिक रूपान्तरणका योजनाहरू समयसापेक्ष, सहज, प्रभावकारी र वैज्ञानिक रूपमा सञ्चालन गर्न विद्यमान ऐन, नियम, नीति, निर्देशिका, मापदण्ड, प्रशासन संयन्त्र, सहकारी व्यवसाय विविधकरणको सहजता, बजेट विनीयोजन तथा अन्तरसरकारी समन्वयलाई सो अनुकुल बनाइदिन सबै तहका सरकारहरूसँग जोडदार माग गर्दछौं ।

५. जिल्लामा रहेका सबै सहकारीमा आर्थिक रूपान्तरणमैत्री नीति, विधि, प्रविधि र रणनीतिको प्रयोग तथा पूँजी निर्माणका लागि सम्बन्धित सबै पक्षलाई अभिप्रेरित र आपसी सहकार्य गर्नेछौं ।

६. सहकारी संस्थाहरूको वार्षिक योजना तथा कार्यक्रममा दीगो विकास लक्ष्यको कार्यढाँचा विकास गरी अघि बढ्नेछौं ।

७. जिल्लामा रहेका सहकारीमा कर्मचारी व्यवस्थापन, सेवा सुविधा, सार्वजनिक विदा लगायतका निर्णयहरूमा एकरूपता कायम गर्दै अघि बढ्नेछौं ।

८. सहकारी मार्फत गरिने उद्यमशीलता प्रवर्द्धनका लागि तिनै तहका सरकारसँग समन्वय कायम गर्न पहल गर्नेछौं । यसका लागि जिल्ला समन्वय समितिको संयोजनमा सांसद, छाता संगठनका प्रतिनिधि र सहकारी संस्थाका प्रतिनिधिसमेतको सहभागिता र परामर्शमा अघि बढ्न पहल गर्नेछौं ।

